आज शुकदेवजी व्यासका आश्रममा दौड़िँदै आउनुभएको छ। शुकदेवजीले व्यासजीलाई साष्टांग दण्डवत् प्रणाम गर्नुभयो। व्यासजीले शुकदेवजीलाई अङ्गमा लगाउनुभयो र निधारमा म्वाइँ खानुभयो। शुकदेवजीले भन्नुभयो, 'पिताजी यी श्लोक मलाई पढ़ाउनुहोस्।' शुकदेवजी कथा सुन्नुहुन्छ र कृतार्थ हुनुहुन्छ। व्यासजीले शुकदेवजीलाई भागवतको अध्ययन गराउनुभयो र यस प्रकार व्यासजीको चिन्ता दूर भयो। त्यसपछि भागवत पुराणशास्त्रको प्रचार शुकदेवजीबाट भयो। यस ग्रन्थको सच्चा अधिकारी आत्माराम हुन्, कारण के भने श्रीकृष्ण सबैका आत्मारूप हुनुहुन्छ। विषयारामलाई यो ग्रन्थ सुन्न इच्छै हुँदैन।

सूतजी भन्नु हुन्छ, आश्चर्य नगर। भगवान्को गुण अति मधुर छ जो सबैलाई उहाँ आफूतिर तान्नुहुन्छ। फेरि उहाँबाट शुकदेवजीको मन आकर्षित भयो, यसमा के नयाँ कुरो भो र?

आत्मारामाश्च मुनयो निग्रन्था अप्युरुक्रमे।
कुर्वन्त्ययहैतुकीं भक्तिमित्थम्भूतगुणो हरिः॥

जो ज्ञानी छ, जसको अविद्याको गाँठो फुस्किसकेको छ, र जो सदा आत्मामानै रमण गर्दछन्, ती पनि भगवान्को हेतु रहित ( निष्काम ) भक्ति गर्छन् किनभने भगवान्को गुण यति मधुर हुन्छ जो सबैलाई आफूतर्फ तान्दछ। भगवान्को कथामृतको पान गर्दा भोक र प्यास पनि बिर्सिन्छ। यसैले त दशम स्कन्धको पहिलो अध्यायमा राजा परीक्षित् पनि भन्नुहुन्छ 'पहिले मलाई भोक र प्यास लाग्थ्यो, तर भगवान्को कथामृतको पान-गर्दा अब मेरो भोक अदृश्य भइसकेको छ।'

नैवातिदु:सहा क्षुन्मां त्यक्तोदमपि वाधते।
पिबतं त्वन्मुखाम्भोज्च्युतं हरिकथामृतम्॥

मैले पानी पनि पिउन छोड़ें। तैपनि म तपाईंको मुखबाट निस्किएको श्रीहरिकथारूपी अमृतको पान गरिरहेछु। त्यसैले—यो दुःसह भोकले पनि मलाई दुःख दिएको छैन। भोजन-भजनको साधन मात्र हो यसैले भोकले दुःख नदिएसम्म जति भोजन गर्नुपर्छ। सूतजी वर्णन गर्नुहुन्छ र यसपछि यो कथा शुकदेवजीले राजा परीक्षित्लाई सुनाउनुभयो। मेरा गुरुदेव पनि उहाँ स्वयं हुनुहुन्थ्यो। उहाँले योगकथा मलाई सुनाउनुभयो। अब योगकथा म तिमीलाई सुनाउँछु।

सुन, अब म तिमीलाई राजा परीक्षित्को जन्म, कर्म र मोक्षको कथा तथा पाण्डवहरूको स्वर्गारोहणको कथा भन्छु। पाँच प्रकारको शुद्धि बताउनलाई पंचाध्यायिनी कथा शुरू गर्छु। पितृशुद्धि, मातृशुद्धि, वंशशुद्धि, अन्नशुद्धि र आत्मशुद्धि। जसलाई यी पाँच शुद्धि हुन्छ उसैमा प्रभुदर्शनको आतुरी हुन्छ। आतुरीविना ईश्वरदर्शन हुँदैन। राजा परीक्षित्मा यी पाँचै शुद्धिहरू मौजूद थिए। यो कुरा देखाउनलाई अघिल्लो कथा भनिँदैछ। ७ देखि ११ अध्यायमा 'बीज'

शुद्धिको कथा छ। बाह्रौं अध्यायमा परीक्षित्को जन्मको कथा छ। परीक्षित्‌ले भन्नुहोला यो कथा सुन्दा-सुन्दा मलाई तृप्ति भइरहेको छैन। उत्तम श्रोता त्यही हो जो भजनमा भोक र प्यास बिर्सिदिन्छ।

प्रभु भजनमा आनन्द आएमा भोकप्यास बिर्सिइन्छ। आत्माकार वृत्ति भएपछि देहधर्मको भान हुँदैन। कौरव र पाण्डवहरूको युद्ध समाप्त भएको छ। अश्वत्थामाले विचार गरे म पनि पाण्डवहरूलाई कपटद्वारा मार्नेछु। पाण्डवहरू जब सुत्लान् तब उनलाई मार्नेछु। जसलाई भगवान्‌ले राख्नुहुन्छ त्यसलाई कसले मार्न सक्छ ? प्रभुले सुतेका पाण्डवहरूलाई ब्यूँझाइदिनुभयो र भन्नुभयो 'मेरा साथ गङ्गा किनारमा हिँड़।' पाण्डवहरूलाई श्रीकृष्णमा कत्रो दृढ़विश्वास। द्वारकानाथले जे भन्थे त्यही गर्थे। ती कुनै प्रश्न पनि गर्दैनथे। पाण्डवहरूलाई प्रभुमा पूर्णविश्वास थियो। पाण्डव स्वतंत्र थिएनन्, प्रभुका अधीन थिए। आजकाल स्वतंत्रताको भिन्नै अर्थ गर्छन्। जसको जीवनमा संयम छ, जो परमात्माको अधीन छन् तिनीहरूनै स्वतन्त्र छन्। यस्ता पाण्डवहरूको कुलमा परीक्षित्को जन्म भएको छ। पाण्डवहरूलाई लिएर श्रीकृष्ण गङ्गाकिनारमा आउनुहुन्छ। प्रभुले भनेर पनि द्रौपदीका पुत्र आएनन्। बालकबुद्धि न हो ? उनीहरूले भने 'तपाईंलाई निद्रा आउँदैन, हामीलाई तर निद्रा आउँछ। तपाईंलाई जाने मन छ भने जानुहोस्।' परिणाम यो भयो सुतेका अवस्थामा अश्वत्थामाले द्रौपदीका पाँचै छोराहरूलाई मारिदिए र दुःखमा बुद्धि आउँछ।

प्रभुसँग एकाध दुःख माग जसबाट बुद्धि ठेगानमा रहन सकोस्। जो सबै किसिमबाट सुखी हुन्छ त्यो दीन बनेर प्रभुका सामुन्ने निहुँरदैन। आज कृष्ण निठुरी बन्नुभएको छ। द्रौपदीको आँसुलाई हेर्दा पनि हेर्नुहुन्न। आज द्रौपदी रोइरहेकी छन् तर द्वारकानाथलाई दया आएको छैन। नत्र द्रौपदीको क्रन्दन श्रीकृष्णबाट सहन हुँदैन थियो। पहिले जब-जब आवश्यकता पर्थ्यो त्यसवेला द्रौपदीको आँसु पुछ्न दौड़िँदै आइहाल्नु हुन्थ्यो। यो जीव सबै प्रकारबाट सुखी हुनु योग्य होइन। एउटा दुःख मानिसको हृदयमा हुनैपर्छ जुन दुःखबाट बिश्वास होस् भगवान्‌का सिवाय मेरो अरू कोही छैन।

हरेक महापुरुषमाथि दुःख आइपरेको छ। परमात्माले सोच्नुभयो पाण्डवहरूले पृथ्वीको राज्य पाएका छन्, सम्पत्ति छ र सम्पत्ति पनि प्रशस्त छ। सबै प्रकारबाट पाण्डव सुखी होऊन् यो ठीक भएन। पाण्डवहरूलाई यस अतिसुखमा शायद अभिमान हुन गयो भने तिनको पतन हुनेछ। यस्तो असल कारणले गर्दा भगवान् कहिले-कहिले निष्ठुरी हुनुहुन्छ। सुखमा पाण्डवले भगवान्‌लाई नबिर्सिऊन् भनेर उहाँले यो दुःख दिनुभयो। भगवान् दुःखमा गुप्तरीतिले मद्दत गर्नुहुन्छ। अश्वत्थामा र अर्जुनको युद्ध भइरहेछ। अर्जुनले अश्वत्थामालाई मार्ने प्रतिज्ञा गरिसकेका थिए। तर मार्ने साहस भइरहेको थिएन। गुरुपुत्र गुरुको स्वरूप हो। अश्वत्थामालाई बाँधेर घिस्याउँदै द्रौपदीका नजीक ल्याए। द्रौपदी आँगनमा बसेकी छन्, पुत्रशोकमा डुबेकी थिइन्। अश्वत्थामाको यो दशा देखेर द्रौपदी दौड़ेर आइन्। अश्वत्थामालाई वन्दना गरिन् र भनिन् 'मेरा आँगनमा ब्राह्मणको अपमान नगर।' आफ्ना पाँच बालकहरूको हत्या गर्नेलाई द्रौपदी नमस्कार गर्छिन्। यो कोही

साधारण वैरी होइन। पाँच बालकहरूलाई मार्ने मानिस आँगनमा आएको छ, तै पनि यो ब्राह्मण हो भनेर प्रणाम गर्छिन्। तपाईंको वैरी तपाईंको घर आँगनमा आएको छ भने के तपाईं जय श्रीकृष्ण भन्नुहोला?

भागवतको कथालाई सुनी-सुनीकन जीवनलाई सुधार। वैरको शान्ति निर्वैरबाट हुन्छ, प्रेमबाट हुन्छ, वन्दनाबाट हुन्छ। त्यही वैष्णव हो जो वैरको बदला प्रेमद्वारा दिन्छ। श्रीकृष्णको अर्थ यो हो मैले जे-जति देख्छु त्यो सब कृष्णमय हो। अश्वत्थामा सोच्दछन् साँच्चिकै द्रौपदीनै वन्दनीय रहिछन् म वन्दनीय रहेनछु। अश्वत्थामा भन्दछन्—'द्रौपदी, मानिसले जो तिम्रो प्रशंसा गर्छन् त्यो बहुतै कम छ। तिमीले वैरको बदला प्रेमद्वारा दिन्छ्यौ।' द्रौपदीका गुणहरूले आज व्यासजी तन्मय बन्नुभएको छ। द्रौपदीलाई लक्ष्य गरेर भन्नुहुन्छ, 'वामस्वभावा' कमलो स्वभाववाली, सुन्दर स्वभाववाली। जसको स्वभाव अति सुन्दर हुन्छ त्यही नै श्रीभगवान्‌को प्यारो हुन्छ। शरीर जसको सुन्दर हुन्छ त्यो भगवान्‌लाई सदा प्रिय लाग्दैन, तर जसको स्वभाव सुन्दर छ त्यो भगवान्‌लाई सर्वदा प्रिय लाग्छ। स्वभाव सुन्दर कहिले बन्दछ? अपकारको बदला पनि उपकार गर्छौं तब। द्रौपदीले एकदमसँग भनिन् 'उनलाई छोड़िदिनुस्, उनलाई नमार्नुस्! उनी गुरुपुत्र हुन्। जो विद्या गुरु द्रोणाचार्यले आफ्नो छोरालाई दिनुभएन त्यो तपाईंलाई दिएको छ। के तपाईंले त्यो सबै बिर्सिनु भएको छ? ब्राह्मण परमात्माका स्वरूप हुन्। गाई लुली, लङ्ङड़ी, बाँझी भए पनि गाईको सगुन मान्दछन्, भैंसीको सगुन कहिल्यै मान्दैनन्। गाई र ब्राह्मण माननीय हुन्।' द्रौपदी दयाकी स्वरूप हुन्। 'दयारूप' द्रौपदीका साथ जबसम्म हृदयले बिहा गर्दैन तबसम्म श्रीकृष्ण उसको सारथी बन्नुहुन्न। अर्जुन जीवात्मा गुड़ाकेश र श्रीकृष्ण हृषीकेश हुन्। यो जोड़ी यस शरीररूपी रथमा बसेको छ। इन्द्रियरूपी घोड़ाहरूको रथ प्रभुलाई सुम्पिदिएमा कल्याण होला। इन्द्रियहरूका स्वामी श्रीकृष्ण। श्रीकृष्ण हुन्—'हृषीकेश।' युधिष्ठिर यही धर्म हो, भीम यही बल हो, सहदेव-नकुल यही बुद्धि र ज्ञान हो। चार गुणवाला जीव यही अर्जुन हो। यी सबै गुण कहिले शोभायमान हुन्छन् भने जब द्रौपदी दया उनकी दुलही बन्दछिन्, जीव दया द्रौपदीका साथ विवाह गर्छ तब। द्रौपदी कहिले कसरी भेटिने? जब धर्मलाई ठूलो मान्लान् तब। परमात्मा सारथी पनि त्यसवेला बन्नुहुन्छ र उसैको हुनुहुन्छ जसले धर्मलाई ठूलो मान्दछ। आज तर मानिस धर्मलाई ठूलो मान्दैनन्। धनलाई ठूलो मान्दछन्, त्यसैकारण संयम र सदाचार जीवनबाट निस्किगएका छन्। मानव-जीवनमा धन मुख्य होइन, धर्म मुख्य हो। धन धर्मको मर्यादाभित्र नै बसेर प्राप्त गर्न सक्नुपर्छ। तपाईंलाई केही काम गर्नु छ भने पहिले धर्मलाई सोध्नोस् यो काम गर्नाले मलाई पाप लाग्दैन? तपाईंले अर्जुनजस्तो जीवन बिताएमा भगवान् तपाईंको सारथी बन्नुहुनेछ। द्रौपदीले अश्वत्थामालाई बचाइन्। अर्जुनलाई भनिन् 'उनलाई मारिदिए पनि मेरा पाँच छोराहरूमध्ये एउटा पनि फर्केर आउने होइनन्, तर अश्वत्थामालाई मार्नाले उनकी आमा गौतमीलाई अति दुःख हुनेछ। म अहिले सधवा छु। अश्वत्थामाकी आमा विधवा छन्। उनी पतिको मृत्युपछि छोराको आश्वासनमा बाँचेकी

छन्। उनी जब रोलिन् तब म हेर्न सक्ने छैन। कसैको आशीर्वाद नपाऊँ केही छैन तर कसैलाई लामो सास भने नलिनु परोस्। कसैले पीर पार्ने जस्तो कुनै कर्म गर्नु हुन्न।'

जगत्मा अरूलाई रुवाउनु हुन्न, आफू रुनु, रुनाले पाप डढ़ेर जान्छ, रुनाले एक दिन परमात्माले सुन्नुहुन्छ, कृपा गर्नुहुन्छ। रुनाले सुखी हुन सकिन्छ। भीम अर्जुनलाई भन्नुहुन्छ, 'यस्ता बालहत्यारामाथि पनि दया हुन्छ र के ? तिम्रो प्रतिज्ञा कहाँ गयो ?' द्रौपदी बारंबार भन्छिन् 'न मार!' अब अर्जुन सोचमा परे। श्रीकृष्णले आज्ञा गर्नुभयो 'जो द्रौपदी भनिराखेकी छन् सो बिलकुल ठीक हो।' द्रौपदीको हृदयमा दया छ। भीमसेनजी भन्नुहुन्छ—मनुस्मृतिमा भनेको छ आततायीलाई मार्नमा पाप छैन। धर्म प्राणभन्दा पनि आततायीलाई - अश्वत्थामालाई मार्नमा पाप छैन। श्रीकृष्ण पनि मनुस्मृतिलाई आदर गरेर उत्तर दिनुहुन्छ—'ब्राह्मणको अपमान त्यो पनि उसको मृत्युको बराबर छ। त्यसकारण अश्वत्थामा मार्ने आवश्यकता छैन। उसलाई अपमान गरेर निकालिदेऊ।' अश्वत्थामाको टाउको त काटेनन् तर त्यसको टाउकोमा भएको जन्मसिद्धमणि निकालिलिए। अश्वत्थामा तेजहीन भए। अब भीमसेनले सोचे—अब उसलाई मारेर पो के बाँकी रहने भयो र ? अपमान त मरणभन्दा पनि विशेष हो। अपमान प्रतिक्षण मारेजस्तै भयो। अश्वत्थामाले सोचे यो भन्दा त मलाई मारिदिएको भए पनि असल हुन्थ्यो।

शुकदेवजी सावधान गर्नुहुन्छ, 'हे राजन् ! अश्वत्थामाले सोचे पाण्डवहरूले मेरो अपमान गरेका छन्। म यसको बदला लिने छु। आफ्नो पराक्रम देखाउने छु। उत्तराको पेटमा गर्भ छ र त्यो पाण्डवहरूको उत्तराधिकारी हो। त्यसको नाश भएपछि पाण्डववंशको नाश हुनेछ। यो सोचेर उनले त्यो गर्भमाथि ब्रह्मास्त्र छोड़े। उत्तरा व्याकुल भइन्। हरिस्मरण, हरिआश्रय लिन्छन् भने भगवान् बाटो देखाइदिनुहुन्छ। ईश्वर स्मरण बारंबार गरियो भने भाव शुद्ध हुन्छ। ब्रह्मास्त्रले उत्तराको शरीरलाई पोल्न थाल्यो। उत्तरा दौड़िएर श्रीकृष्णका नजीक आउँछिन्। श्रीकृष्णले उत्तराको गर्भमा गएर परीक्षित्को रक्षा गर्नुहुन्छ। जीव मात्र परीक्षित् हो। सबै गर्भलाई कसले रक्षा गर्न सक्छ ? जीव मात्रको रक्षण गर्भमा ईश्वरले गर्दछ। बाहिर आएपछि पनि जीवमात्रको रक्षा भगवान् गर्नुहुन्छ। जीवमात्र परीक्षित जस्ता हुन्। भगवान् उत्तराको गर्भवाला परीक्षित्लाई रक्षा गर्नुहुन्छ। त्यतिमात्र होइन उहाँले जीवमात्रको रक्षा गर्नुहुन्छ। गर्भमा तर जीवात्मा हात जोड़ेर भगवान्लाई सतत् नमस्कार गर्छ र बाहिर आएपछि दुवै हात फुस्किएपछि उसको नमस्कार पनि छुट्दछ। प्रभुलाई उसले बिर्सन्छ। गर्भावस्थामा जीवको रक्षा परमात्मा गर्नुहुन्छ। बाल्यावस्थामा पनि जीवनको रक्षा परमात्माले मात्र गर्नुहुन्छ। जीवले युवावस्थामा आएपछि मानव होश हराउँछ र अकड़िएर हिँड्छ र भन्दछ 'म धर्म मान्दिनँ, ईश्वरलाई मान्दिनँ।'

द्रौपदीले उत्तरालाई शिक्षा दिएकी थिइन् 'जीवनमा दुःख आइपरेका वेलामा भगवान्को चरणको शरण पर्नू। दुःखका वेलामा श्रीकृष्णका शरणमा जानू। भगवान् दयामय हुनुहुन्छ। उहाँले तिम्रो अवश्य सहायता गर्नुहुनेछ।'

आफ्नो दुःखको कथा द्वारिकानाथका सिवाय अरू कसैसँग केही नभन्नू। उत्तराले देखेकी थिइन् आफ्नी सासूले सधैं द्वारिकानाथलाई रिझाउनुहुन्थ्यो। बालक छिट्टै अनुकरण गर्छ। उसका सामुन्ने कहिल्यै पाप नगर। उत्तरा रक्षाका निमित्त पाण्डवहरूकहाँ होइन तर परमात्माका छेउ गइन्।

आमाका पेटभित्र नै परीक्षित्‌लाई परमात्माको दर्शन भएको थियो, अतः उनी उत्तम श्रोता हुन्।

भगवान् कसैको गर्भभित्र जानुहुन्न। परमात्माको लीला अप्राकृतिक छ।

देवकीको पेटमा प्रभु जानुभएको थिएन। देवकीलाई उहाँ पेटभित्र जानुभएको थियो भन्ने भान ( भ्रान्ति ) पारिदिएको थियो। तर आज आवश्यकता पर्‍यो। आज भक्तको रक्षा गर्नुपर्‍यो। त्यसकारण परमात्माले गर्भमा गएर रक्षा गर्नुभयो।

परम आश्चर्य भयो।

श्रीकृष्णाले सुदर्शनचक्रमा ब्रह्मास्त्रको निवारण गर्नुभयो। परीक्षित्‌को रक्षा गरिसकेपछि उहाँ द्वारिका जान तयार हुनुभयो।

कुन्ती मर्यादा-भक्ति हो, साधन भक्ति हो।

यशोदा पुष्टिभक्ति हो। यशोदाका सारा व्यवहार भक्तिरूप थिए। प्रेमलक्षण भक्तिमा व्यवहार र भक्तिमा भेद रहँदैन। वैष्णवका सारा क्रियाहरू भक्ति बन्न जान्छन्।

प्रथम मर्यादा भक्ति आउँछ। त्यसपछि पुष्टिभक्ति। मर्यादा भक्ति साधन हो त्यसकारण आरम्भमा आउँछ। पुष्टिभक्ति साध्य छ, त्यसकारण त्यो अन्त्यमा आउँछ।

भागवत नवम् स्कन्धसम्म साधन-भक्तिको वर्णन छ। दशम् स्कन्धमा साध्य-भक्तिको वर्णन छ। साध्य-भक्तिले प्रभुलाई बाँध्दछ। पुष्टि-भक्ति प्रभुलाई बाँध्ने छ। त्यसको कथा भागवतको अन्त्यमा आउँछ। प्रत्येक व्यवहारलाई भक्तिरूप बनाए त्यो पुष्टि-भक्ति हो।

भक्तिमार्गमा भगवद्‌वियोग असह्य हुन्छ। भक्तिमा भगवान्‌को विरह सहन सकिन्न। वैष्णव त्यो हो जो प्रभुको विरहमा पिल्सिन्छ।

द्वारिकानाथ द्वारिका जान तयार हुनुभयो, कुन्तीको मन भरिएर आयो, उनको अभिलाषा छ चौबीसै घण्टा म श्रीकृष्णलाई हेरिरहन पाऊँ। मेरा श्रीकृष्ण मबाट टाढ़ा नजाऊन्। जुन बाटोबाट भगवान्‌को रथ जाने भएको थियो त्यहीं कुन्ती आइन् र हात जोड़ेर बाटामा उभिइन्।

प्रभुले दारुकसारथीलाई रथ रोक्न लाउनुभयो र कुन्तीलाई भन्नुभयो—'फुपु तपाईं बाटामा किन उभिनुभएको ? उहाँ रथबाट तल झर्नुभयो। कुन्तीले वन्दना गरिन्।'

वन्दनाद्वारा प्रभु बन्धनमा पर्नुहुन्छ। वन्दना गर्दा आफ्ना सारा पापहरूलाई संझना गर। हृदय दीन र नम्र हुनेछ।

सूतजी वर्णन गर्नुहुन्छ—

नियम यस्तो छ तर प्रतिदिन भगवान् कुन्तीलाई वन्दना गर्नुहुन्छ। तर आज कुन्ती भगवान्लाई वन्दना गर्दैछिन्। भगवान्ले भन्नुभयो, 'यो तपाईंले के गरिरहनुभएको ? म यहाँको भतिजो हूँ। तपाईंले मलाई प्रणाम गर्नु यो शोभा दिएन।'

कुन्ती भन्छिन्, 'मैले आजसम्म तपाईंलाई भतिजा मान्दथें। तर आज मैले बुझें तपाईं ईश्वर हुनुहुँदो रहेछ। योगीजन तपाईंकै ध्यान गर्छन्। तपाईं सबैका पिता हुनुहुन्छ।'

कुन्तीको भक्ति दास्यमिश्रित वात्सल्य-भक्ति हो। हनुमान्जीको भक्ति दास्य-भक्ति हो। दास्य-भक्तिका आचार्य हनुमान्जी हुनुहुन्छ। दास्यभावले हृदय दीन बन्दछ। आफ्ना स्वामीलाई हेर्ने साहस ममा छैन। म त उनको दास हुँ। दास्य-भक्ति अधिकार महात्मालाई प्राप्त हुन्छ। दास्यभक्तिमा दृष्टि चरणहरूमा स्थिर गर्नुपर्छ। विनाभावको भक्ति सिद्ध हुन सक्दैन। ईश्वरका साथ धेर-थोर सम्बन्ध जोड़िनुपर्छ। मर्यादा-भक्तिभन्दा दास्यभाव मुख्य छ। कुन्ती वात्सल्य-भावले कृष्णको मुख हेर्नुहुन्छ। मेरो भाइको छोरो भन्नु वात्सल्यभाव भयो। मेरा भगवान् हुनुहुन्छ—यो पनि दास्यभाव मात्रै हो। चरणदर्शनबाट तृप्ति नभएकाले मुख हेरिरहनुभएको छ। कुन्ती भगवान्को स्तुति गर्नुहुन्छ—

> नमः पङ्कजनाभाय नमः पङ्कजमालिने।
> नमः पङ्कजनेत्राय नमस्ते पङ्कजाङ्घ्रये॥
>
> (भा० १-८-२२)

*अर्थ*—जसका नाभिबाट ब्रह्माको जन्मस्थान प्रकट भएको छ, जसले कमलहरूको माला लगाएको छ, जसका आँखा कमलका समान विशाल र कोमल छन् र जसका चरणहरूमा कमल चिह्न छ ! त्यस्ता हे श्रीकृष्ण, तपाईंलाई बारम्बार नमस्कार छ।

भगवान्को स्तुति सधैं तीन पटक गर—बिहान, दिउँसो र राती सुत्नुभन्दा पहिले। यसका सिवाय, दुःख र अन्त्यकालमा पनि स्तुति गर। अर्जुन दुःखमा स्तुति गर्दछन्, कुन्ती सुखमा स्तुति गर्छिन् र भीष्म अन्त्यकालमा स्तुति गर्नुहुन्छ।

सुखावसाने, दुःखावसाने, देहावसाने वेला स्तुति गर।

कुन्ती भन्छिन्—'प्रभुले मलाई सुखी गरिदिनु भएको छ। मलाई कस्ता-कस्ता सङ्कटहरूबाट पार लगाइदिनुभयो ? भगवान्को उपकारहरूको उनी स्मरण गरिरहिछिन्। उनले भगवान्का उपकारहरूलाई बिर्सेकी छैनन्। म विधवा भएँ त्यसवेला मेरा सन्तान ससाना थिए। त्यसवेला पनि तपाईंले नै मेरो रक्षा गरिदिनु भएको थियो।'

सामान्य मानिस अति सुखमा भगवान्लाई बिर्सन्छ। जीवमात्रमाथि भगवान् अनेक उपकार गर्नुहुन्छ। तर त्यसले सबै कुरा बिर्सिदिन्छ। परमात्माको उपकार बिर्सनु हुँदैन। हामी जब बिरामीबाट

निको हुन्छौं अमुक औषधिबाट बिमारी हट्यो भनी ठान्दछौं। डाक्टरले हामीलाई बचाए भनी ठान्दछौं। तर भगवान्‌ले बचाएको हो भनेर ठान्दैनौं। भगवान्‌को उपकार मान्दैनौं। विचार गर डाक्टरको औषधि र इन्जेक्सनमा बचाउने शक्ति केही छ पनि के? होइन, होइन, बचाउने तर कोही अरू हुन्। डाक्टरसँग यदि बचाउने शक्ति भएको भए उसको घरबाट कहिल्यै अन्तिम यात्रा निक्लने थिएन।

विना जलको नदीको शोभा छैन, प्राणविना शरीर शोभा दिँदैन, सिन्दूरको टीकाविना सौभाग्यवती स्त्री सुहाउँदिन। यसै प्रकार पाण्डव पनि तपाईंविना सुहाउँदैनन्। नाथ ! तपाईंबाट मात्र हामी सुखी छौं।

गोपीगीतमा गोपिनीहरू पनि भगवान्‌को उपकारको स्मरण गर्दछन्। गोपिनीहरू भन्दछन्— विषजलाप्ययाद् व्यालराक्षसाद् वर्षमारुताद् वैद्युतानलात्। यमुनाजीको विषमय जलबाट हुने मृत्युबाट, अजिङ्गरको रूपमा खाने अघासुरबाट, इन्द्रको वर्षा, आँधी, बिजुली, दावानल आदिबाट तपाईंले हाम्रो रक्षा गर्नु भएको छ।

कुन्ती सम्झन्छिन् जब भीमलाई दुर्योधनले विष मिलेको लड्डू ख्वाएका थिए, त्यस समयमा पनि तपाईंले नै उसको रक्षा गर्नुभएको थियो। लाक्षागृहबाट पनि हामीलाई बचाउनुभयो। तपाईंका उपकार अनन्त छन्। त्यसको बदला हामी कहिल्यै चुकाउन सक्दैनौं।

मेरी द्रौपदीलाई दुःशासनले सभामा तानेर ल्यायो। त्यस समय दुर्योधनले भन्यो 'द्रौपदी अब हाम्री दासी भई। उसलाई नाङ्गै पार।' दुःशासन वस्त्र तान्न थाल्यो तर भगवान्‌ले उनको लाज ढाकिदिनु भयो, उसलाई कसले उघार्न सक्छ। दुःशासन थाक्यो। मानिसहरू पनि आश्चर्यमा डुबे। सबै जना सोच्न लागे—

सारी बीच नारी है कि नारी बीच सारी है,
सारी की ही नारी है कि नारी की ही सारी है।

जीव ईश्वरलाई केही पनि दिन सक्दैन। जगत्‌का सब कुरा ईश्वरकै हुन्। भगवान् भन्नुहुन्छ 'मेरो त्यही चीज दिनमा के ठूलो कुरा भयो?'

प्रत्येक मंगलवारको दिन तीन पटक प्रार्थना गर 'हे नाथ, म तपाईंको हूँ। ममाथि तपाईंका अनन्त उपकार छन्।' कुन्ती भन्छिन् 'तपाईंको उपकारको साटो म कुन प्रकारले तिरौंला? म तपाईंलाई बारम्बार वन्दना गर्छु।

नाथ मलाई त्याग नगर्नुहोस्। तपाईं द्वारिका गइरहनु भएको छ, तर एउटा वरदान माग्ने मेरो इच्छा छ। वरदान दिएर तपाईं जहाँ इच्छा लाग्छ जानुहोस्।' कुन्तीले जस्तो वर कहिल्यै दुनियाँमा कसैले आजसम्म मागेका छैनन् र माग्ने पनि छैनन्।

विपदः सन्तु नः शश्वत्तत्र तत्र जगद्गुरो।
भवतो दर्शनं यत्स्यादपुर्भवदर्शनम्॥

हे जगद्गुरु, हाम्रो जीवनमा प्रतिक्षण विपत्ति आउँदै रहून्, किनभने विपदावस्थामा मात्र निश्चितरूपबाट तपाईंको दर्शन भइरहन्छ र तपाईं भएपछि जन्म-मृत्युको फेरो टलिजान्छ।

दुःखमा मात्र मानिसलाई बुद्धि आउँछ। दुःखमा मात्र प्रभुका नजिक जाने मन हुन्छ। विपत्तिमा मात्र उनको स्मरण हुन्छ। त्यसकारण विपत्ति मात्र साँचो सम्पत्ति हो।

मानिसलाई प्रभुका विना आराम पाइन्छ किनभने उसले भक्तिरसलाई संझेको छैन।

कुन्ती माग्छिन् 'ठूला-ठूला विपत्तिहरू आइरहुन् यस्तो वरदान दिनुहोस्।'

श्रीकृष्ण भन्नुहुन्छ, 'यो तपाईंले के मागेको? तपाईंको बुद्धिले कहीं चक्कर खाएन? आजसम्म दुःखका प्रसङ्ग कति आएका छन्? अब सुखको पालो आएको छ। दुःखी हुने इच्छा छ?'

हरेक किसिमको अभिमान छोड़ेर जो दीन बन्दछ त्यो व्यक्ति भगवान्लाई प्यारो लाग्दछ। कुन्ती दीन बनेकी छन्। 'नाथ! म जे मागिरहिछु। त्यो ठीक छ। दुःख मात्र मेरो गुरु हो। दुःखमा मानिस आँटिलो बन्छ। दुःखबाट जीवलाई परमात्माको चरणमा जाने इच्छा हुन्छ।'

'जुन दुःखमा नारायणको स्मरण हुन्छ त्यो ता सुख हो, त्यसलाई दुःख कसरी भन्ने?'

'विपत्तिमा तपाईंको स्मरण हुन्छ त्यसकारण म त्यसलाई सम्पत्ति मान्दछु।'

सुखके माथै सिल परौ हरी हृदयसे पीर।
बलिहारी वा दुःखकी जो पल पल नाम जपाय॥

हनुमान्जीले रामचन्द्रजीलाई भन्नुभएको थियो—तपाईंको ध्यानमा सीताजी तन्मय हुनुहुन्छ, यसैले म भन्छु सीताजीमा आनन्दमा हुनुहुन्छ।

कह हनुमन्त विपत्ति प्रभु सोई।
जब तब सुमिरन भजन न होई॥

नाथ, जब तपाईंको स्मरण-भजन हुन सकेन त्यही एउटा सच्चा विपत्ति हो, यस्तो संझनुहोस्।

मेरा शिरमा विपत्तिहरू आइपरून् जसले गर्दा तपाईंका चरणको आश्रय लिने भावना जागोस्। दुनियाँमा महापुरुषहरूका जीवनमा दुःखका प्रसङ्गहरू मात्र पहिले आएका छन्।

चार प्रकारका मदले मनुष्यले परमात्मालाई बिर्सिए जस्तो गर्छ—(१) विद्यामद, (२) जवानीको मद, (३) द्रव्यमद र (४) अधिकारमद।

आफ्नो रोइरहेको बालकलाई ताली बजाएर फुल्याउँदा त्यस समय प्रोफेसरले यो कुरा बिर्सिदिन्छन् उनी एक ठूला विद्वान् प्रोफेसर हुन्। तर उनै प्रोफेसरलाई प्रभुकीर्तनको समयमा ताली बजाउन लाज हुन्छ। पढ़े-लेखेका मानिसहरूलाई भजनकीर्तनमा लाज लाग्छ भने त्यसभन्दा ठूलो पाप कुनचाहिँ होला ?

भगवान्‌ले भन्नुभएको छ 'यी चार प्रकारका मद्‌बाट जीव उन्मत्त हुन्छ र मेरो अपमान गर्दछ।'

यस्ता मतवालाको जिब्रोलाई कीर्तनका समयमा पापले समातिराखेको हुन्छ। पाप उसलाई भन्दछ 'तैंले बोलिस् भने मलाई बाहिर निस्कनु पर्नेछ।'

महाभारतमा भनेको छ हरेक किसिमको रोग मद्‌का कारणले हुन्छ। त्यसकारण दीन भएर प्रार्थना गर। तिम्रो जन्मको कैयौं प्रयोजन छ भनेको छ, तर मलाई लाग्छ दुष्टहरूको विनाश गर्नु मात्र प्रधान कार्य होइन। आफ्ना भक्तहरूलाई प्रेमको दान दिनलाई तपाई आउनुभएको हो।

कुन्ती जस्तो भएर स्तुति गर।

मसँग वासुदेवजीले भन्नुभएको थियो 'कंसको डरका कारणले म गोकुल जान सकिनँ।' तिमी गोकुलमा गएर कृष्णको दर्शन गर। जब तपाईंले गोकुलमा बाल-लीला गरिरहनुभएको थियो त्यस समयमा तपाईंका दर्शनका निमित्त म आएकी थिएँ। तपाईंको बालस्वरूप बिर्सिन खोजे पनि बिर्सिन्नँ। त्यस समयमा यशोदाले तपाईंलाई बाँध्नुभएको थियो। त्यो दृश्यलाई मैले अहिलेसम्म पनि बिर्सिएकी छैन।

काल पनि जोबाट काँप्दछ त्यस कालको पनि काल श्रीकृष्ण आज थर-थर काँपिरहनुभएको छ।

मर्यादा-भक्ति, पुष्टि-भक्तिको यस प्रकार प्रशंसा गर्नुहुन्छ। कुन्ती यशोदाको प्रशंसा गर्छिन्। प्रेमको बन्धन भगवान् पनि बिर्सन सक्दैनन्।

सगुण ब्रह्मको साक्षात्कार गरेपछि संसारमा आसक्ति रहन जान्छ। सगुण स्वरूप र निर्गुण स्वरूप दुवैको आराधना गर्नु, उसैको भक्ति सिद्ध हुन्छ। 'स्नेहपाशमिमं छिन्धि।' स्वजनहरूका साथ जोरिएको स्नेहको दृढ़ डोरी आफैंले छिनाल।

तपाईं यस्तो दया गर्नुहोस् जसले मलाई अनन्य भक्ति प्राप्त होस्।

स्तुतिको आरम्भमा र समाप्तिमा दुवैमा नमस्ते छ। सांख्यशास्त्रको २६ तत्त्वहरूको प्रतिपादन २६ श्लोकहरूको स्तुतिमा गरिएको छ।

भगवान् सबै कुरा गर्नुहुन्छ तर वैष्णवलाई रिस उठाउनुहुन्न।

कुन्तीको भाव जानेर भगवान् फर्किनुभयो। कुन्तीको महलमा सवारी भयो। अतिशय आनन्द भयो। अर्जुन त्यहाँ आए। उनी आफ्नी आमालाई भन्दछन्—भगवान् मेरो सखा हुनुहुन्छ, त्यसकारण मेरै निमित्त उहाँ फर्किएर आउनुभयो।

द्रौपदी भन्दछिन्—'कृष्णको औंला काटेको थियो र मैले आफ्नो सारी च्याती पट्टी बाँधिदिएकी थिएँ र आउनुभएको छ।'

सुभद्रा भन्दछिन्—'म तिमी जस्तो बोलाइने बहिनी होइन नि आफ्नै बहिनी हूँ, त्यसैले उहाँ फर्किएर आउनुभएको छ। मसँग भेट गर्नु आउनुभएको थियो; त्यस समयमा मैले केही बोल्न सकेकी थिइनँ र उहाँ फर्किएर आउनुभएको छ।'

परमात्मासँग प्रेम गऱ्यौ भने उहाँ तिम्रो हुनुहुने छ।

सबैका प्यारा तर कसैको पनि नहुने वाला। त्यो सबभन्दा अनौठो छ। उहाँले त सबभन्दा ठूलो प्रेम-विवाहको सिद्धान्तलाई मान्नुहुन्छ।

भीष्माचार्यको प्रेम दिव्य थियो। कृष्ण भन्नुहुन्छ म कुनै विवाह-सम्बन्धलाई मान्दिनँ। म प्रेम-विवाहलाई मात्र मान्दछु। म आफ्नो भीष्मका निमित्त फर्किएर आएको हुँ। मेरा भीष्मले मलाई संझिरहेका छन्, बोलाइरहेछन्।

भीष्मपितामह त्यस समय वाणशैय्यामा सुतेको हुनुहुन्थ्यो। उहाँको मरण सुधार्नलाई भगवान् फर्किएर आउनुभएको हो।

महात्माहरूको मृत्यु मङ्गलमय हुन्छ। सन्तहरूको जन्म आफूअनुसार सामान्य हुन्छ। त्यसकारण सन्तहरूको जन्मतिथिमा उत्सव मनाईंदैन, तर सन्तहरूको मृत्यु मङ्गलमय हुन्छ, पुण्यमय हुन्छ, त्यसकारण उनको पुण्यतिथि ( मृत्यु-तिथि ) मनाइन्छ।

भीष्मपितामहको मृत्यु कुन प्रकार होला त्यो हेर्नलाई ठूला-ठूला सन्त र ऋषिमुनि त्यहाँ आएका छन्।

प्रभुले धर्मराजलाई उपेदश दिनुभयो। उहाँले सान्त्वना पाइरहनुभएको छैन। त्यसकारण उहाँलाई भीष्मपितामह नजिक जानलाई भगवान्ले भनिरहनु भएको छ।

वाणगंगाका किनारमा जहाँ भीष्म सुतिरहनुभएको छ त्यस स्थानमा सबै आए।

भीष्म सोच्नुहुन्छ उत्तरावस्थामा उत्तरायणमा मलाई मर्नु छ। भीष्म पितामहले काललाई भन्नुभयो म तेरो नोकर होइन। म आफ्ना श्रीकृष्णाको सेवक हुँ। भीष्म द्वारिका-नाथको ध्यान गर्नुहुन्छ। मलाई भगवान्ले वचन दिनुभएको छ अन्तिम समयमा म अवश्य आउने छु। त्यसैले म उहाँको दर्शन गर्दै प्राणत्याग गरूँ भनी सोचिरहेछु। त्यही समयमा धर्मराज त्यहाँ आउनुहुन्छ।

धर्मराजसँग भीष्म भन्नुहुन्छ—'श्रीकृष्ण साक्षात् परमात्मा हुनुहुन्छ। उहाँ तिमीलाई निमित्त बनाई मेरा निमित्त आउनुभएको छ। मेरो मृत्यु सुधार्न आउनुभएको छ।'

भगवान्लाई भीष्मले वचनबद्ध गर्नुभएको थियो। कौरव-पाण्डवयुद्धका समयमा दुर्योधन भीष्मपितामहसँग भन्दछन्—'हे बाजे, आठ दिन भइसक्यो, तैपनि तपाईंले कुनै पाण्डवलाई मार्न सक्नुभएको छैन। तपाईं राम्ररी लड्नै हुन्न।' भीष्म आवेशमा आउनुभयो र सोही अवस्थामा उहाँले

दुर्योधनलाई भन्नुभयो रातको बाह्र बजे म जब ध्यानमा बस्ने छु, आफ्नी रानीलाई आशीर्वाद लिनका निमित्त पठाउनु। म अखण्ड सौभाग्यको वरदान दिनेछु।

श्रीकृष्णलाई यो सुनेर चिन्ता भयो। दुर्योधनकी दुलही भानुमतीसँग उहाँले भेट गर्नुभयो र भन्नुभयो 'बाजे आफ्ना घरकै हुन् नि। उहाँसँग भेट्न आजै के हतार परेको छ र। भोलि उहाँको दर्शन गर्न जानु।' भानुमतिले यो कुरा मानिन् र गइनन्।

महात्मा भन्नुहुन्छ, सोही समयमा कृष्णले द्रौपदीलाई जागा गराउनुभयो। एक स्वरूपबाट द्रौपदीलाई लिएर उहाँ भीष्मपितामहका नजिक जानुभयो र दोस्रो रूपबाट द्रौपदी बनेर अर्जुनको शैय्यामा सुतिरहनुभयो। श्रीकृष्ण रूपरहित भए पनि अनेक रूपवाला हुनुहुन्छ।

भीष्मपितामह ध्यान गरिरहनु भएको छ आज द्वारकाधीशको स्वरूप देखिएन। तर काली कमली, हातमा दीयो आदि स्वरूपवाला भगवान् देखिनुहुन्छ। आज द्रौपदीको रक्षक बनेर भगवान् आउनुभएको छ। द्वारपालले उहाँलाई रोक्यो। कोही पनि पुरुष भित्र जान नपावोस् भन्ने यस्तो आज्ञा थियो। द्रौपदीले भित्र गएर प्रणाम गरिन्। दुर्योधनकी पत्नी भानुमती आइहोलिन् भनी भिष्मपितामहले आशीर्वाद दिनुभयो 'अखण्ड सौभाग्यवती होऊ।'

द्रौपदीले सोधिन्—'दादाजी, तपाईंको आशीर्वाद साँच्चै होला र?' भीष्मले प्रश्न गर्नुभयो 'देवी, तिमी को हौ?' द्रौपदीले उत्तर दिइन् 'म पाण्डवपत्नी द्रौपदी हुँ।'

भीष्मपितामहले भन्नुभयो 'मैले तिमीलाई आशीर्वाद दिएको छु साँच्चै हौली।' पाण्डवहरूलाई मार्ने प्रतिज्ञा मैले आवेशवश गरेको थिएँ, साँचो हृदयबाट होइन। तिमीलाई साँचो हृदयबाट आशीर्वाद दिएको छु। त्यो सत्य हुनेछ। तर मलाई तिमी यो भन तिमी एक्लै यहाँ कसरी आयौ? तिमीलाई द्वारिकानाथका सिवाय अरू कसले ल्यायो होला?

भीष्मपितामह दौड़िँदै बाहिर आउनुभयो। श्रीकृष्णलाई उहाँले भन्नुभयो, 'आज म तपाईंको ध्यान गर्दछु, तर अन्त्यकालमा तपाईंको स्मरण म भन्न सक्दिनँ, हुन्छ हुँदैन। प्राणप्रयागका समयमा वातपित्तका प्रकोपले घाँटी रोकिन जाला, त्यस्तो समयमा तपाईंको स्मरण कसरी होला? त्यसकारण अन्त्य समयमा मेरो लाज राख्न आइदिनु होला। अन्त्यकालमा भयङ्कर स्थिति होला, त्यस समयमा मलाई लिन आउनुहोला।' त्यस समयमा श्रीकृष्णले भीष्मपितामहलाई वचन दिनुभयो 'म अवश्य आउने छु।' उहाँलाई दिएको वचनपालन गर्न द्वारिकानाथ पाल्नुभएको थियो।

प्रभुसँग रोज प्रार्थना गर मेरो मृत्युका समयमा जरूर आउनुहोला। शरीर ठीक भयो भने ध्यान-जप हुन सक्छ। अन्त्यकालमा दुःखसँग देहानुसन्धान हुन्छ जसले गर्दा परमात्माको ध्यान गर्न कठिन हुन्छ।

भीष्मपितामह श्रीकृष्णको स्तुति गर्नुहुन्छ—'नाथ, कृपा गर्नुहोस्' जस्तो उभिनुभएको छ त्यस्तै रहनुहोस्।

## स देवदेवो भगवान् प्रतीक्षतां कलेवरं यावदिदं हिनोम्यहम्।

कृष्णा सोच्नुहुन्छ मलाई बस भनेर पनि भनेनन्। पुण्डरीकको सेवा म संझन्छु। तुकारामले एकपटक पुण्डरीकलाई दोष दिएका थिए मेरा विट्ठलनाथ तिम्रा ढोकामा आउँदा तिमीले उनको कदर गरेनौ। मेरा प्रभुलाई तिमीले आसन पनि दिएनौ।

रोज-रोज प्रभुसँग प्रार्थना गर मेरो मृत्यु सुधार्नलाई आउनुहोला। शरीरमा जबसम्म शक्ति छ तब खूब भक्ति गर र प्रभुलाई मनाऊ।

श्रीकृष्ण भन्नुहुन्छ—'दादाजी, यी धर्मराज पनि ठान्छन् मैले सबैलाई मारेको हुँ। मेरै कारणले सबैको सर्वनाश भयो, उहाँलाई शान्ति मिलोस् यस्तो उपदेश उहाँलाई दिनुपर्‍यो।'

भीष्मपितामह भन्नुहुन्छ—'पर्खनोस्, धर्मराजको शङ्का निवारण म पछि गर्नेछु। मेरो एउटा शङ्काको समाधान पहिले गरिदिनुहोस्। मेरो एक प्रश्नको उत्तर पहिले दिनुहोस्। मेरो जीवन निष्पाप छ। मेरो मन पवित्र छ, मेरो तन पनि पवित्र छ, मेरा इन्द्रियहरू पनि शुद्ध छन्। म उहाँसँग कुरा गरिरहेको छु जो मनको कुरा पनि थाहा पाउनुहुन्छ।' भीष्म भन्नुहुन्छ मैले पाप गरेको नै छैन तब फेरि यो दण्ड किन पाइरहेछु। मलाई वाणशय्यामा किन सुत्नु परेको ? मलाई अतिशय वेदना किन हुन्छ ? म निष्पाप छु फेरि पनि मलाई किन सजाय दिन्छन् ?'

भगवान् भन्नुहुन्छ—'दादाजी, तपाईंले कुनै पाप गर्नु भएको छैन यो ठीक हो। यसै कारणले म तपाईंसँग भेट गर्न आएको छु तपाईंले स्वयं केही पाप गर्नुभएन। तैपनि तपाईंले आफ्ना आँखाले पाप भएको देख्नुभएको छ। तपाईंले जो पाप देख्नुभयो त्यसैको यो सजाय हो।

कसैले पाप गर्‍यो भने त्यसलाई हेर्नु पनि पाप हुन्छ। कसैको पापको विचार गर्नु पनि पाप हो। कसैको पाप नहेर्नु, नसुन्नु र कसैलाई नभन्नु पनि।'

भीष्म भन्नुहुन्छ—त्यो पाप मलाई सम्झना भइराखेको छैन, मैले कुनचाहिँ देखें।

कृष्ण भन्नुहुन्छ—दादाजी, तपाईंले बिर्सनु भयो होला, तर मैले त बिर्सेको छैन। मलाई सब कुरा संझना राख्नै पर्छ। संझनोस् दादा, एक पटक जब तपाईं सभामा बसिरहनु भएको थियो त्यहाँ दुःशासनले द्रौपदीलाई लिएर गएका थिए। तपाईं त्यसबखत उहाँ हुनुहुन्थ्यो। द्रौपदीले भनेकी थिइन् जुवामा सबै कुरा हारेको पतिले आफ्नी पत्नीलाई जुवामा दाउ राख्न सक्तैन। दुर्योधनले भनेको थियो अब द्रौपदी दासी भएकी छ, त्यसलाई निर्वस्त्र गर।

त्यस समय द्रौपदीले तपाईंलाई भनेकी थिइन् हारेको पतिलाई आफ्नी स्त्री दाउमा राख्ने अधिकार छैन। दादाजी, तपाईं न्याय गर्नुहोस् म जितिएकी हुँ वा अजीता हूँ। त्यस समय तपाईंले दुर्योधनको अन्न खाएको हुनाले मेरो बुद्धि कुण्ठित भएको छ भनी आफू चुप लाग्नु भयो। यस्तो घोर पाप सभामा भइरहोस् र तपाईं त्यसलाई हेरिराख्नोस् यस्तो तपाईं जस्तो ज्ञानीलाई शोभा दिँदैन थियो। द्रौपदीको अपमान तपाईंले सभागृहमा हेरिरहनु भयो। द्रौपदीलाई आशा थियो तपाईं

जस्तो ज्ञानी सभामा हुनुहुन्छ तब न्याय गर्न्यौं होला भनी। तपाईं त्यस बखतमा द्विधावश भएर अन्यायलाई रोक्नु भएन। त्यसो हुँदा निराश भएर द्रौपदीले पुकारा गरिन्—

हे कृष्ण ! द्वारिकावासिन् ! क्वासि ! यादवनन्दन।
कौरवैः परिभूतां मां किं जानासि केशव॥

द्रौपदीको पुकार सुनेर म त्यहाँ गुप्तरूपले आएको थिएँ। मैले सबै कुरा देखें। दुःशासन द्रौपदीको धोती तानिरहेको थियो र तपाईं केवल हेरेर बस्नुभएको थियो। सभामा भइरहेको अन्यायलाई तपाईंले चुपचाप हुन दिनुभयो। यसै पापको तपाईंलाई दण्ड मिलिरहेछ।

भीष्मपितामहले नमस्कार गर्नुभयो। उहाँले फेरि धर्मराजलाई उपदेश दिनु भयो। स्त्रीधर्म, आपदधर्म, राजधर्म, मोक्षधर्म आदि समस्याहरूको महाभारतको शांतिपर्वमा उल्लेख भएको छ र फेरि परधर्मको पनि वर्णन भएको छ।

युधिष्ठिरले सोध्नुभयो 'सबै धर्महरूमा कुन धर्मलाई तपाईं श्रेष्ठ मान्नुहुन्छ ? केको जप गर्नाले जीव जन्म-मरणरूपी सांसारिक बन्धनबाट मुक्त हुन्छ ?'

भीष्मपितामहले भन्नुभयो—'स्थावर-जंगमरूप संसारका स्वामी ब्रह्मादिदेवहरूका देव, देश, काल र वस्तुहरूबाट अपरिच्छिन्न, क्षर-अक्षरभन्दा श्रेष्ठ पुरुषोत्तमको सहस्त्र नामहरूको निरन्तर तत्परतासाथ गुण संकीर्तन गर्नाले मानिस सबै दुःखहरूबाट मुक्त हुन्छ।'

विष्णुसहस्त्रनामको पाठ गर्नु नै पराधर्म हो, शिवमहिम्न र विष्णु सहस्त्रनामको रोज पाठ गर। शिवजीको स्तुति गर्नाले ज्ञान पाइन्छ। ज्ञानपाठले भक्ति दृढ़ हुन्छ। विष्णु भगवान्‌को स्तुति गर्नाले पाप डढ्छ। विष्णु सहस्त्रनामको पाठ गर्नाले निधारमा लेखिएको विधाताको लेख पनि बदि्लन्छ। जन्म-मरणको बन्धनबाट जीवलाई त्यसले मुक्त गर्दछ। भगवान् शङ्कराचार्यलाई विष्णुसहस्त्रनामको पाठ ज्यादै प्रिय थियो। उहाँले सबैभन्दा पहिले विष्णुसहस्त्रनाममाथि भाष्य लेख्नुभएको थियो। उहाँको अन्तिम ग्रन्थ हो ब्रह्मसूत्रको भाष्य—शाङ्कर भाष्य र त्यसपछि उहाँले लेख्न बन्द गरिदिनुभयो।

विष्णुसहस्त्रनामको पाठ दिनहुँ दुइ पटक गर। बाह्र वर्षसम्म यसो गर्नाले अवश्य फल मिल्नेछ। एक पटक राती सुत्नुभन्दा अघि पाठ गर। यसमा दिव्य शक्ति छ। निधारमा लेखिएका लेखहरू मेटाउन र बदि्लने शक्ति यसमा छ। गरीब मानिस विष्णुयाग कसरी गर्न सक्छ ? तर त्यसले विष्णुसहस्त्रनामको पन्ध्र हजार पाठ गऱ्यो भने त्यसलाई एक विष्णुयागको पुण्य पाउँदछ।

भोजनको जस्तै भजनको पनि नियम हुनुपर्छ। बाह्र वर्षसम्म नियमपूर्वक सत्कर्म गर अनि अनुभव होला। जुनसुकै काम भए पनि, भगवान्‌को भजन नियमित गर। जुन परमात्माका कृपाले सुख पाइयो, पुत्र पाइयो त्यस्ता भगवान्‌को सेवा-स्मरण जीवले नगरे यसभन्दा ठूलो पाप कुनचाहिँ होला ?

फेरि भीष्मपितामहले भगवान्‌को स्तुति गर्नुभयो र भन्नुभयो—'हे नाथ तपाईंको दर्शन म खाली हातले कसरी गरूँ ? म तपाईंलाई के अर्पण गरूँ ?'

भगवान् जीवसँग धन-सम्पत्ति माग्नुहुन्न। उहाँ मन-बुद्धि मात्र माग्नुहुन्छ।

भीष्मपितामहले भन्नुभयो 'म आफ्नो मन र बुद्धि तपाईंको चरणमा राख्दछु।'

यो जीव बड़ो कप्टी छ। अरू के भनूँ ? कोही सङ्कट आयो भने रणछोड़ रामजीको दर्शन गर्न जान्छ। त्यहाँ एघार रुपियाँ भेटी चढ़ाउँछ र भन्दछ—हे नाथ, मैले अड्डामा आफ्ना भाइका नाउँमा दावा गरी मुद्दा चलाएको छु मेरो विचार गरिदिनुपर्ला। यसो भन्नाको मतलब अदालतमा सँगै गएर मुद्दा जिताइदिनु भनेको हो। ऊ वकीललाई भने ३०७ रुपियाँ दिने र भगवान्‌लाई ११ रुपियाँ मात्र बुझाउन खोज्ने।

भगवान् भन्नुहुन्छ 'म सबै कुरा देख्दछु, जान्दछु र बुझ्दछु। म तिम्रो बाजेको पनि बाजे हुँ।' लक्ष्मीजी जब भगवानसँग सोध्नुहुन्छ—'तपाईं आफ्ना भक्तहरूलाई किन दर्शन दिन्नुहुन्न ?' तब भगवान् भन्नुहुन्छ 'त्यो दाताले बदलामा के लिन चाहन्छ त्यो पनि हेर।

भगवान्‌लाई तिमी आफ्नो मन, आफ्नो बुद्धि, आफ्नो हृदय अर्पित गर।

भीष्मपितामह स्तुति गर्नुहुन्छ—हे भगवान् ! केवल एक पटक मलाई भनिदिनुहोस् 'म तिम्रो हुँ।'

भक्तिले मृत्युलाई सुधार्दछ, सार्थक पार्दछ। ज्ञानका उपर भरोसा नगर। आत्मा शरीरबाट अलग छ भन्ने कुरा सबैलाई थाहा छ तर यसको अनुभव सबैलाई हुँदैन। दुःख भएपछि मनमा देहाध्यास हुन्छ। देहावसानको समयमा बीस करोड़ बिच्छीहरूले डसेजस्तो वेदना हुन्छ।

भक्ति मृत्युलाई सुधारिदिन्छ। धेरै पटक ज्ञानले मृत्युलाई बिगारेको छ।

भीष्मपितामह ज्ञानमा भरोसा गर्नुहुन्थ्यो। उहाँ भगवान्‌को शरणमा जानुभयो। उहाँ भगवान्‌लाई भन्नुहुन्छ 'म तपाईंको शरणमा आएको छु।' उहाँ यसो भन्नुहुन्न म ब्रह्मरूप हुँ। उहाँ भन्नुहुन्छ म तपाईंको हुँ। तपाईंको शरणमा आएको छु। भगवान् उहाँलाई केही दोष लाउनुहुन्छ। उहाँ भन्नुहुन्छ म तपाईंलाई आफ्नो कसरी मानूँ। तपाईंले अर्जुनमाथि पनि वाण चलाउनुभएको छ। आफ्नो भक्तमाथि चलाएको वाणलाई म कसरी बिर्सूं ?

भीष्मजी भन्नुहुन्छ यो सारा संसार जान्दछ पाण्डवहरूमाथि मेरो कति प्रेम छ र तपाईं पनि यो जान्नु नै हुन्छ नि। युद्धमा मेरो शरीर कौरवको पक्षमा थियो तर मेरो मनचाहिँ पाण्डवको पक्षमा थियो। पाण्डवहरूमाथि म वाण चलाउँदथें तर मनबाट यही चाहन्थें विजयचाहिँ पाण्डवलाई मात्र मिलोस्। 'जयोऽस्तु पाण्डुपुत्राणाम्' यस्तो भनेर मात्र म वाण छोड्दथें।

कृष्णा भन्नुहुन्छ फेरि पनि तपाईं शरीरबाट पाण्डव पक्षमा हुनु भएन। तपाईंले कौरवहरूको पक्षमा बसेर पाण्डवहरूका साथ युद्ध गर्नुभयो। तपाईं जब मनबाटै पाण्डवहरूका साथ थिएँ भन्नुहुन्छ भने तनबाट पनि पाण्डवहरूका साथ किन रहनुभएन ?

भीष्मपितामह भन्नुहुन्छ—हे प्रभो ! म त्यस बखत तपाईंको दर्शन गर्न चाहन्थें। तपाईं अर्जुनको रथमा हुनुहुन्थ्यो। मैले सोचें यदि म पाण्डवपक्षमा रहें भने सामुन्नेबाट तपाईंको दर्शन कसरी गर्न सकुँला ? तपाईंको सतत् दर्शन गर्नका निमित्त मात्र म पाण्डवहरूको विरुद्ध कौरव पक्षमा गएर मिलें। पाण्डवहरूका पक्षबाट लड़ेको भए तपाईंको दर्शन मैले राम्ररी गर्न पाउने थिइनँ।

भीष्मजी स्तुति गर्नुहुन्छ—

त्रिभुवनकमनं तमालवर्णं रविकरगौरवराम्बरं दधाने।
वपुरलककुलावृताननाब्जं विजयसखे रतिरस्तु मेऽनवद्या॥

(भा० १-९-३३)

*अर्थ*—'जसको शरीर त्रिभुवन सुन्दर र नील तमाल जस्तो छ, नील वर्ण छ, जसका तनमा सूर्य किरण जस्तो श्रेष्ठ पीताम्बर शोभित छ र मुखमा कमलका समान अल्झिएका जटाहरू छरिएका छन्, यस्ता अर्जुनसखा श्रीकृष्णमा मेरो निष्कपट प्रीति रहोस्।'

'पार्थसखे रतिर्ममास्तु'—यस्ता स्वरूपवान् पार्थसारथीलाई रोज। आफ्ना सम्मुख राख। इन्द्रियहरूका घोड़ाहरूलाई भगवान्‌लाई सुम्पिदेऊ। शरीर रथ हो, इन्द्रियहरू घोड़ा हुन्।

आफ्नो निष्काम बुद्धि र मन तपाईंलाई अर्पित गर्दछु। 'मतिरूपकल्पिता वितृष्णा'। मन त केवल भगवान्‌लाई मात्र दिने वस्तु हो। तैपनि जगत्‌मा कोही स्त्रीलाई मन दिन्छ र कोही पुरुषलाई। भगवान् तर भन्नुहुन्छ तिमी आफ्नो धन आदि होइन बरु मनमात्र मलाई देऊ।

भगवान् श्रीकृष्ण सोच्न लाग्नुभयो वयोवृद्ध भीष्मपितामह धेरै समझदार हुनुहुन्छ। कति मीठो बोली छ। यो जीवले जब भगवान्‌लाई केही अर्पण गर्दछ तब उहाँलाई बड़ो सङ्कोच लाग्छ।

भगवान् अगाड़ि सोच्नुहुन्छ युद्धका समयमा भीष्मपितामहको विलक्षण मूर्ति अझै पनि मलाई संझना आउँछ। उहाँको मुखमाथि छरिएका लटाहरू घोड़ाहरूका खुट्टाबाट उड़ेको उड्दो धूलोबाट मटमैलो भइरहेका थिए र मुखमा पसीनाका ससाना थोपा टल्किरहेका थिए।

सुन्दर कवचधारी कृष्णाका प्रति मेरा शरीर, अन्तःकरण र आत्मा समर्पित होस्। प्रभुसँग प्रार्थना गर मेरा शरीररथमा हजूर राज होस्। मेरा शरीररथमा द्वारकाधीश राज भएको छ भनी यस्तो भाव मनमा गर। मेरा इन्द्रियरूपी घोड़ा अंकुशभित्र नरहे प्रभु, उनलाई तपाईंले अंकुशित गरिदिनुहोला। मैले धुरा तपाईंको हातमा राखिदिएको छु। मेरा इन्द्रियहरूलाई वशमा राखिदिएर मेरो रथ सकुशल पार लाइदिनुहोस्।

प्रभुको शरण ग्रहण गर्नेको मात्र मरण सुध्रिन्छ।

हे नाथ, जगत्‌मा तपाईंले मेरो प्रतिष्ठा कति बढ़ाइदिनुभयो। मलाई कति सम्मान दिनुभयो। मेरो प्रतिज्ञा राख्नलाई तपाईंले आफ्नो प्रतिज्ञा छोड़िदिनुभयो।

## स्वनिगममपहाय मत्प्रतिज्ञामृतमधिकर्तुम्।

श्रीकृष्णले महाभारतको युद्धमा कुनै पनि अस्त्र-शस्त्र धारण नगर्ने प्रतिज्ञा गर्नुभएको थियो। भीष्मले भन्नुभयो म गङ्गापुत्र हुँ। म यस्तो युद्ध गर्नेछु कृष्णलाई अस्त्र-शस्त्र धारण गर्नै पर्ने छ। म उहाँबाट हतियार चलाउन लाएरै छोड्ने छु। भीष्मको वाणबाट अर्जुन मूर्च्छित भए र पनि उनी वाणको वर्षा गर्दै रहे। कृष्णले विचार गर्नुभयो यदि भीष्म वाण चलाउँदै रहेभने मेरा अर्जुनको मृत्यु हुनेछ। महा अनर्थ होला। मेरो प्रतिज्ञा भङ्ग होओस्।

भगवान् रथबाट हाम्फाल्नुभयो। सिंह जस्तै लखेट्दै उहाँ रथ-चक्र लिएर भीष्मतर्फ दौड़नुभयो। भीष्मले त्यसै बखत कृष्णलाई नमस्कार गर्नुभयो र भगवान्को जय-जयकार गर्नुभयो।

भक्तहरूको प्रतिज्ञा पूरा गर्न भगवान् आफ्नो प्रतिज्ञा भङ्ग गर्नुहुन्छ। ठाकुरजीको यो पनि एक लीला हो। भगवान् भक्तहरूको पूरा-पूरा सम्मान गर्नुहुन्छ। उहाँ स्वीकार गर्नुहुन्छ मेरो पराजय भए तापनि भक्तहरूको विजय हुनुपर्छ।

भीष्म भन्नुहुन्छ मेरो र कृष्ण दुवैको प्रतिज्ञा पूरा भयो। त्यस समय भगवान्का दुइ रूप म एकसाथ देखिरहेको थिएँ। एक स्वरूप, रथमा राज भएको थियो र दोस्रो, रथबाट हाम्फाली चक्र लिएर दौड़िरहेको थियो। अर्जुन मूर्च्छित भएकाले कहीं रथ खाड़लमा नपरोस् भन्ने सोचेर भगवान्को एक स्वरूपले रथ सम्हालेको थियो र त्यस रूपले कुनै पनि शस्त्र धारण गरेको थिएन।

भीष्म अर्थात् भयङ्कर। भयङ्कर को हो ? मन भयङ्कर हो। अतः भीष्मको अर्थ हो मन। अर्जुन जीवात्मा हो। मन आवेशयुक्त भएपछि सङ्कल्प-विकल्प धेरै गर्छ। मनले सङ्कल्प-विकल्पका वाणहरूको वर्षा गरिदिन्छ। त्यसकारण जीवरूपी अर्जुन घाइते हुन्छ र मूर्च्छित हुन्छ। ईश्वर जब मनलाई सुदर्शन चक्रले मार्न लाग्नुहुन्छ तब त्यो नियन्त्रणमा आउँछ। भगवान् मनलाई सुदर्शन चक्रले मार्न जानुहुन्छ र कहीं मन शान्त हुन्छ।

जीवात्मा जब परमात्माको शरणमा जान्छ तब मनलाई उहाँ शान्त गर्नुहुन्छ। मनले सङ्कल्प-विकल्प गर्न छोड़िदियो भने यो मन आत्मरूपमा तदाकार हुन जान्छ। तब जीवनलाई पनि शान्ति पाइन्छ।

जुन स्तुति भीष्मजीले गर्नुभएको थियो त्यो अनुपम छ। त्यो स्तुति कण्ठस्थ गर्न योग्य छ। यसलाई 'भीष्मस्तवराजस्तोत्र' पनि भन्छन्।

यसपछि भीष्मले उत्तरायणमा देह छोड़िदिनुभयो। भीष्माचार्य भगवत् स्वरूपमा तदाकार हुनुभयो, उहाँ कृतार्थ हुनुभयो।

उत्तरायणमा मृत्युको अर्थ हो ज्ञानको अथवा भक्तिको उत्तरावस्थामा परिपक्व दशामा मृत्यु। केही पापीहरू पनि उत्तरायणकालमा मर्छन् तापनि उनले सद्गति पाउँदैनन् र केही योगीजन दक्षिणायनमा मर्छन् तापनि उनको दुर्गति हुँदैन।

दक्षिण दिशामा यमपुरी छ, नरकलोक छ। नरकलोकको अर्थ हो अन्धकार। जसलाई परमात्माको स्वरूपको ज्ञान छैन, जसले परमात्माको अनुभव गरेको छैन र त्यसै मर्दछन् तिनको मृत्यु दक्षिणायन भनिन्छ।

सन्तहरूको जन्म त हाम्रो जस्तो नै साधारण हुन्छ, तर तिनको मृत्यु मङ्गलमय हुन्छ।

भीष्म महाज्ञानी हुनुहुन्थ्यो र पनि प्रभु-प्रेममा तन्मय भएर मर्नुभएको थियो। यो कुराले हामीलाई यो थाहा हुन्छ भक्ति मात्र श्रेष्ठ हो।

साधन-भक्ति गर्दागर्दै साध्यभक्ति सिद्ध हुन्छ।

जसको मृत्युका समयमा देवगण बाजा बजाउँछन्, त्यसको मृत्यु कृतार्थ भयो भन्ठान। भीष्मको प्रयाणका समयमा देवहरूले यस्तै गरेका थिए। यस्तो काम संसारमा गर—

जब तुम आए जग में तो वह हँसा, तुम रोए।
ऐसी करनी कर चलो, तुम हँसो, जग रोए॥

मानव-जीवनको अन्तिम परीक्षा भनेको उसको मृत्यु हो। जसको जीवन सुन्दर हुन्छ, त्यसको मृत्यु मङ्गलमय हुनेछ।

जसको मरण बिग्रयो उसको जीवन पनि व्यर्थ भयो। मरण त्यसबखत सुध्रिन्छ जब मानवले प्रत्येक क्षणलाई सुधार्दै जान्छ, जसलाई समयको मूल्यको भान हुन्छ। हराएको सम्पत्ति फेरि पाउन सकिन्छ, तर गएको समय फेरि कहिल्यै पाइँदैन। प्रत्येक क्षणको जसले सदुपयोग गर्ला त्यसैको मृत्यु माङ्गलिक हुनेछ।

कण-कणको सदुपयोग गर र क्षण-क्षणको पनि। एउटा पनि कण एउटा पनि क्षणको दुरुपयोग नगर। कणको जसले दुरुपयोग गर्छ त्यो दरिद्र हुन्छ र क्षणको व्यर्थ खर्च गर्ने मानिस आफ्नो जीवन बिगार्दछ। प्रतिदिन संयमलाई बढाऊ। प्रतिपल जो ईश्वरको स्मरण गर्दछ त्यसको मृत्यु पनि सुध्रिन्छ।

भीष्म आजीवन संयमी भएर रहे। संयम बढाएर प्रभुको सतत् स्मरण गर्ने बानी भयो भने मरण सुध्रिन्छ।

जीवनको अन्त्यकाल बड़ो कठिन छ। त्यस बखत प्रभुको स्मरण गर्न सजिलो छैन।

जन्म जन्म मुनि जतन कराहीं।
अन्त राम कहि आवत नाहीं॥

समस्त जीव जसको ध्यानमा बितेको छ त्यही अन्तकालमा उसलाई स्मरण हुने छ।

ईश्वर तबसम्म कृपा गर्नुहुन्न जबसम्म मानिस स्वयं कुनै प्रयत्न गर्दैन। सम्पूर्ण जीवन भगवान्‌को स्मरणमा बित्यो र कदाचित् त्यो व्यक्तिले अन्तकालमा भगवान्‌लाई बिर्सियो भने पनि भगवान् उसलाई संझनुहुने छ।

सत्कर्म कहिल्यै पनि खेर जाँदैन।

भक्तले मलाई बिर्सिए पनि म उसलाई बिर्सिन्न—यस्तो भगवान्‌ले भन्नुभएको छ। भीष्मपितामहको मृत्युलाई उज्यालो पार्नका निमित्त द्वारकाधीश पाल्नुभएको थियो। भीष्मपितामहले महाज्ञानको विश्वास गर्नुभएन र उहाँ प्रभुकै शरणमा पर्नुभयो।

भीष्मपितामहको मृत्युले युधिष्ठिरलाई दुःख चाहिँ भयो तर सद्‌गतिले उहाँलाई आनन्द पनि लाग्यो।

धर्मराज राजसिंहासनमा बस्नुभयो। हस्तिनापुरको शासन गर्न थाल्नुभयो। उहाँको राज्यमा अनिकाल छैन, न अति वृष्टि हुन्छ र न अनावृष्टि। धर्मराजको राज्यमा न कोही भोको छ न कोई बिरामी।

धर्मको मर्यादा पालन गर्ने मानिस कहिले पनि दुःखी या बिरामी हुँदैन।

अनेक जन्महरूको भोगवासना अहिले मनमा छ। त्यसको बिलकुलै नाश चाहिँ हुन सक्दैन तर विवेकले उपभोग गर्‍यौ भने अन्त्यकालसम्म इन्द्रियहरू स्वस्थ हुन्छन्। धर्मको मर्यादामा रहेर मानिस धर्म, अर्थ र कामको उपभोग गर्छ भने त्यो दुःखी हुने छैन। संयम र सदाचार नबढ्‌का खण्डमा धन सम्पत्तिले पनि आनन्द दिन सक्दैन।

सूतजी सावधान गराउनुहुन्छ।

धर्मराजको राज्यमा धर्मको पनि शिक्षा दिइन्थ्यो।

'आरोग्यं भाष्करात् इच्छेत्, मोक्षं इच्छेत् जनार्दनात्।'

सूर्यनारायण प्रत्यक्ष भगवान् हुनुहुन्छ र बाँकी सबै देवभावनाले सिद्धि दिनुहुन्छ। सूर्यनारायणको प्रत्यक्ष दर्शन हुन्छ। उहाँको दर्शनलाई भावनाको त्यस्तो कुनै आवश्यकता छैन। यिनै प्रत्यक्ष देवको आराधना गर।

धर्मराज पनि सूर्यनारायणको उपासना गर्नुहुन्थ्यो।

सूर्यनारायणको आराधना नगरिकन बुद्धि शुद्धि हुँदैन। धेरै नभएको पनि कमसेकम बाह्र सूर्य नमस्कार गर।

मेरा सूर्यनारायण र श्रीकृष्ण एउटै हुन्। कृष्ण स्वयं सूर्यनारायण हुन्। श्रीकृष्ण भगवान्‌ले स्वयं गीतामा भन्नुभएको छ ज्योतिषां आदित्यो।

श्री सूर्यनारायणको उपासनाको क्रम बताइएको छ। उनको उपासना गर्ने मानिस कहिल्यै दरिद्र हुँदैन।

महाभारतको वनपर्वमा एउटा कथा छ। युधिष्ठिर सूर्यनारायणको उपासना गर्नुहुन्थ्यो। वनमा सूर्यदेवले उहाँलाई एउटा अक्षय-पात्र दिनुभयो।

रामलाई पनि सूर्यले शक्ति दिएको थियो र त्यही शक्तिद्वारा उहाँले रावणलाई मार्नुभो। रामले पनि यही आदर्श सामुन्ने राख्नुभएको थियो म स्वयं ईश्वर हुँ तापनि सूर्यनारायणको उपासना गर्छु।

धर्मका साथ नीतिको विवाह अर्थात् सम्बन्ध नभएसम्म नीति विधवा जस्तो हुन्छे र विना नीतिको धर्म विधवा जस्तो हुन्छ।

अर्थोपार्जन गर्नु धर्म हो। तर त्यो धर्मानुकूल हुनुपर्छ।

धर्मराजको पवित्र राज्यमा कसैको घरमा पनि कष्ट थिएन। पुत्र, माता-पिताको आज्ञापालन गर्थे। त्यस समय राजा धर्मनिष्ठ हुनाको कारणले प्रजा पनि धर्मनिष्ठ थिए।

युधिष्ठिरको राज्यतिलक गरेर श्रीकृष्ण द्वारिका जानुभयो, त्यहाँका जनताले रथयात्राको दर्शन गरे।

रथमा राज भएका द्वारिकाधीशको रोज दर्शन गर। उहाँका हातहरूमा शङ्ख, चक्र, गदा, पद्म छ, रथ सुनको छ। एउटा झाँकी जस्तो गऱ्यौ भने हाम्रो हृदय पग्लिन्छ। यस शरीर-रथमा श्रीकृष्णको झाँकी गर। हृदय सिंहासनमा बसेर भक्तजन प्रभुको दर्शन गर्दछन्। ज्ञानीजन समाधिको अवस्थामा निधारमा ब्रह्म-दर्शन गर्दछन्।

द्वारिकाधीशले द्वारिकामा प्रवेश गर्नुभयो। नगरवासी भन्दथे 'यहाँका कृपाले त्यसो त सबै कुरा ठीक थियो। एकमात्र दुःख यो थियो तपाईंको दर्शन गर्न पाउँदैनथ्यौं।'

सबैलाई कृष्ण-दर्शनको आतुरी छ।

भगवान्‌ले अनेक रूप धारण गर्नुभयो र सोह्र हजार रानीहरूका साथ राजप्रासादमा प्रवेश गर्नुभयो। भगवान् बोल्नमा चतुरो हुनुहुन्छ। सबै रानीहरूलाई भन्नु हुन्छ 'म तिम्रै घरमा पहिले आएको छु।'

भोलिपल्ट रानीहरूका बीचमा प्रेम-कलह भयो। भगवान्‌को यो दिव्य लीला हो। त्यस समयमा कामदेव लड्न आए। रासलीलामा कामदेव हारेका थिए तैपनि उनलाई मनमा असन्तोष नै थियो उस बखत कृष्ण बालक नै हुनुहुन्थ्यो। त्यस समयमा म हारेको थिएँ त्यो कुनै आश्चर्यको कुरा भएन।

कामदेवले श्रीकृष्णलाई भने जब सुन्दर युवतीहरू तपाईंको सेवा गरिरहलान् त्यस वेलामा मलाई झगड़ा गर्नुछ। सुन्दर प्रेम हाव-भावद्वारा रानीहरूले श्रीकृष्णलाई प्रसन्न पार्ने प्रयत्न गरे। तर श्रीकृष्ण अजेय स्वयं हुनुभयो।

वनको वृक्षमुनि बसेर कामको दमन गर्नु ठीक हो तर अनेक रानीहरूका साथ बसेर कामलाई जितेर बस्ने चाहिँ परमात्मा हो।

श्रीकृष्णको चिन्तन मनन गर्नेलाई कामले सताउन सकेन भने श्रीकृष्णलाई त्यसले कसरी सताउला ? ईश्वर त्यही हो जसलाई कामले कहिल्यै अधीन गर्न नसकोस्। कामको अधीन भयो भने त्यो जीव हो।

श्रीकृष्णलाई कामदेवले पराजित गर्न सकेनन्। उनलाई आफ्नो धनुषवाण त्याग्नुपर्‍यो।

श्रीकृष्ण योगेश्वर हुनुहुन्छ। शङ्कर पनि योगेश्वर हुनुहुन्छ। प्रवृत्तिमा पूर्णतः बसेर पनि त्यसमा आसक्त नबन्नु, त्यही हो योगेश्वर। सम्पूर्ण निवृत्तिमा रहेर स्वरूपमा स्थिर रहनु त्यही हो योगेश्वर।

बाह्रौं अध्यायमा परीक्षित्को जन्म कथा छ। उत्तराले बालक जन्माइन्। ऊ चारैतिर हेर्न थाल्यो। आमाका पेटमा मलाई चतुर्भुज स्वरूप जो पुरुष जो देखिन्थे ती कहाँ छन् ? परीक्षित् भाग्यशाली थिए उनलाई आमाको गर्भमा नै भगवान्को दर्शन भयो। यही कारण हो उनी उत्तम श्रोता भए।

युधिष्ठिरले ब्राह्मणहरूलाई सोध्नुभयो 'बालक कस्तो होला ?' ब्राह्मणहरूले भने—'सबै ग्रह दिव्य छन् तर मृत्यु स्थानको केही गड़बड़ी छ। उसको मृत्यु सर्पदंशबाट हुनेछ।' यो सुनेर धर्मराजलाई दुःख भयो। मेरो वंशको पुत्र सर्पदंशले मर्ने यो ठीक भएन। ब्राह्मणहरूले उहाँलाई ढाड़स दिए। सर्पदंशबाट मृत्यु भए पनि उसलाई सद्गति मिल्ने छ। उसका अन्य ग्रह शुभ छन्। यी ग्रहहरूलाई हेर्दा यस्तो लाग्दछ यस जीवात्माको यो अन्तिम जन्म हो।

नवौं स्थानमा स्वगृही उच्च क्षेत्रको वृहस्पति जसको हुन्छ त्यो धर्मात्मा बन्दछ।

परीक्षित् दिन परदिन ठूलो हुँदै गइरहेछन्।

चौध र पन्ध्र अध्यायमा धृतराष्ट्र-पाण्डव मोक्षको कथा छ। सोह्र अध्यायबाट परीक्षित् चरित्रको आरम्भ हुन्छ।

विदुरजी तीर्थयात्रा गर्दै प्रभास-क्षेत्रमा आए। उनले खबर पाए सबै कौरवहरूको विनाश भयो र धर्मराज सिंहासनमा बसेका छन्। केवल मेरा भाइ धृतराष्ट्र मात्र धर्मराजकहाँ मुट्ठीभरि खानलाई बाँचेका छन्।

विदुरजी आए। धर्मराजले उनको स्वागत गर्नुभयो। विदुरजी सम्मान माग्न आएका थिएनन्। आफ्ना बन्धुलाई बन्धनमुक्त गराउन आएका थिए। उनले छत्तीस वर्षसम्म तीर्थयात्रा गरे।

**उत्तमा सहजावस्था, मध्यमा ध्यान धारणा।**
**अधमा मूर्तिपूजा च, तीर्थयात्राऽधमाऽधमा॥**

यसको कारण यो हो यात्रामा अन्य चिन्ताहरूका कारणले परमात्माको नियमित ध्यान हुन पाउँदैन। सत्कर्म नियमपूर्वक हुँदैन, त्यसकारण तीर्थयात्राको अपेक्षा भगवान्को ध्यान श्रेष्ठ छ।

देवीभागवत्मा लेखेको छ घरको भन्दा ज्यादा सत्कर्म तीर्थयात्रामा नहुनसके त्यो तीर्थयात्रा व्यर्थ छ।

विदुरजीले छत्तीस वर्ष यात्रा गरे तर कुरा भने अति संक्षेपमा गरे।

आत्मप्रशंसा मृत्यु हो। आफ्ना सत्कर्महरूको वर्णन आफ्नै मुखले नगर।

विदुरजीले छत्तीस वर्षका यात्राको छत्तीस शब्दहरूमा वर्णन गरे। आजकल मानिस हामीले यति यात्रा गऱ्यौं भनेर बारम्बार भन्दछन्।

आफ्ना हातबाट जुन पनि काम होस् त्यसलाई बिर्सिदेऊ र जो पाप छ त्यसलाई संझिराख। सुखी हुने यो मार्ग हो। तर मानिसले पुण्यलाई त स्मरण गर्छ तर पापलाई बिर्सिन्छ।

युवास्थामा जसले धेरै पाप गरेको छ वृद्धावस्थामा त्यसलाई निद्रा पर्दैन।

मध्यरात्रिका समयमा विदुरजी धृतराष्ट्रकहाँ गए—उनी ब्यूँझिरहेका थिए। विदुरजीले भने 'निद्रा आइरहेको छैन क्या ? जुन भीमलाई तिमीले विषयुक्त लड्डु ख्वायौ त्यसैको घरमा अब तिमी मीठो लड्डु खाइरहेछौ। धिक्कार छ तिमीलाई। पाण्डवहरूलाई तिमीले दुःख दियौ। तिमी यस्ता दुष्ट हौ। राजसभामा द्रौपदीलाई बोलाउन तिमीले सम्मति दिएका थियौ। पाण्डवहरूलाई छोड़ेर अब यात्रा गर।'

धृतराष्ट्र भन्दछन्—मेरा भतिजा बड़ा असल छन्। मेरो खूब सेवा गर्छन्। तिनलाई छोड़ेर जान मन लाग्दैन।

विदुरजी भन्दछन्। 'अब तपाईंलाई भतिजा प्यारा लागिरहेछन्। संझनोस् तपाईंले पाण्डवहरूलाई मार्न कति कोशिश गरेको थियो। भीमसेनलाई लड्डुमा विष हालियो। लाक्षागृहमा आगो लगाइयो इत्यादि। यी धर्मराज धर्मका मूर्ति हुन्। तपाईंका अपकारको बदला उपकारद्वारा दिइरहेछन्। मलाई लाग्छ केही दिनमै पाण्डवहरू प्रयाण गर्नेछन् र तपाईंलाई सिंहासनमा बसाल्नेछन्। तपाईं अब मोहलाई छोड्नोस् तपाईंको शिरमा काल घुमिरहेछ। तपाईंको मुखमा मलाई मृत्युको दर्शन भइरहेछ। चित्त बुझाएर घर त्याग गरेमा कल्याण होला नत्र त कालको धक्काले घर छोड्नुपर्नेछ। घर नछोड़िकन कुनै उपाय छैन। आफैंले संझी-बुझिकन घर छोड्नु बुद्धिमानी हो। केही समयमै तपाईंको मृत्यु हुनेछ।'

यो जीवले सोची-संझीकन स्वयं केही छोड्न खोज्दैन। तर जब डाक्टरले भन्छ 'ब्लड प्रेसर छ, कामकाज बन्द गर। आराम गरेनौ भने खतरा छ।' तब त्यो डरले घरमा बस्छ। यस प्रकार डाक्टरले भनेका खण्डमा कामकाज छोड्दछ।

धृतराष्ट्र भन्दछन्—'भाइ, तिमीले भनेको ठीक हो, तर म अन्धो छु एकलै कहाँ जाऊँ।'

विदुरजी भन्छन् 'दिउँसै चाहिँ धर्मराज तपाईंलाई जान दिँदैनन्, त्यसकारण म मध्यरात्रिमै तपाईंलाई लिएर जान्छु।'

धृतराष्ट्र र गान्धारीलाई लिएर सप्तस्रोत तीर्थ गए।

बिहान भयो र युधिष्ठिर धृतराष्ट्रको महलमा आए। काका देखिएनन्। युधिष्ठिरले सोचे 'मैले उनका सय पुत्रलाई मारिदिएँ र उनले आत्महत्या गरे होलान्। जबसम्म काका-काकीको समाचार पाउन्नँ तबसम्म म पानीसम्म पिउने छैन।'

धर्मात्मा व्यथित भएका वेलामा उनीसँग भेट गर्न सन्तहरू आउँछन्। धर्मराजकहाँ त्यस बखत नारदजी आए। धर्मराजले उनीसँग भने 'मेरा पापहरूका कारणले नै काका जानुभयो।'

वैष्णव त्यो हो जो आफ्नै दोषहरूलाई सोचिरहन्छ र अर्काका दोषहरूलाई सोच्दैन।

नारदजी संझाउनुहुन्छ। 'धृतराष्ट्रलाई त सद्गति पाइने भएको छ। चिन्ता नगर। हरेक जीव मृत्युको अधीन छ जहाँ काका जानुहुनेछ त्यहाँ तिमीलाई पनि जानु छ। आजको पाँचौ दिनमा काकाको सद्गति हुनेछ र फेरि तिम्रो पालो आउने छ। काकाका निमित्त अब नरोऊ। अब तिमी आफ्नै बारेमा सोच।'

मृत्युले ग्रसित व्यक्ति कहिल्यै फर्केर आउँदैन। जीवित आफ्ना निमित्त मात्र रोओस् त्यही ठीक छ। एउटाको मृत्युपछि अर्को रुन्छ। तर रुने मानिस यो संझँदैन जो त्यहाँ गयो त्यसका पछि उसले पनि जानु छ। मलाई मेरो मृत्यु उज्ज्वल गर्नुछ भनेर सँधैं सोच। तिमीलाई अब ६ महीना बाँकी छ। तिमी आफ्नो मृत्युको सोच गर।

सूतजी सावधान गर्नुहुन्छ।

शैय्यामा सुतेपछि अर्थात् अन्त्यकालमा आएको सचानापन के कामको ? त्यो निरर्थक छ।

नारदजी भन्नुहुन्छ—तिमीलाई म भागवत प्रेरणाले सावधान गर्नका निमित्त आएको छु। विदुरजी धृतराष्ट्रलाई सावधान गर्न आउनुभएको थियो। म तिमीलाई सावधान गर्न आएको छु। छ महिनापछि कलियुग शुरू हुन्छ। अब तिमी कसैको पनि चिन्ता नगर। तिमी आफ्नै चिन्ता गर।

युधिष्ठिरले कैयन् यज्ञ गर्नुभयो। भगवान् द्वारिका जानुभयो तर साथमा अर्जुनलाई पनि लिएर जानुभयो। प्रभुको इच्छा थियो यदुकुलको नाश भए बेस हुँदो हो र यदुकुलको सर्वनाश भयो।

युधिष्ठिरले भीमलाई भन्नुभयो 'नारदजीले भनेको समय आइरहेको जस्तो मलाई लाग्छ। मलाई कलियुगको छायाँ देखिइरहेको छ। मेरा राज्यमा अधर्म बढ़िरहेछ। मन्दिरमा भगवान्‌को स्वरूप आनन्दमय देखिँदैन। स्याल र कुकुर मेरा सामुन्ने रुन्छन्। तिमीलाई अरू म के भनूँ।'

म हिजो घुम्न गएको थिएँ। एउटा कौका साथमा एक चीज देखें। मैले सोधें यो क्या हो ? तब उसले भन्यो यो ताल्चा हो। मानिसहरूका घरबाट चोरी हुन थालेको छ। त्यसकारण ताल्चा लाउनुपरेको छ।

आज भन्दा ६ महीना पहिलेको कुरा हो। एउटा सेठले एउटा ब्राह्मणलाई एउटा घर बेचेको थियो। त्यो घरको जगबाट केही सुन पाइयो। ब्राह्मण त्यो सुन लिएर सेठकहाँ गए। सेठ धर्मनिष्ठ थियो। उसले भन्यो मैले घर तिमीलाई बेचेको थिएँ। त्यसकारण त्यसबाट जे-जति भेटियो त्यो सबै तिम्रै हो। ब्राह्मणले भने तर त्यस सम्पत्तिमा मेरो कुनै अधिकारै छैन।

मेरो राज्यका जनता कति धर्मनिष्ठ थिए। त्यही समय मैले भनेको थिएँ ६ महीनामै यी दुइजनाको मन कलुषित होला, त्यस्तै भयो। हिजो ती दुवै जना मकहाँ आएका थिए र धनमाथि आफ्नो अधिकार देखाउन थालेका थिए। आफ्ना साथ एक-एक वकील पनि ल्याएका थिए। लाग्दछ अब मेरो पवित्र राज्यमा कलिको प्रवेश भइसकेको छ।

कलि अर्थात् कलहको रूप। जुन घरमा कृष्ण कीर्तन, कृष्णको कथा हुन्छ त्यहाँ कलि जान सक्दैन।

अर्जुन यतिञ्जेलसम्म आएका थिएनन् र भीमसेन र धर्मराज यस्तै कुरा गरिरहेका थिए। त्यत्तिकैमा अर्जुन पनि आइपुगे। उनको मुखमा तेजको आभास पनि देखिँदैन थियो। युधिष्ठिरले उनलाई सोधे तेज कहाँ गयो ? अर्जुन, तिमीले ढोकामा आएका अतिथिको सत्कार नगरिकन भोजन त गरेनौ ?

अतिथि भगवान्‌का स्वरूप हुन्। ढोकामा आएका अतिथि भोकै परे भने यजमानका पुण्यको क्षय हुन्छ। नचिकेता यमराजको घरमा तीन दिनसम्म भोकै बसिरहेका थिए। यमराजले आएर सोधे तिमीले यो तीन दिनमा के खायौ ? उनले भने-तपाईंको पुण्य।

मनुष्य शरीरको अपेक्षा आँखा र मनले धेरै पाप गर्छ।

गीतामा भगवान्‌ले अर्जुनलाई प्रमाणपत्र दिनुभएको छ उनी अपापी र पवित्र छन्। यसैले भगवान्‌ले उनलाई गुह्यतम ज्ञान दिनुभयो।

एक पटक रातका समयमा उर्वशी अर्जुनकहाँ भेट्न आइन्, अर्जुनले उनको मुखसम्म हेरेनन्। उनले उर्वशीलाई भने—माताजी, म भरतखंडको वासी हुँ। मेरा निमित्त परस्त्री माता समान हुन्छिन्।

एकान्तमा जसले कामलाई पराजित गर्छ त्यही वीर हो।

मलाई पूरा विश्वास छ परस्त्री गमनको पाप अर्जुनले गर्न सकेनन्। तर पनि तिनी आज निस्तेज किन छन् ? मलाई चाहिँ यो लक्षण कलियुगको लाग्छ।

धर्मराज अर्जुनसँग सोध्नुहुन्छ—'तिम्रा आत्मस्वरूप परमात्मा श्रीकृष्ण कुशलै हुनुहुन्छ ? उहाँ द्वारिकामै हुनुहुन्छ क्या ?'

अर्जुनले भने—'के भनूँ दाज्यैज्यू ?' मेरा प्रभुले मेरो त्याग गर्नुभएको छ। जसले लाक्षागृहबाट हामीलाई बचाउनु भएको थियो। उहाँ अब स्वधाम सवारी भएको छ। प्रभुले मलाई अन्त्य कालमा साथ लानु भएन। उहाँले मलाई भन्नुभयो तिमी जब मसँग आएकै थिएनौ भने तिमीलाई म आफ्ना साथ कसरी लान सक्छु ? मैले तिमीलाई जो गीता शास्त्रको ज्ञान दिएको छु त्यसैले तिम्रो रक्षा गर्नेछ। दाज्यैज्यू, आजसम्म म कहिल्यै हारेको थिइनँ। तर कृष्णविरहले व्याकुल भएको म आज द्वारिकाबाट फर्कंदा बाटामा काबाहरूले मलाई लुटिलिए। मलाई लाग्छ ममा जो शक्ति थियो

त्यो मेरो होइन रहेछ, द्वारिकाधीशकै रहेछ र उहाँ गएपछि त्यो शक्ति पनि गयो। मलाई प्रभुका ती अनन्त उपकारहरूको संझना भइरहेछ। लाक्षागृह-दहन आदि कैयन् संकटावस्थामा उहाँले हाम्रो रक्षा गर्नुभएको थियो।

कृष्ण कृपालाई संझँदा-संझँदै अर्जुन कृष्णविरहमा रोइरहेछन्।

धर्मराजसँग अर्जुन भनिरहेका छन् द्रुपदराजको राजसभामा मैले जो मत्स्यवेध गरेको थिएँ त्यो भगवान्को शक्तिको बलमा मात्र गरेको थिएँ।

कैयन् महाराजाले मत्स्यवेधन गर्न सकेका थिएनन्। कर्णले सोचे म मत्स्यवेध गरौं कि ? कृष्णाले सोच्नुभयो कर्णले मत्स्यवेध गऱ्यो भने मेरो अर्जुन छुट्ने भएर द्रौपदी कर्णसँगै जाने हुन्छिन्। यस्तो विचार गरेर श्रीकृष्णाले सभामा कर्णको अपमान गराउनुभयो। कृष्णाले एउटी नोकर्नीलाई द्रौपदीकहाँ पठाउनुभयो। द्रौपदीले छोटो जातको कर्णसँग विहा गर्न नामंजूर गरिदिइन्।

ममा साहसै थिएन, तर ममाथि भगवान्को कृपादृष्टि थियो जसबाट ममा शक्तिसंचार भयो र त्यस दिन मैले मत्स्यवेध गर्न सकें।

लाक्षागृहको आगोमा पाण्डव मरिसके भन्ने भान पार्दा दुर्योधनले उनीहरूको श्राद्ध पनि गराइदिएका थिए।

संसारमा मनरूपी मत्स्य घुम्दछ, फिर्दछ। त्यसलाई विवेकरूपी वाणले मार। जसलाई द्रौपदी हात पर्छिन् त्यसको सारथी भगवान्ले हुनुपर्छ। द्रौपदी कृष्णाभक्तिकै नाउँ हो। मनलाई जबसम्म मार्दैनौ, कृष्णभक्ति प्राप्त हुनेछैन। मनलाई जो प्रिय छ त्यो नगर, मनको इच्छाको वश भएनौ भने बिस्तार-बिस्तार त्यो अंकुशमा पर्दै जान्छ।

आजसम्म मोज शौकमा ( आनन्द-प्रमोदमा ), भोगमा, पापमा कति खर्च भयो त्यसको हिसाब जीव केही पनि राख्दैन। ब्राह्मणलाई यदि केही दिएको छ भने त्यसको संझना गर्छ। हामी अरू के गर्न सक्छौं ? हजार रुपियाँको दान दिएको छ, अन्त्यकाल जीव चिन्ता गर्छ मेरी छोरीको के हुने होला ? मेरो भाञ्जाको के होला ? तर तिमी यो सोच तिम्रो के हुने हो ?

जसमाथि भगवान्को कृपादृष्टि हुन्छ त्यसैले यस मन-मत्स्यलाई मार्न सक्छ। भगवान्को कृपादृष्टि नभएसम्म मार्दैन।

प्रभुको कृपादृष्टि भयो भने जीव मनलाई वशमा गर्नसक्छ। प्रभुको प्रार्थना नगर्नाले मनले मानिसलाई अधोगतिको खाल्डामा फ्याँकिदिन्छ।

अर्जुनलाई कृष्णाको कति उपकार संझना भइरहेछ। 'उहाँले मलाई गीताको उपदेश दिनुभएको थियो। दाज्यू ! एक पटक भगवान्ले मलाई भन्नुभएको थियो केही माग।' बड़ा-बड़ा ऋषि र महात्मा जन्म-मरणको चक्करबाट मुक्ति पाउनको इच्छाले जसको ध्यान गर्दछन् उनीसँग मैले मागें युद्धमा मलाई जीत मिलोस्। अफसोस ! मलाई माग्न पनि आएन।

किरात वधका समयमा मैले शंकरका साथ युद्ध गर्न सकें; त्यो पनि श्रीकृष्णकै प्रतापले।

दाज्यैज्यू, द्रौपदीसँग पनि कत्तिको स्नेह थियो ? द्रौपदीको कपाल तानेर दुष्टजनले उसलाई सभामा घिस्याएर ल्याए। आँसुभरि आँखाले द्रौपदी कृष्णको चरणमा घोप्टिन पुगिन्। उहाँले सभामै प्रतिज्ञा गर्नुभयो यस अपमानको बदला म लिनेछु र कृष्णले ती दुष्टहरूको यस्तो दशा गरिदिनुभयो तिनका पत्नीहरू विधवा बनेर उनलाई आफ्नो केश त्यसै छोड्नुपऱ्यो।

दाज्यैज्यू, त्यो प्रसंग संझना गर्नुहोस् जब हाम्रो नाश गर्नका निमित्त कपट गरेर दुर्योधनले दुर्वासालाई पठाएको थियो सागको एउटै त्यान्द्रोले अक्षय पात्र भरेर कृष्णले हामीलाई त्यस संकटबाट बचाउनु भएको थियो।

दुर्योधनले चार महीनासम्म दुर्वासालाई आफूकहाँ भोजन गराए, उनी प्रसन्न भए। उनले दुर्योधनलाई वर माग भने। दुर्योधनले सोचे दुर्वासाको श्रापबाट पांडवहरूको नाश गर्नु यो राम्रो अवसर छ। हिजो यी ऋषिको एकादशीको अनशन थियो। हुन त सूर्यदेवको अक्षय पात्र पाण्डवहरूसँग छ, तर द्रौपदीले भोजन गरिसकेपछि त्यहाँ पुग्नुहोला र द्रौपदीबाट भोजन नपाएपछि क्रोधित हुनुहोला र पाण्डवहरूलाई श्राप दिनु होला जसबाट पाण्डवहरूको दुर्गति हुनेछ।

दुर्योधनले यस्तो कुविचार गरेर दुर्वासासँग बिन्ती गरे तपाईं आफ्ना दस हजार शिष्यहरू लिएर युधिष्ठिरको आतिथ्य-सत्कार गर्नुहोस् किनभने आफ्ना कुटुम्बको पनि उहाँ गुरुजन हुनुहुन्छ र हो द्रौपदी विचरी भोको नपरून् यसैले पाण्डवहरूले भोजन गरिसकेपछि मात्र तपाईं उहाँ जानु होला।

सन्तको सेवा सद्भावले गरियो भने तब फलीभूत होला तर दुर्भावले गरेका खण्डमा सफल हुने छैन।

चार महीनासम्म दुर्वासालाई आफूकहाँ भोजन गराएर दुर्योधनले पाण्डवहरूको सर्वनाशको इच्छा गरे। यसै दुर्भावनाका कारणले उनको आफ्नै हानि भयो। नत्र भने सन्तहरूलाई भोजन दान गर्नाले पुण्य पाइन्छ। दुर्योधनले सन्तको सेवा त गरे तर कसैको सर्वनाशका हेतुले गरेका थिए र उनीलाई पुण्य मिलेन।

दुर्योधनको विन्तिअनुसार दुर्वासा दस हजार शिष्यहरूका साथ पाण्डवहरूका आँगनमा पुगे। दुर्वासाले युधिष्ठिरलाई भने—'राजन् ! हिजो एकादशीको अनशन थियो र आज हामीलाई बड़ो भोक लागेको छ। तपाईंको घरमा हामी भोजन गर्नको इच्छाले आएका छौं।'

सूर्यनारायणद्वारा पाएको अक्षयपात्र पाण्डव मध्याह्नकालमा आएका ब्राह्मणहरूको भोजन गराउँदछन्। अक्षयपात्रले संकल्पानुसार भोजन दिने गर्थ्यो।

पाण्डवहरू यस्ता भक्त हुन् जो विपदावस्थामा पनि ईश्वरकै कृपाको दर्शन र अनुभव गर्दछन्।

आज द्रौपदीले भोजन गरिसकेकी छन् र अक्षयपात्रबाट केही पनि पाइने संभावनै थिएन। तैपनि युधिष्ठिरले दुर्वासालाई भन्नुभयो, 'बड़ो कृपा भयो म उपर यहाँले हाम्रो आँगन पवित्र गरिदिनुभयो। तपाईंहरूले गंगास्नान गरिहाल्नुहवस्। यत्तिकैमा भोजन तयार हुनेछ।'

धर्मराजको धैर्य त हेर घरमा अन्नको एक दाना छैन र पनि उनले दस हजार ब्राह्मणहरूलाई भोजनको निम्ता दिए।

युधिष्ठिरलाई विश्वास छ र भन्छन् मैले आजसम्म कहिल्यै आफ्नो धर्मको उपेक्षा गरेको छैन। त्यसकारण धर्मस्वरूप प्रभुले मेरो रक्षा अवश्य गर्नुहुनेछ, भीम, अर्जुन, द्रौपदी आदि चिन्ता गरिरहेछन् 'यिनीहरूलाई भोजन कसरी गराउने।' द्रौपदी पनि सोच्छिन् 'अब अक्षयपात्र पनि काम आउन सक्तैन किनभने मैले भोजन गरिसकेकी छु।' द्रौपदी दुःखले कातर भइरहेकी थिइन् 'भोजन नपाएपछि रिसाएर दुर्वासाले श्राप दिनेछन् र मेरा पाण्डवहरूको सत्यानाश हुनेछ।'

द्रौपदी द्वारिकाधीशको प्रार्थना गर्न थालिन् 'नाथ मेरो लाज राखिदिनुहोस्, होइन भने जगत्ले पनि तपाईंको खिसि गर्नेछन्।' द्रौपदीले आर्त्तनाद गरिन् 'जुन प्रकारले आजसम्म तिमीले मेरो सहायता गरेर लाज राखिदिएका छौ उसै किसिमबाट आज पनि मेरो लाज राखिदेऊ। आज मैले यी दस हजार सन्तहरूलाई भोजन दिन सकिनँ भने दुर्वासाले श्राप दिनेछन् र हाम्रो सर्वनाश हुनेछ।'

जीवले जबसम्म आत्तिएर प्रभुलाई प्रेमपूर्वक पुकारा गर्दैन तबसम्म केही हुँदैन। जीवले सङ्कटावस्थामा पुकार्दछ।

द्रौपदीले दुःखले कातर भएर आत्तिएर प्रभुलाई पुकारिन्। परमात्माले द्रौपदीको आर्त्तवाणी सुन्नुभयो र उनको सहायता गर्न भनी आउन तयार हुनुभयो।

भक्त जब सच्चा हृदयले कीर्तन गर्दछ त भगवान्को सिंहासन पनि हल्लिन थाल्छ।

भगवान् हिँड्ने तयारी गर्न थाल्नुभएको थियो। रुक्मिणी थालमा मेवा लिएर आइपुगेकी थिइन्। एकातिर रुक्मिणी कृष्णसँग भोग लागोस् भनेर आग्रह गरिरहेकी थिइन् र भोगपछि जानुस् भन्दै थिइन् भने उता द्रौपदी आर्त्तनाद गरिरहिथिन्। कृष्णले वहाँ जाने सोच्दा रुक्मिणीले 'पहिले भोजन' गर्न आग्रह गर्न लागिन्। भगवान्ले भन्नुभयो 'दस हजार ब्राह्मणहरूलाई द्रौपदीले वनमा भोजन कसरी गराउलिन्? म हिँडें, भोजन म पनि वहीं गर्नेछु।'

द्वारकानाथ दौड़िँदै द्रौपदीको त्यस कुटीमा आउनुभयो जहाँ उनी बड़ो तन्मयतापूर्वक प्रार्थना गरिरहेकी थिइन्। भगवान् त्यहीं प्रकट हुनुभयो।

यस प्रकार तन्मयतापूर्वक कीर्तन गर जसले भगवान्ले अँगालो हालेर तिमीलाई 'आँखा खोल, म आइपुगें' भन्न सकून्।

भगवान्ले द्रौपदीलाई भन्नुभयो, 'हेर म आइपुगेको छु। मलाई धैरै भोक लागेको छ। केही खान देऊ।' द्रौपदीले हात जोड़ेर भनिन् 'हामी लुटिएका छौं, हाम्रो घरमा केही छैन। तपाईं ठट्टा नगर्नुहोस्। दस हजार सन्तहरूलाई भोजन गराउनु छ। यसैले मैले तपाईंको पुकार गरेकी हुँ। तपाईंले त्यसको व्यवस्था गरेर हाम्रो लाज राखिदिनु भएमा बड़ो कृपा हुने थियो।'

भगवान् भन्नुहुन्छ 'ती सन्तहरूको भोजनको प्रबन्ध चाहिँ पछिबाट होला तर पहिले मेरा निमित्त केही खानेकुरा ल्याऊ। तिमीले आफ्नो भोजनभन्दा अघिबाट सधैं अलिकति केही राखिदिने गर्थ्यौ भने आज पनि केही राखिदिएको हुनुपर्छ त्यो मलाई देऊ।'

द्रौपदी भन्दछिन्, 'नाथ ! आज तर मैले बिर्सिएँ, त्यसकारण तपाईंका निमित्त पनि केही रहेन।'

भगवानले भन्नुभयो 'त्यो तिम्रो अक्षयपात्र मलाई देखाऊ त। शायद मेरा निमित्त त्यसमा केही होस्।' द्रौपदीले प्रभुका हातमा अक्षयपात्र राखिदिइन्। उनले देखे सागको एउटा पात त्यहाँ बाँकी रहेको।

त्यसो तर अक्षयपात्रमा त्यो पात कहाँबाट आउन सक्थ्यो र ? तर भगवान्ले प्रेम प्रयोगबाट पात उत्पन्न गरिदिनु भयो। उहाँले त्यो पातको भोजन गर्नुभयो।

परमात्मालाई जीव जब प्रेमपूर्वक केही दिन्छ भने उहाँ तृप्त भइहाल्नु हुन्छ। अन्तर्यामी रूपबाट उहाँ सबै जीवहरूमा व्याप्त हुनुहुन्छ, त्यसकारण उहाँ जब तृप्त हुनुहुन्छ भने सबै जीवहरू पनि तृप्त हुन्छन्। परमात्मालाई हजारौं पटक भोग लाग्दछ। कृष्णलाई रोज भोग लगाऊ। कुनै दिन केही पनि उहाँले ग्रहण गर्नुभयो भने तिम्रो डुङ्गा पार भयो। परमात्मालाई अलिकति पनि भोजन गरायौ भने सारा जगत्लाई भोजन गराएको पुण्य मिल्ने छ।

भगवान् द्रौपदीलाई भन्नुहुन्छ आज जगत्का सब जीव तृप्त भए। भगवान् दुर्वासा र अरू दस हजार सन्त पनि तृप्त थिए।

युधिष्ठिरले जान लागेका ब्राह्मणहरूलाई रोक्ने आज्ञा दिए। भीम सन्तहरूलाई बोलाउन जान्छन् तर वहाँ ती तृप्त भएर डकारिरहेका थिए। तिनीहरूले भोजन गर्न आउने कुरै गर्दैन थिए।

दुर्वासाले सोचे 'यो काम कृष्णकै हुन सक्छ।' उहाँले भीमलाई सोध्नुभयो 'कहीं द्वारिकाबाट कृष्ण आउनुभएको छैन ?' भीमले भने उहाँ पहिल्यै आइपुग्नुभएको हो र द्रौपदीसँग कुरा गर्दै हुनुहुन्छ। उहाँ भन्नुहुन्छ दुर्वासा मेरा गुरु हुनुहुन्छ। त्यसकारण उहाँलाई आज प्रेमले भोजन गराउन चाहन्छु।

दुर्वासाले भने 'कृष्ण मेरा गुरुका पनि गुरु हुन् म उनको गुरु होइन। अब मलाई भोजन गर्ने केही आवश्यकता छैन। तिम्रो संयम, सदाचार, धर्मपालन, कृष्णभक्ति, कृष्णप्रेम देखेर मलाई भोजन नगरे पनि तृप्ति भएको छ। म सन्तुष्ट छु।' दुर्वासाले आशीर्वाद दिए 'तिमीहरूको विजय हुने छ र कौरवहरूको विनाश हुनेछ।'

दाज्यैज्यू, सेवा दुर्योधनले गरे तर आशीर्वाद तपाईंले पाउनुभयो।

शङ्कर स्वामी भन्नुहुन्छ 'यदि जीव र ब्रह्म एक नभए श्रीकृष्ण पातको भोजन गर्नुहुने र दुर्वासा तृप्त हुने यस्तो कतै हुन सक्छ ? जीव र ईश्वरको भेद आभास मात्र हो र तत्व चाहिँ एउटै हो।'

भगवान्को स्वधामगमन र यदुवंशको विनाशको समाचार सुनेर युधिष्ठिरले स्वर्गारोहणको निश्चय गरे। परीक्षित्लाई राज्यसिंहासन दिए। पाण्डवहरूले द्रौपदीलाई लिएर स्वर्गारोहणका निमित्त हिमालयतर्फ प्रयाण गरे। केदारनाथमा उनले शिवजीको पूजा गरे। जीव र शिवको मिलन भयो। त्यसका अगाड़ि निर्वाण पन्थ छ। पाण्डवहरूले त्यही बाटो लिए। हिँड्दा-हिँड्दा सबैभन्दा पहिले द्रौपदीको पतन भयो, किनभने उनी पनि पतिव्रता थिइन्, तर अर्जुनका प्रति उनको ज्यादा प्रेम थियो, उनी उनका प्रति पक्षपातको भाव राख्थिन्।

दोस्रो पतन सहदेवको भयो, किनभने उनलाई आफ्नो ज्ञानको अभिमान थियो। तेस्रो पतन नकुलको भयो, किनभने उनलाई आफ्नो रूपको अभिमान थियो। त्यसपछि अर्जुनको पतन भयो। यिनलाई आफ्नो बलको अभिमान थियो।

त्यसपछि भीमको पतन भयो। उनले धर्मराजसँग सोधे, 'मेरो पतन किन भयो ? मैले त कहिल्यै कुनै पाप गरेको थिइनँ।'

युधिष्ठिरले भने—'धेरै खान्थिस् र तेरो पतन भएको हो।'

खाँदाखेरि आँखा खुला राख, तर सन्तहरूलाई र देवहरूलाई भोजन गराउँदा आँखा चिम्ल।

धर्मराज एक्लै अगाड़ि बढ्न थाले। धर्मराजको परीक्षा गर्नलाई यमराज कुकुरको रूप लिएर उनको नजीक आए। उनले दोस्रो रूप पनि लिए र युधिष्ठिरलाई भने 'म तिमीलाई स्वर्ग लैजान्छु तर तिम्रा पछि-पछि जो कुकुर आइरहेछ त्यसलाई स्वर्गमा लैजान पाइँदैन।' त्यसो भन्दा युधिष्ठिरले भन्नुभयो जो मेरा साथ-साथ आइरहेछ त्यसलाई म एक्लै कसरी छोड़िदिऊँ ? त्यसलाई छोड़ेर म स्वयं स्वर्गमा जान सक्दिनँ।

सात पाइला साथसाथै हिँड्ने मानिस मित्र हुन्छ।

धर्मराज सदेह स्वर्ग गए। तुकाराम पनि सबैलाई राम-राम भनेर स्वर्ग गएका थिए।

> आम्हीं जातो आमुच्या गाँवा,
> आमचा राम-राम ध्यावा।

यसो भन्दै उनी स्वर्ग गए।

मीराबाई पनि सदेह स्वर्ग गएकी थिइन्। उनी द्वारकाधीशमा सदेह मिलिगएकी थिइन्। लीन भएकी थिइन्। मेवाड़मा उनले बहुत कष्ट पाएकी थिइन् र उनले मेवाड़ छोड़िदिइन्। उनी गएपछि मेवाड़ बहुतै दुःखी भयो। त्यहाँ यवनहरूको आक्रमण भयो। राणाजीले सोचे मीरा फेरि मेवाड़

आइदिए देश सुखी हुँदो हो। राणाजीले ब्राह्मणहरूलाई र भक्तहरूलाई मीरा बोलाउन पठाए। मीराले उनीहरूलाई भनिन्—'भोलि यदि मेरा द्वारकानाथको आज्ञा भयो भने म उहाँका साथ आउने छु।'

अगिल्ला दिन मीराले दिव्य शृंगार गरिन्। उनी आतुरिएकी थिइन् आज आफ्नो गिरिधर गोपालसंग, आफ्नो प्राणप्रियतम श्रीकृष्णसँग भेट्नु छ। म यस संसारमा अब बस्न चाहन्नँ। कृपा गर्नुहोस् मेरा नाथ ! कीर्तनका साथ-साथ उनी नाच्न थालिन्। आज उनको अन्तिम कीर्तन थियो। द्वारकानाथले उनलाई आफ्नो हृदयमा लगाउनुभयो। मीरा सदेह द्वारकाधीशमा विलीन भइन्। कृष्णभक्तिले उनको शरीर यति दिव्य भएको थियो त्यो सशरीर कृष्णमा विलीन भयो।

आत्मा र परमात्माको मिलन कुनै आश्चर्यको कुरा होइन। तर कृष्णप्रेमले जड़ शरीर पनि चेतन बन्दछ र चेतनमा विलीन भइहाल्छ। दिव्य पुरुष सशरीर परमात्मामा गएर मिल्दछ। प्रयाण र मरणमा भेद छ। अन्तिम साससम्म नित्यकर्म गर्दै रहोस् त्यसलाई प्रयाण भनिन्छ र मलिन अवस्थामा 'हाय-हाय' गर्दै देह छोड्यो भने त्यसलाई मरण भनिन्छ।

पाण्डव प्रभुका धाम गए। उनको मृत्यु उज्ज्वल भयो किनभने उनको जीवन श्रेष्ठ थियो र शुद्ध थियो। उनीहरूले आफ्ना जीवनकालमा कहिल्यै धर्मलाई छोड़ेका थिएनन्।

धनभन्दा धर्म श्रेष्ठ हो। धन यस लोकमा केही सुख दिन्छ र कहिले-कहिले दुःख पनि दिन्छ। तर धर्मले यो जीवन र परलोक दुवैलाई उज्यालो गर्दछ। धर्म मृत्युपछि पनि सँगसँगै आउँछ।

अब परीक्षित् राज्य गर्न थाले। उनले धर्मद्वारा प्रजापालन गरे। तीन अश्वमेध यज्ञ पनि गरे।

अश्वमेध यज्ञका समय घोड़ालाई स्वतन्त्र छोड़ी घुम्न दिइन्छ। वासना भनेकै घोड़ा हो। वासना कहीं पनि बाँधिदैन। आत्मस्वरूपमा विलीन भएपछि मात्र त्यो अंकुशमा पर्छ। कुनै विषयमा वासना नफँसोस् यसको ध्यान राख्नुपर्छ।

इन्द्रिय, शरीर र मनोगत वासनाको नाश तीन यज्ञ हुन्।

परीक्षित्ले यी तीनैवटा यज्ञ गरे। चौथो यज्ञ बाँकी थियो। बुद्धिगत वासनाको नाश चाहिँ शुकदेवजी जस्ता ब्रह्मनिष्ठ गुरुका कृपाले मात्र सम्भव हुन्छ। त्यसकारण चौथो यज्ञ अहिलेसम्म भएको थिएन।

शुद्ध आचार भयो भने विचार शुद्ध हुन्छ। जलशुद्धि र अन्नशुद्धिको मर्यादाहरूका पालनले सिद्धि पाइन्छ। आचार शुद्धि राख। स्वेच्छाचारीको पतन हुन्छ।

परीक्षित्को आचार अति शुद्ध थियो अर्थात् धर्मशास्त्रकथित मर्यादाका अनुसार थियो। त्यसकारण उनमा कलिपुरुषको प्रवेश हुन सकेन। कलिले सोच्यो 'परीक्षित्ले केही पाप गरे भने उनमा प्रवेश गर्न पाउने थिएँ। राजाको मनमा पहिले प्रवेश गरूँ तब प्रजामा घुस्न सकुँला।'

समाजलाई सुधार्न अब अशक्य जस्तो भइसकेको छ। तर व्यक्तिगत जीवन सुध्रन सक्छ। आचार र विचारबाट जो शुद्ध हुन्छ त्यसको घरमा कलि आउन सक्तैन। आज पनि कोही वैष्णव घर यस्ता छन् जहाँ कलिले प्रवेश पाउन सकेको छैन।

शास्त्रको रचना मनुष्यको कल्याणका निमित्त भएको हो। जसले आचार धर्म छोड़िदिन्छ त्यसको विचार पनि अशुद्ध हुन्छ। धर्म माता-पिता हुन्। पत्नी छान्न सकिन्छ तर माता-पिता सकिँदैन। धर्मको परिवर्तिन गर्न सकिँदैन। वर्णाश्रमधर्मको पालनले आचार शुद्ध हुन सक्छ।

गाईको सेवा गर। गाई खान चाहिँ घाँस खान्छिन् तर दिन्छिन् दूध। भगवान्‌ले सम्पत्ति दिएको छ भने गाई पाल। आजकल धन-सम्पत्ति पाए पनि मानिस कुकुर पाल्छन्। कुकुरको अनादर गर्ने कुरा होइन मर्यादालाई छोड़ेर ज्यादा प्रेम नगर। आँगनमा आएको कुकुरलाई खान दिनु धर्म हो, तर कुनै मानिस त्यसलाई मोटरमा चढ़ाएर घुम्छन्-फिर्छन्। अरू म के भन्न सक्छु र यस्ता मानिसलाई ? तर आगामी जन्ममा स्वयं आफू कुकुर हुने चाहिँ तयारी हो।

जीवमात्रमा परमात्मा हुनुहुन्छ। तर प्रत्येकको शरीर भिन्न छ र कर्म पनि भिन्न-भिन्न छ। त्यसकारण हरेकका साथ खाने र पिउने काम इष्ट होइन।

एकादशीका दिन अन्न खानु हुँदैन। एकादशीका दिन अनशन गर्नु धर्म हो तर हामी आफ्नै शास्त्रको कुरा मान्दैनौं। तर जब डाक्टरले 'विषम ज्वर ( टाइफाइड )' भएको छ र एक्काईस दिन भोजन नगर्नु भन्छ भने उसको भनाइअनुसार एक्काईस दिन अनशन गर्छौं।

जस्ता किसिमबाट पापीका मनमा कलिले प्रवेश गर्छ त्यस्तै किसिमबाट शास्त्रको मर्यादा उल्लङ्घन गर्नेका घरमा पनि घुस्छ।

यदि आचार-विचार शुद्ध छ भने कलि तिमीमा प्रवेश गर्न सक्दैन। व्यवहार पनि शुद्ध हुनुपर्छ। सत्यपूर्ण, शुद्ध व्यवहार नगर्ने र केवल प्रत्येक पूर्णिमाका दिन सत्यनारायणको पूजा गर्नाले के लाभ होला ? असत्यभाषीको पूजा सत्यनारायणलाई अस्वीकार्य छ।

एकदिन एक आश्चर्यजनक घटना भयो। परीक्षित् दिग्विजय गर्न भनी निस्केका थिए। घुम्दै-फिर्दै उनी सरस्वती नदीको किनारमा आइपुगे। त्यहाँ गाई-गोबरलाई एउटा कालपुरुषले लट्ठीले पिटिरहेरको थियो।

गोरु धर्मको स्वरूप हो, गाई पृथ्वीकी स्वरूप हुन्।

गाईको आँखाबाट आँसु बगिरहेको थियो। धर्मरूप गोरूले गाईसँग दुःखको कारण सोध्यो। पृथ्वी भन्दछिन् 'श्रीकृष्णले यस पृथ्वीलोकबाट आफ्नो लीला पूर्ण गर्नुभएको हुनाले यो संसार पापमय कलियुगको कुदृष्टिको शिकार हुन गएको छ।'

धर्मको मर्यादाको पालन ठीकसँग गर्‍यौं भने ज्ञान स्वयं आफैं प्रकट हुनेछ ? धर्मारूढ़ भयौ भने ज्ञानगङ्गाको अवतरण हुनेछ। शिवजी नन्दीमाथि अर्थात् धर्ममाथि आरूढ़ हुनुहुन्छ र उहाँको शिरमा ज्ञानगङ्गा हुन्छिन्।

धर्मका ४ अङ्ग मुख्य छन्—( १ ) सत्य, ( २ ) तप, ( ३ ) पतिव्रता र ( ४ ) दया। यी चारवटाको योगफल धर्म हो। यी चारै अङ्गमा जब धर्म आधारित थियो तब सत्ययुग थियो। तीन अङ्गहरूमा जब धर्म आधारित भयो तब त्रेतायुग आयो, दुइ अङ्गमा आधारित हुँदा द्वापरयुग आयो र एउटै अङ्गमा धर्म आधारित भएपछि कलियुग आयो।

सत्य—सत्य भनेको परमात्मा हो। सत्य र परमात्मा भिन्न होइनन्। जहाँ सत्य छ त्यहाँ परमात्मा पनि छन्। जो असत्य बोल्दछ त्यसको पुण्यको क्षय हुन्छ। सत्यका मद्दतले नर नारायण छेउ जानसक्छ। जो भलो बोली बोल्दछ त्यो सत्यवादी हुन सक्छ।

तप—तप गर। हरेक प्रकारका सुखहरूको उपभोग नगर। अलिकति तपश्चर्या सधैं गर जो हरेकप्रकारका लौकिक सुखहरूको उपभोग गर्दछ, त्यसमाथि परमात्माको कृपा दृष्टि हुँदैन। दुःख सहेर परमात्माको आराधना गर्नु तप हो। दुःख सहँदै प्रभु भजन गरेमा त्यही श्रेष्ठ हो। जिब्रोले जो माग्यो ती सबै चीज उसलाई दिने नगर। केही सहन पनि सिक। इन्द्रियहरूको स्वामी आत्मा हो। इन्द्रियले जे माग्यो त्यो उसलाई दिने गर्‍यो भने आत्मा त्यसको नोकर बन्ने छ। विधिपूर्वक अनशन गर्नाले पाप भस्मीभूत हुन्छ। भगवान्का निमित्त कष्ट सहनु, दुःख सहनु तप हो। वाणी र व्यवहारमा संयम र तप हुनै पर्छ।

पवित्रता—कलियुगमा पवित्रता रहेको पो कहाँ छ र। बाहिरबाट सबै पवित्र लाग्छन् र भित्रबाट सब मलिन भएका छन्। वस्त्रहरूको दाग मेटिन सक्छ तर कलेजामा लागेको दाग कहिल्यै मेटिँदैन। जीवात्मा सबै कुरा छोड़ेर जान्छ तर मनलाई ऊ आफ्ना साथै लिएर जान्छ। पूर्वजन्मको शरीर रहँदैन तर मन रहिहाल्छ।

मानिस वस्त्र, अन्न, आचार आदिको रेखदेख धेरै गर्छन्, तर मृत्युका पछि पनि जो आउने वाला छ त्यस मनलाई कसैले हेरचाह गर्दैन्। मृत्युका पछि जो साथ आउने वाला छ त्यसैको चिन्ता गर, त्यसैको हेरचाह गर। जस्ता प्रकारले लुगा सफा राख्छौ त्यसै किसिमबाट मनलाई स्वच्छ राख।

जस्ता प्रकारले संसार व्यवहार चलाउँदै आमाले आफ्ना सन्तानको हेरचाह गर्छिन् सोही तरहले व्यावहारिक कर्म गर्दै ईश्वरका साथ सम्बन्ध कायम रख। सधैं सोच्दै र सम्हालिँदै रही आफ्नो मन कहिल्यै नबिगार।

दया—धर्मको चौथो अङ्ग हो दया। श्रुति भन्दछिन् जो केवल आफ्ना निमित्त अन्न पकाउँछ, त्यसले अन्न होइन पाप खान्छ।

धर्मका यी चार चरणहरूमा सत्य सर्वश्रेष्ठ र सर्वोपरि छ।

महाभारतमा सत्यदेवको कथा छ।

लक्ष्मी चञ्चल छिन्। ती कुनै न कुनै पुस्ताको हातबाट गइहाल्छिन्।

एक दिन बिहान सत्यदेव बिउँझे तब उनले आफ्ना घरबाट एक सुन्दरीलाई बाहिर जान लागेकी देखे। राजालाई आश्चर्य भयो। उनले स्त्रीलाई सोधे, 'तिमी को हौ?' तिनले उत्तर दिइन्—'मेरो नाउँ लक्ष्मी हो, म तिम्रो घरबाट जान लागेकी छु।' राजाले अनुमति दिए।

केही बेरपछि एक सुन्दर पुरुष घरबाट बाहिर निस्क्यो। राजाले जब उसलाई सोधे, 'तिमी को हौ?' उसले जवाब दियो—'म दान हुँ, जब लक्ष्मी यहाँबाट गइन् भने तिमीले कसरी दान गर्न सकौला? त्यसैले म पनि लक्ष्मीसँगै गइरहेको छु।' राजाले उसलाई पनि जाने अनुमति दिए। फेरि एउटा तेस्रो पुरुष बाहिर जान लाग्यो। उसले भन्यो 'म सदाचार हुँ। जब लक्ष्मी र दान पनि रहेनन् भने म बसेर पो के गरूँला।' राजाले उसलाई पनि जाने अनुमति दिए। फेरि एउटा अर्को सुन्दर पुरुष बाहिर जान लागेको देखियो। सोधेपछि उसले भन्यो—'म यश हुँ। जहाँ लक्ष्मी, दान र सदाचार हुँदैनन् भने त्यहाँ म बस्न सक्दिनँ।' राजाले उसलाई पनि जान दिए।

केही बेरपछि एउटा अर्को सुन्दर युवक घरबाट निस्किएर जान लाग्यो। सोधेपछि उसले आफ्नो परिचय दियो—'सत्य हुँ। जब तपाईंकहाँ लक्ष्मी, दान, सदाचार र यश बस्दैनन् भने म एक्लै यहाँ कसरी बसूँ। म पनि उनका साथ जान्छु।'

सत्यदेव राजाले भने—'मैले तर तपाईंलाई कहिल्यै पनि छोड़ेको छैन भने तपाईंले मलाई किन छोड़ेर जान लाग्नुभएको। तपाईंलाई आफ्ना साथमा राख्नलाई मैले लक्ष्मी, यश आदिको त्याग गरें। म तपाईंलाई जान दिन्नँ। तपाईंले मलाई छोड़ेर जानुभयो भने मेरो सर्वस्व लुटिने छ।' राजाको यस प्रकारको प्रार्थनाको कारणले सत्य गएन र जब सत्य गएन तब लक्ष्मी, दान, सदाचार र यश पनि राजाको घर फर्केर आए।

जहाँ सत्य हुन्छ त्यहाँ लक्ष्मी, दान, सदाचार र यशलाई आउनु नै पर्दछ। विना सत्यका यी सबै व्यर्थ हुन्छन्। त्यसकारण यो स्पष्ट छ सत्य मात्र सर्वस्व हो। बाँकीका चार सम्पत्तिहरू गए पनि केही चिन्ता छैन तर सत्य जानुहुँदैन। सत्य रह्यो भने सबैथोक रहने छ।

सूतजी वर्णन गर्नुहुन्छ यस अध्यायमा धर्मको वर्णन गरिएको छ। सत्य, तप, पवित्रता र दान यी चार धर्मका प्रधान अङ्ग हुन्। यी चारैको समन्वय धर्म हो। यी चार तत्त्वहरूबाट जो परिपूर्ण हुन्छ त्यही धार्मिक हो।

सत्ययुगमा यी चारै तत्त्व थिए। फेरि त्रेतामा सत्य गयो। द्वापरमा सत्य र तप रहेनन् र कलियुगमा सत्य र तपका साथ-साथ पवित्रता पनि हिँड़िहाल्यो। कलियुगमा केवल दान मात्र रह्यो। कलियुगमा दान मात्र प्रधान छ। 'दानं एकं कलौयुगे।' कलियुगमा दान र दयाका सहाराले मात्र धर्म रहेको छ।

परीक्षित् राजाले देखे एउटा गोरु केवल एउटा खुट्टाले उभिएको छ र एउटा मानिस त्यसलाई लट्ठीले चुटिरहेछ। राजाले गोरुसँग सोधे तेरा तीन खुट्टा कसले काटिदियो? धर्मरूपी गोरुले भन्यो, 'राजन्, मैले अहिलेसम्म यो निर्णय गर्न सकेको छैन मेरा यी खुट्टाहरू कसले काटे र को

मलाई दुःख दिइरहेछ ? कोही भन्छन् कालले दुःख दिइरहेछ अनि कोही भन्छन् कर्मले मनुष्यलाई दुःख दिन्छ। कोही दुःखको कारण स्वभाव हो भन्छन्।'

आफ्नो स्वभाव शान्त राख। काल, कर्म र स्वभावले जीवलाई दुःख दिन्छन्।

'राजन् ! मेरो दुःखको कारण आफैँ विचार गर्नुहोस्।' राजाले संझिहाले त्यो कठोर पुरुष जो गाई-गोरुलाई सताइरहेको छ त्यही कलि हो। यो कलि धर्मनिष्ठहरूलाई सताउँदो रहेछ। उनी कलिलाई दण्ड दिन तयार भए तब कलि राजाको शरणमा पर्‍यो। कलिले राजाको चरणको स्पर्श गर्‍यो। यही कारणले गर्दा परीक्षित् राजाको मति भ्रष्ट भयो।

जुन मानिसको स्वभाव र चरित्रबाट हामी अनजान हुन्छौं उसको हामीले कहिल्यै स्पर्श गर्नु हुन्न। जुन व्यक्तिलाई तिमी स्पर्श गर्छौ त्यस व्यक्तिको केही न केही परमाणु तिम्रा शरीरमा प्रविष्ट भइहाल्छ। पुण्यशाली व्यक्तिको परमाणु पवित्र हुन्छ र पापी व्यक्तिको परमाणु अपवित्र हुन्छ। जस्तो व्यक्तिको स्पर्श हुन्छ, त्यस्तै व्यक्तिको परमाणु तिम्रा शरीरमा पस्दछ।

परीक्षित् राजाले कलिलाई स्पर्श गर्न दिए त उनको बुद्धिमा विकार आयो। राजालाई थाहा थियो यो कलि हो, अपवित्र छ र उसलाई दण्ड दिनुपर्छ। दुष्टहरूलाई दण्ड दिनु राजाको धर्म हो तैपनि उनले कलिप्रति दया देखाए। उनले कलिलाई भने—तँलाई म मार्ने छैन तर तँ मेरो राज्यको सीमाबाट बाहिर जा। मेरो राज्यमा तेरा निमित्त कुनै स्थान छैन।

कलिले राजासँग प्रार्थना गर्‍यो—'म अब कहाँ जान सक्छु ?' परीक्षितले उसलाई चार स्थानहरूमा बस्नलाई अनुमति दिए। ती स्थान हुन्—जुवा, रक्सी, नारी-सङ्ग र हिंसा। यी चार स्थानहरूमा क्रमशः असत्य, मद, आसक्ति र निर्दयता यी चार अधर्महरू बस्ने छन्।

जुवा र फटकाको धन जसको घरमा आउँछ त्यहाँ साथ-साथ कलि पनि आइहाल्छ। जहाँ सट्टा त्यहाँ बट्टा ( दाग ) र यो बट्टा जीवनमा पक्कासँग लागिहाल्छ।

कोही मानिस यस्ता पनि छन् जो जुवा र सट्टाबाट कमाउँछन् र फेरि त्यस धनलाई दान पनि गर्दिन्छन्। उनीहरू संझन्छन् त्यो दान गरियो र मेरो शुद्धि भइहाल्यो। तर यो सबै व्यर्थ हो, यो सबै अनीतिको धन हो, यस धनको दानले कहिल्यै जीवन शुद्ध हुँदैन।

अधर्मको धन प्रभुलाई स्वीकार्य हुँदैन।

शास्त्र निषिद्ध वस्तुहरू जहाँ खाइन्छ, जहाँ जानी-बुझी हिंसा हुन्छ त्यहाँ कलि अवश्य रहन्छ।

यी चार स्थानहरूलाई पाएर पनि कलिलाई सन्तोष भएन। उसले राजालाई भन्यो—यी चार स्थान फोहोर छन्। कुनै राम्रो स्थानमा मलाई बस्न दिए बेस हुने थियो। परीक्षित्ले उसलाई सुवर्णमा बस्ने अनुमति दिए।

अशुद्ध साधनबाट जब सुवर्ण घरभित्र पस्छ तब कलि पनि साथ-साथै आइहाल्छ। अनीति-अन्यायबाट प्राप्त गरेको धनमा कलि हुन्छ। अनीतिद्वारा धन कमाउनेलाई कलिले दुःख दिन्छ तर जुन धन आफ्नो हकवालालाई छोड्ला त्यसले हकवालालाई समेत दुःख दिन्छ।

असत्य, मद, काल, वैर र रजोगुण यी पाँच जहाँ हुँदैनन्, त्यहाँ आज पनि सत्ययुग छ।

जसको घरमा नित्य प्रभुको सेवा स्मरण हुन्छ, जसको घरमा आचार-विचारको पालन हुन्छ त्यसको घरमा कलिको प्रवेश कहिल्यै हुँदैन।

गोरुका तीनै खुट्टा परीक्षित्‌ले फेरि लगाइदिए अर्थात् धर्मको फेरि स्थापना भयो।

कलिले सोच्यो राजाले पाँच स्थानमा बस्न दिएको छ। अब कुनै दुःख छैन। अब परीक्षित् राजाको घरमा पनि कुनै दिन म पसिहालुँला।

एक दिन परीक्षित्‌लाई जान्ने इच्छा भयो। हेरौं, मेरा बाजेले मेरा निमित्त घरमा के-के राखिछोड़ेका रहेछन्, एउटा बाकसभित्र सुनको मुकुट पाइयो। नसोचिकनै राजाले मुकुट लगाए। यो 'मुकुट' जरासन्धको थियो। जरासन्धको छोराले सहदेवसँग त्यो मुकुट मागेको थियो 'मेरा पिताको मुकुट मलाई देऊ।' सहदेवको इच्छा मुकुट फर्काउने थिएन। फेरि भीमले यो मुकुट जबर्जस्ती ल्याएका थिए। त्यसकारण यो धन अनीतिको थियो। अनीतिको धनले त्यसलाई कमाउनेवालालाई र हकवालालाई समेत दुःख दिन्छ। त्यसैले त्यो मुकुटलाई बाकसभित्र बन्द गरेर राखिएको थियो। आज परीक्षित्‌ले देख्नासाथ लगाइहाले। त्यो मुकुट अधर्मले ल्याइएको थियो त्यसैले त्यसद्वारा कलिले परीक्षित्‌को बुद्धिमा प्रवेश गऱ्यो।

यस मुकुटलाई लाएर परीक्षित् राजा वनमा एक दिन शिकार खेल्न गए। यहाँ 'एकदा' शब्दको प्रयोग गरेको छ। राजा शिकार खेल्न कहिल्यै जाँदैन थिए तर आज गएका छन्, अनेक जीवहरूको हत्या गरे। मध्याह्नकाल सकिएपछि राजालाई भोक र प्यासले सताउन लाग्यो।

उनले एउटा ऋषिको आश्रममा प्रवेश गरे। शमीक ऋषि समाधिमा लीन थिए।

कुनै सन्त जप-ध्यानमा बसेको छ भने त्यहाँ नजानू। यदि जानै परेछ भने पनि प्रणाम गरेर फर्क। त्यस समयमा लौकिक कुरा नउठाऊ। प्रभुका साथ एक हुने इच्छा सन्तको हुन्छ। लौकिक कुरा उनको तप-ध्यानमा बाधारूप बन्न जान्छ।

परीक्षित्‌ले सोचे यस देशको राजा म हुँ र पनि ऋषिले मेरो स्वागत किन गर्दैनन्? शायद स्वागत नगर्नलाई यो नाटक गरेको होला। राजाको बुद्धिमा कलिले प्रवेश गरेको थियो। त्यसकारण शमीक ऋषिको सेवा गर्नु साटो राजा ऋषिबाट सेवाको आशा गरिरहेका छन्। उनलाई दुर्बुद्धिले आई घेऱ्यो। उनले एउटा मरेको सर्प शमीक ऋषिको घाँटीमा लगाइदिए। उनले तपस्वीको अपमान गरे।

अरूलाई अपमानित गर्नेले स्वयं आफ्नै अपमान गर्छ। अरूलाई छल्नेवाला स्वयं आफू छलिन्छ। किनभने सबैमा आत्मा एउटै हो।

राजाले शमीक ऋषिको घाँटीमा मरेको सर्प लगाइदिए तर यसो गरेर उनले आफ्नो गलामा मानौं जीवित सर्प लगाए। सर्प कालको स्वरूप हो।

सर्प साक्षात् कालको स्वरूप हो। सबै इन्द्रियवृत्तिहरूलाई अन्तर्मुख गरेर प्रभुमा स्थिर भएको ज्ञानी जीव शमीक ऋषि हो। यस्ता ज्ञानी जीवको घाँटीमा सर्प लगाइदिनुको अर्थ हो काललाई मार्नु। जितेन्द्रिय योगीको काल स्वयं मर्दछ अर्थात् कालले उसलाई प्रभावित गर्न सक्दैन। राजाको अर्थ हो राजोगुणमा फँसेको भोग प्रधान विलासी जीव। यस्ताहरूका घाँटीमा सर्प झुण्डिन्छ अर्थात् जीवित सर्प उसको घाँटीमा छ।

शमीक ऋषिका छोरा शृङ्गीले जब यो कुरा थाहा पाए तब उनी अति क्रोधित भए। ऋषिको अपमान गर्ने यो राजाले आफ्ना मनमा के ठानेको छ। उनले सोचे अझै पनि ब्रह्मतेज जगत्मा विद्यमान छ। म राजालाई श्राप दिन्छु। शृङ्गीले राजालाई श्राप दिए 'तिमीले मेरा पिताको घाँटीमा मरेको सर्प लगाइदियौ, आजदेखि सातौं दिनमा तिमीलाई तक्षक नागले डस्ने छ।'

परीक्षित्ले आफ्ना शिरबाट मुकुट झिके र तुरन्त उनलाई आफ्ना भूलको भान भयो। मैले आज पाप गरें। मैले मतिभ्रष्ट भएर ऋषिको अपमान गरें।

जब मतिभ्रष्ट हुन्छ तब बुझ केही न केही अशुभ अवश्य हुनेछ। पाप भयो भने त्यसको विचार गरेर आफ्नो शरीरलाई सजाय देऊ। खानुभन्दा अगाड़ि यो सोच मेरा हातबाट केही पाप भएको छैन ? जुन दिन पाप भएको छ त्यस दिन अनशन गर। तब फेरि कहिल्यै पाप हुने छैन।

धन्य हुन् परीक्षित् राजा, उनले जीवनमा एकपटक मात्र पाप गरिसकेपछि उनले पानीसम्म खाएनन्। ऋषि कुमारद्वारा दिएको श्राप सुनेर उनले सोचे बेशै भयो मलाई मेरो पापको सजाय पाइयो।

परीक्षित् सोच्नुहुन्छ म संसारका विषयसुखहरूमा फँसिसकेको थिएँ, त्यसकारण मलाई सावधान गर्नका निमित्त प्रभुले ममाथि यो कृपा गर्नुभयो। मैले श्राप नपाएको भएदेखि म कसरी वैराग्य धारण गर्न सक्थें होला। मेरा निमित्त प्रभुले शापावतार धारण गर्नुभयो।

मृत्यु शिरमाथि घुमिरहेछ भन्ने सोच्दै रह्यौ भने पाप कहिल्यै हुने छैन।

परीक्षित्ले गृहत्याग गरेर गङ्गातटमा आए। उनले गङ्गा स्नान गरे र यो निश्चय गरे अन्नजल त्याग गरेर अब प्रायश्चित्त व्रत गर्नेछु। ठूला-ठूला ऋषिहरूले यो कुरा सुनेर नबोलाइकन राजाकहाँ भेट्न आए। उनीहरूले सोचे परीक्षित् अब राजा होइनन्, राजर्षि बनिसकेका छन्। राजाको विलासी जीवन अब अन्त्य भएको छ। राजाको जीवन अब बदि्लएको छ र यसैले उनीहरू सबै भेट्न आए। परीक्षित्ले उभिएर सबैलाई प्रणाम गरेर उनको पूजा गरे।

राजाले आफ्नो पापको कुरा ती ऋषिहरूलाई भनिदिए।

त्यसो तर सबै मानिस पाप लुकाउँछन् र आफ्नो पुण्यको कुरा सबैका सामुन्ने प्रकट गर्दै रहन्छन्। पापलाई नलुकाऊ र पुण्यलाई तिमी प्रकट नगर। समाजका सामुन्ने पाप स्वीकार गर्नाले पाप गर्ने बानी छुट्न जान्छ।

परीक्षित्‌ले भने 'मैले पवित्र सन्तको घाँटीमा मरेको सर्पको माला लगाइदिएँ। म अधम छु। मेरो उद्धार गर्नुहोस्। मैले सुनेको छु पापीलाई यमदूतले चुट्दै-पिट्दै लैजान्छन् रे। मेरो मरण सुध्रियोस्, यस्तो कुनै उपाय भन्नुहोस्। मलाई डर लाग्छ। मैले मर्नका निमित्त अहिलेसम्म केही तयारी पनि गरेको छैन।'

परीक्षित्‌ले मृत्युको वेदनाको विचार गरे। जन्म-मरणको दुःखको विचारले पाप छुट्ला। उनले ऋषिहरूलाई भने तपाईंहरू यस्तो गर्नुहोस् अब सात दिनमा मलाई मुक्ति मिलिजावोस्। आसन्न मृत्युको कर्तव्यबारे मलाई भन्नुहोस्। समय धेरै छैन। ज्ञानका लामा-छोटा कुराहरू गरेमा समय सकिइहाल्छ। मलाई यस्तो कुरा भन्नुहोस् र बाटो देखाउनुहोस्, जसबाट परमात्माको चरणमा लीन भैजाऊँ। मलाई यस्तो कथा सुनाउनुहोस् जसबाट मेरो मुक्ति होस्।

ऋषिगण सोच्न थाले, हामी पनि मृत्युबाट डराउँछौं। अन्त्य समयमा प्रभुको नाउँ ओठमा आउनु कठिन कुरा हो। केवल सातै दिनमा राजालाई कसरी मुक्ति मिल्ला ? यो अशक्य छ। यसैले सबै ऋषि चूप लागेका छन्।

सातै दिनमा मुक्तिलाई पाउनु असम्भव जस्तै छ। मृत्युको नजीक समय अति नाजुक हुन्छ। महाज्ञानीहरूलाई पनि मृत्युको डर लाग्दछ। राम नाम छिटै ओठमा आउँदैन।

रामचरित मानसमा बालिले भनेको छ—

जन्म-जन्म मुनि जतन कराहीं।
अन्त राम कहि आवत नाहीं॥

कुनै पनि ऋषि राजालाई उपदेश दिन तयार भएनन्। कसैमा बोल्ने साहस भएन। परीक्षित सोच्नुहुन्छ समर्थ भए पनि यी ऋषि मलाई उपदेश कनि दिइरहेका छैनन् ?

'त्यसकारण जगत्‌का जीवले चाहे मेरो त्याग गरून्, म भगवान्‌कै भरोसा गर्छु। भगवान् नारायणले कृपा गर्नुहुनेछ। अब समय धेरै छैन। म कसको शरण लिऊँ ? मैले आफ्नै परमात्माको शरण लिनुपर्ला। उहाँले मेरो उपेक्षा गर्नुहुने छैन। म पापी हुँ तर पाण्डववंशी हुँ। अब विना ईश्वर मेरो कोही छैन ?'

परीक्षित्‌ले ईश्वरको आश्रय लिए। भगवान्‌को स्तुति गरे। द्वारिकानाथको स्मरण गरे। मैले कुनै सत्कर्म गरिनँ। यी ब्राह्मणहरूले मलाई उपदेश दिइरहेका छैनन् किनभने म अधम छु। जुन परमात्माले, जब म आमाको गर्भमा थिएँ, तब ब्रह्मास्त्रद्वारा रक्षा गर्नुभएको थियो, उहाँले आज पनि मेरो रक्षा अवश्य गर्नुहुनेछ। म पापी हुँ तर भगवान्‌को हुँ। नाथ, म तपाईंकै हुँ।

दुष्टतमोऽपि दयारहितौऽपि कृष्ण तवाऽस्मि न चास्मि परस्य।

हे द्वारकानाथ, म तपाईंको शरणमा आएको छु। हजूरले जब मेरो जन्म उज्ज्वल गरिबक्सियो भने मेरो मृत्यु पनि सुधारिदिबक्सियोस्।

परमात्माले शुकदेवजीलाई उहाँ जान भनी प्रेरणा दिनुभयो। शिष्य योग्य छ। परीक्षित्‌को जन्म सुधार्न निमित्त द्वारिकानाथ स्वयं आउनुभएको थियो। मुक्ति दिने अधिकार केवल शिवजीको भएको हुनाले भगवान् शिवजीलाई भनियो। त्यसकारण भगवान् शिवको अवतार शुकदेवजी त्यहाँ आउनुभयो। संहारको काम शिवजीको हो, त्यसकारण परीक्षित्‌को मृत्यु सुधार्न शुकदेवजी आउनुभयो।

शुकदेवजी दिगम्बर हुनुहुन्छ। वासनाको वस्त्र छुटिसकेको थियो। सोह्र वर्षको उमेर छ। कमरमा न धोती छ न लँगौटी। आजानबाहु छ। वक्षस्थल विशाल छ। दृष्टि नाकको अग्रभागमा स्थिर छ। मुखमा कपालको लट्‌टा छरिएको छ। वर्ण कृष्णको जस्तो श्याम छ र तेजस्वी पनि छ।

शुकदेवजीमाथि बालकहरू धूलो उड़ाइरहेथे। 'नागा बाबा हिँड़े, नागा बाबा हिँड़े' भनी कराउँथे। तर शुकदेवजीले यी सबै कुराहरू मानौं नजानेजस्तो गर्नुभो। वृत्ति ब्रह्माकार छ। उहाँ ब्रह्मचिन्तन गर्ने शरीरबाट अमान हुनुभएको छ।

परमात्माको ध्यानमा जो देहमान बिर्सन्छ, त्यसको शरीरको याद-विचार परमात्मा स्वयं गर्नुहुन्छ। सोच्नुहुन्छ यसलाई देहको आवश्यकता छैन तर मलाई भने छ।

चारैतर्फ प्रकाश फैलियो। सूर्यनारायण स्वयं आज पृथ्वीमा उत्रनुभएको छ झैं लाग्यो। मुनिले थाहा पाए यी शङ्करका अवतार श्री शुकदेवजी पाल्नुभएको छ। व्यासजी त्यस सभामा हुनुहुन्थ्यो। उहाँले उठेर शुकदेवजीको वन्दना गर्नुभयो।

शुकदेवजीको नाउँ सुन्दैमा व्यासजी पनि भाव-विभोर हुनुभयो।

शुकदेवजीका निमित्त भएका विशेषण हेर्नुहवस्—'अलक्ष्यः, निजलाभतुष्टो, अवधूत वेषः।'

व्यासजी सोच्नुहुन्छ—भागवतको रहस्य शुकदेवजी जान्नुहुन्छ, यो म जान्दिनँ। कस्तो निर्विकार छ? मेरा छोराले भागवत भन्लान् र म सुन्नेछु।

राजाको कल्याणका निमित्त आउनुभएका शुकदेवजी सुवर्ण-सिंहासनमा बस्नुभयो। परीक्षित्‌ले आँखा खोल्नुभयो। मेरो उद्धार गर्नलाई यिनलाई प्रभुले पठाउनुभएको छ। अन्यथा मजस्तो पापी र विलासीकहाँ उहाँ आउनुहुने थिएन।

परीक्षित्‌ले शुकदेवजीका चरणहरूमा साष्टाङ्ग प्रणाम गर्नुभयो। परीक्षित्‌ले आफ्नो पाप उहाँलाई सुनाउनुभयो—''म अधम हुँ। मेरो उद्धार गरिबक्सियोस्। आसन्न मरणलाई के गर्नुपर्ला? मनुष्यमात्रको के कर्त्तव्य हो? त्यसलाई कसको श्रवण जप, स्मरण र भजन गर्नुपर्ला?''

गुरुदेव शुकदेवजीको मन पग्लियो। शिष्य सुयोग्य छ।

अधिकारी शिष्य पाएपछि गुरुको मनले भन्छ त्यसलाई आफ्नो सर्वस्वै दिइहालूँ? गुरु ब्रह्मनिष्ठ होस्। निष्काम पनि होस् र शिष्य प्रभुदर्शनका निमित्त आतुर भयो भने सात दिन होइन

सात मिनटमै प्रभुदर्शन हुन सक्छ। अन्यथा गुरु लोभी होस् र शिष्य लौकिक सुखको इच्छा गर्नेहोस् तब दुवै नरकवासी हुनेछन्।

*'लोभी गुरु और लालची चेला, होय नरकमें ठेलम ठेला।'*

शुकदेवजी भन्नुहुन्छ—राजन् तिमी किन आत्तिएका ? अहिले सात दिन बाँकी छ—म तिम्रो पापबाट केही लिन आएको होइन, दिन आएको छु। म निरपेक्ष छु। मैले जो आनन्द पाएको छु र परमात्माको जो दर्शन भएको छ त्यही दर्शन तिमीलाई गराउन आएको छु। मैले जो पाएको छु, त्यो तिमीलाई दिन आएको छु। मेरा पिताजी भोक लागेपछि दिनमा एकपटक बयर खानुहुन्थ्यो। तर यस कृष्ण कथामा भजनानन्द यति पाइन्छ मलाई बयर पनि संझना हुँदैन। मेरा पिताजी वस्त्र लाउनुहुन्थ्यो। प्रभु चिन्तनमा मेरो वस्त्र कहिले, कहाँ छुट्यो, यो पनि मलाई थाहा छैन। सात दिनमा तिमीलाई कृष्णदर्शन गराउनेछु। म बादरायणि हुँ। कृष्ण-आनन्दमा मस्त भएपछि बयर खान पनि कहाँ सुर रह्यो ?

*'भगवान् वादरायणिः।'* शुकदेवजीका सम्पूर्ण वर्णन वैराग्यशब्दले व्यक्त हुनसक्छ। वादरायणिका स्थानमा शुक शब्द प्रयोग हुन सक्थ्यो कि ? भागवतमा एउटा पनि शब्दको प्रयोग निरर्थक छैन। शुकदेवजीको वैराग्यलाई देखाउनकै निमित्त यसको प्रयोग गरियो। शुकदेवजी वादरायण—व्यासजीका पुत्र हुन्। व्यासजीको तप र वैराग्य कस्तो थियो ? व्यासजी सारा दिन जप-तप गर्नुहुन्थ्यो र भोक लागेपछि दिनमा केवल एउटा बयर खानुहुन्थ्यो। केवल बयरको नै आहारा गर्नुहुन्थ्यो, त्यसकारण उहाँ वादरायण कहलिनुभयो। यस्ता वादरायणका शुकदेवजी पुत्र हुनुहुन्छ। जसमा खूब ज्ञान वैराग्य होस्, त्यसले अर्कालाई सुधार्न सक्छ। शुकदेवजीमा यी दुवै धन पूर्णतः थिए।

आजका सुधारकमा त्याग र संयम देखिँदैन। त्यसले अरूलाई के सुधार्ला ? मानिसले पहिले आफू स्वयंलाई सुधार्ने प्रयत्न गर्नुपर्छ।

राजन्, जो समय बितेर गयो त्यसको स्मरण नगर। भविष्यको विचार पनि नगर। केवल वर्तमानलाई सुधार। सात दिन बाँकी रहेको छ। मेरो नारायणको स्मरण गर, तिम्रो जीवन अवश्य उज्ज्वल हुने छ।

लौकिक रसका भोगीलाई प्रेमरस पाइँदैन, भक्तिरस पनि पाइँदैन। जसले कामको रस-त्याग गरेको छ उही रसिक हो। जगत्को रस कटु छ, प्रेम रस नै मधुर छ, जो इन्द्रियहरूका अधीन हुन्छ, त्यसलाई कालले समात्छ।

भागवतको भक्त शुकदेवजी जस्तो हुनुपर्छ।

हरे राम हरे राम, राम राम हरे हरे।<br>
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

# ❀ द्वितीय स्कन्ध ❀

सत् यो परमात्माको नाउँ हो। सबैमा जसले ईश्वरको दर्शन गर्छ त्यही सद्गुरु हो। अधिकारी शिष्यलाई सद्गुरु अवश्य पाइन्छन्।

प्रथम स्कन्धमा अधिकार-लीलाको वर्णन गरिएको थियो। परीक्षित् अधिकारी थिए, अतः उनलाई शुकदेव मुनि जस्ता सद्गुरु पाइए। परीक्षित्मा पाँच प्रकारका शुद्धिहरू छन्; मातृशुद्धि, पितृशुद्धि, द्रव्यशुद्धि, अन्नशुद्धि र आत्मशुद्धि।

सद्शिष्यलाई मात्र गुरुको कृपा भई ईश्वरदर्शन हुन्छ।

सद्गुरु-तत्त्व र ईश्वर-तत्त्व एक हुन्। ईश्वर जसरी व्यापक छन् त्यसरी गुरु पनि व्यापक छन्, जसको कहीं पनि अभाव हुँदैन त्यही व्यापक हो। परमात्मा सनातन सद्गुरु पनि व्यापक हुन्।

व्यापकलाई खोज्ने होइन, चिन्ने आवश्यकता छ।

परमात्मा जस्तै गुरु पनि व्यापक छन् तर उनी अधिकारीलाई मात्र भेटिन्छन्।

स्वयं सन्त नबनीकन सन्तलाई चिन्न सकिँदैन, तिमीलाई सन्त देखिँदैन किनभने तिमी सन्त छैनौ। जो सन्त बन्दछ उसलाई सन्त मिल्नेछ। सन्त बन्नलाई व्यवहारलाई अति शुद्ध पार्नुपर्छ। जबसम्म मुठ्ठीभर चनासम्मको पनि आवश्यकता पर्छ तबसम्म व्यवहार छुट्‌दैन।

जसले प्रत्येक व्यवहारलाई भक्तिमय बनाउँछ त्यो मात्र साँचो वैष्णव हो।

सन्त हुनका निमित्त मनलाई सुधार्नुपर्छ। मनलाई फेर्नुपर्ने आवश्यकता छ। जसले आफ्नो हृदयको परिवर्तन गर्छ त्यो सन्त बन्छ। मन शुद्ध भएपछि सन्त भेटिन्छन्। सन्त भेट्नैका निमित्त सन्त आउँछन्। विलासीलाई सन्त भेटिँदैनन्।

गुरुदेव ब्रह्मा हुन्। गुरुदेवले नयाँ जन्म दिन्छन्। जन्म दिनुको अर्थ हो उनले मन र स्वभावलाई सुधारिदिनु। गुरुदेव विष्णु हुन् किनभने शिष्यको रक्षा गर्छन्। गुरुदेव शिष्यलाई मोक्ष पनि दिन्छन्। यसैले उनी शिवजीका पनि स्वरूप हुन्। गुरु नबनाइकन नबस। तिमी लायक भयौ भने भगवान्‌का कृपाले सद्गुरु पाइने छन्।

तुकारामजीले आफ्नो अनुभवको वर्णन गर्नुभएको छ। कथा-वार्ता सुन्दा-सुन्दै प्रभुको नाउँसँग मेरो प्रेम बढ्यो। म पनि 'विट्ठल, विट्ठल' को सतत् जप गर्न थालें। प्रभुलाई ममाथि दया

जाग्यो। मलाई स्वप्नमा सद्‌गुरु भेटिनुभयो, मेरा सद्‌गुरुलाई मैले बाटामा भेटें। म गङ्गास्नान गरेर आइरहेको थिएँ उहाँ बाटामा भेटिनुभयो। उहाँले मलाई भन्नुभयो, 'विट्ठलनाथको प्रेरणाले म तिमीलाई उपदेश दिनलाई आएको हुँ।' मैले गुरुदेवलाई भनें, 'मैले त भगवान्‌को कुनै सेवा गरेको छैन।' फेरि पनि गुरुदेवले ममाथि कृपा गर्नुभयो र 'राम, कृष्ण, हरि' को मन्त्र दिनुभयो।

गुरु दक्षिणामा उहाँले पाउभर तूप अर्थात् घीउ पनि माग्नुभयो। के तुकारामका गुरुलाई पावाभर घीउ पनि पाइँदैन थियो ? तुकारामको वाणी गूढार्थले भरिएको छ। तूपको अर्थ हो तिम्रोपन र मेरोपन ( अर्थात् अहम् ) तिमी मलाई दिइद्यौ। आजदेखि तिमी बिर्सिजाऊ तिमी पुरुष हौ। तिमीले आफ्नो पुरुषत्वलाई बिर्सिदेऊ। मेरा गुरुदेवले मेरोपन र तेरोपन मसँग मागिलिनुभयो। मलाई भन्नुभयो तिम्रो आफ्नो अभिमान मलाई द्यौ। आजदेखि अहम्‌लाई नराख्नु। तिमी पुरुष पनि होइनौ र स्त्री पनि होइनौ। देहका सारा भाव मलाई अर्पण गरिदेऊ। तिमी शुद्ध होऊ, ब्रह्म होऊ, ईश्वरका अंश होऊ।'

जीवको ईश्वरका साथ सम्बन्ध सिद्ध गरिदिए, जोड़िदिए।

जसको प्रत्येक क्रिया ज्ञानमय हुन्छ त्यो उत्तम गुरु हो। ज्ञानी भक्तहरूका प्रत्येक क्रिया ज्ञान र बोधरूप हुन्छ। सन्तको सबै कुरा लौकिक हुन्छ।

शुकदेवजी ब्रह्मज्ञानी मात्र नभएर उहाँको दृष्टि पनि ब्रह्मदृष्टि थियो। शुकदेवजी हरेकलाई समभावले-ब्रह्मभावले हेर्नुहुन्छ। जस्तो दृष्टि उस्तो सृष्टि। जसको दृष्टि ब्रह्ममय हुन्छ त्यसलाई जगत्‌को भास हुँदैन। शुकदेवजी गुरुमात्र होइन, सद्‌गुरु पनि हुनुहुन्छ। शुकदेवजी जस्तो ब्रह्मदृष्टिवाला पाउन सजिलो छैन। त्यसो तर ब्रह्मज्ञानी-ब्रह्मज्ञानको कुरा गर्ने सजिलैसँग पाइन्छन्।

शुकदेवजी जस्तो गुरु पाइएका खण्डमा सात दिन किन र सात मिनटमै मुक्ति गराउन सक्छन्। तर शिष्य परीक्षित् जस्तो अधिकारी हुनुपर्छ। गुरु र शिष्य दुवै अधिकारी हुनुपर्छ।

मन्त्रदीक्षा अधम हो, स्पर्शदीक्षा उत्तम हो।

ब्रह्मभावमा तल्लीन भएर शुकदेवजीले परीक्षित्‌का शिरमा वरदहस्त के राख्नुभएको थियो तुरुन्त उनलाई ब्रह्मको दर्शन भयो।

प्रथम स्कन्धमा अधिकारीको कथा भनियो। भागवतको श्रोता कस्तो हुनुपर्छ यो बताइएको छ। वक्ता कस्तो हुनुपर्छ सो पनि वर्णन गरिएको छ।

अब अगाड़ि कथा आउने छ—ध्रुवले नारदजीलाई बाटामा भेटेको र प्रचेताहरूलाई शिवजीले भेंट दिएको। अधिकारी शिष्यलाई सद्‌गुरु भेटिए। परीक्षित्‌का निमित्त शुकदेवजी आउनुभयो। लाख निम्ता दिए पनि शुकदेवजीलाई नजर उठाएर हेर्ने फुर्सद नभएता पनि यस कामलाई आइदिनुभयो किनभने सच्चा ज्ञानी एकक्षण पनि परमात्माको दर्शन नगरी बस्न सक्दैनन्।

तीन प्रकारका श्रोता र वक्तामा व्यासजीको क्रम दोस्रो छ किनभने उहाँले समाजसुधारको दृष्टिबाट कथा भन्नुहुन्थ्यो। शुकदेवजी अरूहरूलाई सुधार्नलाई होइन तर आफ्नो अन्तःकरणलाई सुखी गर्ने वृत्तिसँग गर्नुहुन्थ्यो।

शुकदेवजीले कथा आरम्भ गर्नुभयो। तर मङ्गलाचरण गर्नुभएन। कारण देहाभिमान बिलकुलै थिएन। तीन अध्यायपछि शुकदेवजीले मङ्गलाचरण गर्नुभयो।

भागवतमा तीन मङ्गलाचरण छन्। प्रथम व्यासजीको, दोस्रो शुकदेवको र अन्त्यमा तेस्रो सूतजीको। यौवनमा मङ्गलाचरण मङ्गल आचरणका निमित्त बहुतै जरूरी छ। यसैले शुकदेवजीको मङ्गलाचरण बाह्र श्लोकको छ र अन्य सबै एक-एक श्लोकका छन्।

उत्तम वक्ता को हुन्छ? जो सम्पूर्णतः वैराग्यमय हुन्छ, त्यही वक्ता उत्तम हो।

संसारका कुनै पनि विषयमा मन नजानु वैराग्य हो। संसारका विषयहरूलाई हेर्दै गरे पनि जसको मन त्यसमा रम्दैन, त्यसले मात्र सच्चा वैराग्य सिद्ध गरेको छ। विना वैराग्यले दृढ़ता आउँदैन। वैराग्यले ज्ञान शोभायमान हुन्छ। ज्ञान, भक्ति, वैराग्य परिपूर्ण भएपछि मनुष्य ब्रह्ममय बन्दछ।

शुकदेवजीमा पूर्णतः ज्ञान, भक्ति र वैराग्य थियो।

ज्ञानीको हृदय कृष्ण प्रेममा नपग्ले तब त्यो ज्ञान कुन कामको?

परीक्षित् राजा शुकदेवजीसँग सोध्नुहुन्छ जसको मृत्यु नजीक आएको छ त्यसको कर्त्तव्य के हो? उसले के गर्नुपर्ला र के गर्नु नपर्ला? मनुष्यमात्रको कर्त्तव्य के हो?

शुकदेवजीले भन्नुभयो—'राजन्, तिमीले राम्रो प्रश्न गरेका छौ। सुन, अन्त्यकालमा वात, पित्त र कफद्वारा त्रिदोष हुन जान्छ। मृत्युको वेदना भयङ्कर हुन्छ। जन्ममरणका दुःखहरूको विचार गर्‍यौ भने पाप लाग्दैन। त्यसकारण मृत्युदेखि डराउँदै गर। त्यसलाई स्मरण गर। सोच मैले मृत्युको स्वागतको तयारी गरेको छु वा छुइनँ। यस्तो चिन्तन गर्नाले वैराग्य आउँछ।'

### जन्म मृत्यु जराव्याधिदुःखदोषानुदर्शनम्।

जन्म, मृत्यु, जराव्याधिका दुःखहरूलाई बराबर विचार गर्‍यो भने वैराग्य उत्पन्न हुनेछ र पाप छुट्ने छ। त्यसो नगरेका खण्डमा पापको संस्कार चाँडै छुट्तैन। नसोची नबुझी विवेक-वैराग्य उत्पन्न हुन सक्तैन।

काललाई शिरमाथि राखी सदा ईश्वरको चिन्तन गर। काललाई संझिराख्यौ भने पापवृत्तिको जन्म हुँदैन।

भजनका निमित्त अनुकूल समयको प्रतीक्षा नगर। कुनै पनि क्षण भजनका निमित्त अनुकूल हुन्छ। केही कष्ट नभएपछि म भजन गरूँला भन्नु अज्ञान हो।

एउटा मानिस स्नान गर्न भनी समुद्र किनारमा गयो। तर त्यो नुहाउनुको साटो त्यहीं बसिरह्यो।

मानिसहरूले त्यसलाई सोधे—किन यसरी बसिरहेको? नुहाउने कहिले?

त्यस मानिसले जवाफ दियो 'समुद्र एकका पछि एक तरङ्ग उठिरहेको छ। तरङ्ग बन्द भएपछि नुहाउने छु।'

के समुद्रको छाल कहिल्यै थामिन्छ? छाल कहिले थामिने र कहिले नुहाउने हो?

संसार पनि एक समुद्र हो। त्यसमा असुविधारूपी तरंगहरू आइरहन्छन्। त्यसकारण कसैले यो भनोस् अनुकूलता भएपछि भगवान्को भजन गरूँला, त्यसो तर सर्वाङ्गी अनुकूलता आउने छैन। जस्ता किसिमबाट त्यस मानिसले स्नान गर्न सकेन, त्यस्तै यस्ता मनुष्यले ईश्वर भजन नगरिकन बस्नुपर्ने हुन्छ।

जीवनमा जतिसुकै अप्ठ्यारो पर्न आए पनि यस लक्ष्यलाई बिर्सनु भएन मलाई परमात्मासँग मिल्नु छ। प्रभुसँग एक हुनु छ। लोभी जसरी पैसाहरूमाथि लक्ष्य राख्छ त्यस्तै किसिमबाट महापुरुष परमेश्वरमा लक्ष्य राख्छन्।

भगवान्ले गीतामा भन्नुभएको छ—

**अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम्।**

(अ. ८, श्लोक ५)

अन्त्यकालमा जो मलाई संझँदै देहत्याग गर्दछ त्यसले मलाई अवश्य पाउँछ। अन्त्यकालको अर्थ जीवनको होइन प्रत्येक क्षणको अन्त्यकाल। त्यसकारण प्रत्येक क्षण ईश्वरको चिन्तन, ध्यान, स्मरण गर्नुपर्छ।

प्रत्येक क्षणलाई सुधार्‍यौ भने मृत्यु पनि सुध्रिन्छ। प्रत्येक क्षणलाई सुधार्नुको अर्थ हो हरक्षण भगवान्लाई आफ्ना दृष्टिअगाड़ि राख्नु।

मानिस भन्ठान्दछन् सारा जीवन काम-धन्दा गरौंला, उल्टो-सुल्टो गरेर धन कमाउँला र अन्त्यकालमा भगवान्लाई स्मरण गरेर संसारपार तरौंला। यो विचार गलत हो। त्यसकारण स्पष्ट भनिदिएको छ 'सदा तद्भाव भावित:।' सधैं जुन भावको चिन्तन गर्छौं अन्त्यकालमा पनि त्यसैको स्मरण हुनेछ।

भगवान्ले पनि आशा गरेको छ 'तस्मात् सर्वेषु कालेषु माम् अनुस्मर।' यसैले सारा समय तिमीले निरन्तर मेरो स्मरण गर।

यो सर्वविदित कुरा हो जुन कुराको सदा चिन्तन गरिन्छ, मृत्युका समयमा पनि उसैको स्मरण हुँदै रहन्छ।

एउटा गहना बनाउने बाँड़ाको दृष्टान्त छ। एउटा बाँड़ा बिरामी भएर शैय्यामा सुतिरहेको थियो। कति महीनादेखि ऊ बजार जान सकेको थिएन र उसलाई सुन र सुनको बजार भाउको मनमा विचार आइरहन्थ्यो। अन्त्यकाल आयो। ज्वरो बढ्दै गइरहेको थियो। डाक्टरले आएर डिग्रीले ज्वरो १०५ ( एक सय पाँच ) डिग्री छ भने। बाँड़ाले संझ्यो कसैले सुनको भाउ भनिरहेछ। उसले आफ्नो छोरालाई भन्यो—बेचिदेऊ। मैले असीको भाउमा लिएको थिएँ ! अब एक सय पाँच भएको छ। बेचिदेऊ। यसरी बोल्दा-बोल्दै ऊ मरिहाल्यो। बाँड़ाले सारा जीवन सुन किन्ने, बेच्ने र सुनको व्यापारमा मात्र बिताएको थियो। त्यसो हुनाले अन्त्यकालमा उसलाई सुनको मात्र विचार आइरह्यो।

धन सम्पत्तिको मात्र चिन्ता गर्नेलाई, रुपियाँ-पैसा कमाउनेलाई अन्त्यकालमा पनि त्यसैको विचार आउँछ। धन कमाउनु कुनै पाप होइन तर त्यसलाई कमाउँदाखेरि भगवान्‌लाई बिर्सनु पाप हो।

शुकदेवजीले भन्नुभयो—हे राजन् मनुष्यको आयु यस्तै प्रकारले समाप्त हुन जान्छ। निद्रा र विलासितामा रात बिताउँछ र धन प्राप्तिको प्रयत्न र कुटुम्बको परिपालनमा दिन बित्दछ।

निद्रया ह्रियते नक्तं व्यवयेन च वा वयः।
दिवा चार्थेहया राजन् कुटुम्बभरणेन वा॥

( भा० २-१-३ )

मानिसको ज्यादाजसो समय निद्रा र अर्थोपार्जनमा बित्दछ। उसको धेरै जसो समय कुरा गर्नमा जान्छ। धेरैको समय पढ्नमा खर्च हुन्छ। धेरै पढ्नु पनि ठीक होइन। अति पढ्नाले शब्द-ज्ञान बढ्छ तर साथ-साथै अभिमान पनि बढ्दछ।

राजन्, जो समय गयो, गइसक्यो; त्यसका निमित्त अब नरोऊ। त्यसको विचार पनि नगर। बितेका समयको कुरालाई सोचिरहेर केही लाभ छैन। तिमीले आफ्नो वर्तमानलाई सुधार। सात दिनको जो यो समय पाएका छौ त्यसैको सदुपयोग गर।

मनुष्य इन्द्रियहरूका सुखमा बहुतै फँसेको छ। उसलाई आफ्नो लक्ष्यको ध्यानै भएन। शरीर, स्त्री, सन्तान आदि सबै कुरा असत्य हुन्, तैपनि ती सबैको मोहमा यस्तो पागल बन्न गएको छ उसलाई समय र लक्ष्यको पनि भान रहन गएन। तिमीलाई कहाँ जानु छ, के गर्नु छ, के बन्नु छ त्यसको विचार आजै गर। इच्छाशुद्धिविना कर्म हुँदैन। तिमीले निश्चय गर मलाई भगवान्‌सँग मिल्नु छ, मलाई प्रभुको धाममा जानु छ। मलाई पुनर्जन्म लिनु छैन।

जगत्‌मा विकार र वासना बढ्नाले त्याग र संयम कम हुन गएको छ।

कालले मनुष्यलाई धकेलेर रोईरोईकन घर छोड्नुभन्दा यही असल हुन्थ्यो—विवेकद्वारा स्वेच्छापूर्वक घर छोड़िदिऊन्। शङ्कर स्वामीले भन्नुभएको छ—निजगृहात् तूर्णं विनिर्गम्यताम्।

हे राजन्, मानव-जीवनको अन्तिम परीक्षा मृत्यु हो। मानिसको प्रतिक्षण मृत्यु भइरहन्छ। जसले प्रत्येक क्षणलाई सुधार्छ त्यसको मृत्यु सुध्रिन्छ र जसको मृत्यु सुध्रियो त्यसको जीवन पनि उज्ज्वल भइहाल्छ।

प्रभुको स्मरण प्रत्येक क्षणको अन्त्यकालमा गर्नुपर्छ। जीवनको अन्त्यकालमा मात्र होइन। क्षणक्षणलाई जसले सुधार्छ त्यसैको जीवन सुध्रिन्छ। यो शरीर प्रतिक्षण बद्लिरहन्छ अर्थात् प्रतिक्षण शरीरको नाश भइरहेछ। अन्त्यकालमा अर्थात् प्रत्येक पलको अन्त्यमा मानिसको मृत्यु भइरहन्छ। त्यसकारण प्रभुको स्मरण प्रतिक्षण गर। शङ्कराचार्यले 'शाङ्करभाष्य'मा यही भन्नुभएको छ।

होइन भने जसको जीवन निद्रा, धनोपार्जन र कुटुम्बको परिपालनमा बितेको छ त्यसलाई अन्त्यकालमा ती सबै कुराहरू सम्झना भइरहन्छन्। सारा जीवन जसमा बितेको छ त्यही अन्त्यकालमा स्मरण हुन्छ।

एउटा बूढो बिरामी पर्‍यो। त्यसको जीवन द्रव्य आदिका पछि बित्यो। अन्त्यकाल नजिक आयो। उसका छोराहरूले भन्छन्—'पिताजी, अब तपाईं *श्रीकृष्ण गोविन्द हरे मुरारे, हे नाथ नारायण वासुदेव* जप गर्नुहोस्।' तर त्यस बूढाका मुखबाट शब्द निस्कँदै निस्किएन। जीवनमा कहिले भगवान्‌को नाउँ लिएको भएपो त्यसले नाउँ संझियोस्?

त्यस बूढाले मनमा पैसाको चिन्तन गरिरहेछ। त्यसको दृष्टि आँगनमा पर्‍यो। देख्यो त्यसले बाछाले कुचो चपाइरहेको। यति सानो नोक्सान पनि त्यस बूढाले कसरी सहन सक्थ्यो? त्यसको मन पोलिरहेछ मैले कसरी धन कमाएँ यो कुरा यिनीहरूले के थाहा पाऊन्? त्यसलाई मनमा लाग्यो रुपियाँ-पैसाहरूको तथा अन्य वस्तुहरूको यी मानिसहरूलाई केही मूल्य छैन। मेरा शेषपछि यिनीहरूले घर लुटाइदिने भए।

त्यो बूढो केही स्पष्ट बोल्न सक्दैन थियो त्यसकारण केही बड़बड़ाउन थाल्यो। उसको एउटा छोराले विचार गर्‍यो पिताजीले भगवान्‌को नाउँ लिन खोज्नु भएको छ तर केही बोल्न सक्नुहुन्न। दोस्रो छोराले सोच्यो पिताजी कहिल्यै पनि भगवान्‌को नाउँ लिनुहुन्नथ्यो, त्यसकारण उहाँले आफ्नो केही सम्पत्तिका बारेमा भन्न खोज्नुभइरहेछ। केही धन लुकाएर राखेको होला त्यसबारेमा केही भन्ने हो कि? छोराहरूले डाक्टर बोलाएर उसलाई भने यस्तो केही उपाय गरिदिनुहोस् जसले गर्दा उहाँले दुइचार शब्द बोल्न सकुन्। डाक्टरले इंजेक्शन दिनलाई हजार रुपियाँ फीस मागे। छोराहरूले सोचे कहीं गाड़ेको धन बताउनु हुनेछ, त्यसकारण हजार रुपियाँ खर्च गरौं।

पिताजीको कुरा सुन्न सबै हतारिएका थिए। औषधिले आफ्नो काम गर्‍यो। केही बल आएपछि बूढाले भने—'सबै मेरो मुख के हेरिरहेछौ? वहाँ हेर त्यो बाछोले कहिलेदेखि कुचो चबाइरहेछ।' यस किसिमबाट बाछो-कुचो, कुचो-बाछो भन्दा-भन्दै बूढाले देहत्याग गरे।

तपाईं पनि ध्यान राख्नुहोस् कहीं तपाईंको पनि यस्तो दशा हुन नपाओस्।

यो कुरा हाँस्नका निमित्त होइन तर सावधान हुनका निमित्त हो।

लक्ष्मीजी एक्लै आउँछिन् र रुवाउँछिन् तर भगवान् पनि साथमा आउनुभयो भने सुखी गरिदिन्छिन्।

मानिस भन्छन् आउने कालको खबर कसरी हुन सक्छ ? तर त्यसले पहिल्यैदेखि सावधान गर्दै आउँछ। काल सबैलाई सावधान गर्छ। तर मानिस यस कुरालाई पत्याउँदैनन्। कालले आउनुभन्दा अघि चिट्ठी लेख्छ। तर कालको पत्र पढ्न कसैले जान्दैन। कपाल सेतो हुन थाल्यो भने जान कालको सूचना आइसकेको छ। दाँत झर्न थाल्यो भने भन्ठान कालको सूचना आइपुग्यो, सावधान होऊ। दाँत झरेपछि मानिस नक्कली दाँत लाउँछन्। दाँत झर्न थालेपछि यो संझ अब दूध भात खाने वेला आयो र प्रभुभजन गर्नुपर्‍यो। तर मानिसहरू नक्कली दाँत बनाएर यसका निमित्त लाउँछन् पापड़ खाने आनन्द पाइएला। यसरी कति दिन चल्ने ? खानाले शान्ति पाइँदै पाइँदैन, त्यसको विपरीत वासना अरू बढ्दै जान्छ।

मृत्युका धेरै लक्षण बताइएका छन्। अरुन्धति तारा देखिएन भने मान अब एक वर्षमा मृत्यु होला। स्वप्नमा धापमा गाड़िँदै गएको देखिन्छ भने नौ महिनामा मृत्यु होला। सपनामा कुमालेको हात्ती अर्थात् गधामा सवारी गरेको दृश्य देखिएको छ भने ६ महिनामा मृत्यु हुनेछ। कानमा औंला हालेपछि अन्तर्ध्वनि सुनिएन भने संझ आठ दिनमा मृत्यु हुनेछ। मृत्युको लक्षण थाहा पाएर नआत्तिनु। सावधान हुनलाई मात्र यी लक्षणहरू बताइएका हुन्। सावधान हुनलाई यो भागवतको कथा हो।

भागवतको कथा सुनेर परीक्षित् कृतार्थ भए। मरणलाई सुधार्नका निमित्त भागवतशास्त्र हो। जीवनलाई जसले सुधार्छ त्यसैको मरण सुध्रिन्छ।

राजन् ! मरणलाई जीवन सुधार्नु छ भने प्रत्येक क्षणलाई सुधार। सधैं सोचविचार गर, मनलाई बारंबार संझाऊ ईश्वरका सिवाय मेरो कोही छैन। यस शरीरलाई पनि एक दिन मैले छोड्नु छ त्यसकारण यो पनि मेरो होइन। जब शरीरै मेरो होइन तब मेरो छ पो को र ? किनभने सबै सम्बन्ध शरीरका कारणले मात्र उत्पन्न भएका हुन्।

भावना गर न म कसैको हुँ न कोही मेरा छन्। यस किसिमबाट ममतालाई हटाऊ। संग्रहबाट ममता बढ्छ त्यसकारण अपरिग्रही बन। तृप्ति भोगमा छैन त्यागमा छ।

ममता सिद्ध गर्नलाई सबैसँग ममता राख। व्यक्तिगत ममता हटाऊ।

प्रत्येक मानिसलाई चाहिन्छ उसले प्रतिक्षण सर्वात्मा, सर्वशक्तिमान् भगवान् श्रीकृष्णका लीलाहरूको नै श्रवण, कीर्तन र मनन गरोस्।

इन्द्रियहरूलाई भोगबाट होइन प्रभु स्मरणबाट, प्रभु-सेवाबाट मात्र शान्ति पाइन्छ।

दुःखको कारण देह हो। दुःख भोग्नैका निमित्त शरीर पाइएको छ, होइन ? पाप नगरेको भए यो देह र यो जन्म किन पाइन्थ्यो होला ?

रामदास स्वामीले 'दास-बोध'मा लेख्नुभएको छ—देह धारण गर्नु पाप हो। मनुष्य हर किसिमबाट सुखी हुन सक्तैन।

हे राजन् ! मानव शरीर सुखको उपभोगका निमित्त पाइएको होइन। मानव शरीर भजन गरेर भगवान्‌लाई प्राप्त गर्नका निमित्त पाइएको हो।

इन्द्रियसुख सबै प्राणीहरूलाई एकै समान पाइन्छ। शरीरसङ्गबाट जो सुख स्त्री-पुरुषलाई पाइन्छ त्यही सुख कुकुरलाई कुकुर्नीको सङ्गबाट पाइन्छ। त्यसकारण मनुष्य जीवन पाएर प्रभुस्मरणमा लीन रहू। तिमीले जीवलाई केही यस्तो ढाँचामा ढाल जसले मृत्युको क्षणमा पनि भगवान्‌को स्मरण हवस्।

जीव शिव बन्ने प्रयत्न गर्दैन, जबकि त्यो शिव बन्नलाई मात्र जन्मेको हो।

जीव जब ईश्वरलाई भन्छ म तपाईंको हुँ तब त्यो सम्बन्ध अपूर्ण हुन्छ, तर ईश्वर जब जीवलाई भन्छ तिमी मेरा हौ तब त्यो सम्बन्ध परिपूर्ण हुन्छ।

पापलाई टाल, पुण्य कार्य तुरुन्त गर। ईश्वरले हामीलाई पापको प्रवृत्तिसँग कहिल्यै जोड्दैनन् तर पूर्व जन्महरूका संचित संस्कारले मात्र पाप गर्ने प्रेरणा दिन्छ।

एकान्तमा ईश्वर भजन गर। मनलाई एकान्तले छिटै एकाग्र गराउँछ। एक ईश्वरमा सबै कुराको अन्त गराउनु एकान्त हो। ईश्वर एक र अद्वितीय हो। मनलाई एकाग्र गराउनका निमित्त एकान्तमा बस्नु जरूरी छ। गृहस्थ घरमा समभाव राख्न सक्दैन, उसले गीता पाठै किन नगरोस्। 'समत्वं योग उच्यते।' गृहस्थाश्रमको व्यवहार विषमताले भरिएको हुन्छ। त्यहाँ समता राख्न सकिँदैन। गृहस्थको घरमा भोगका परमाणु भरी भएका कारणले घरमा बसेर परमात्माको सतत् ध्यान गर्न कठिन छ। भागवतमा श्री शुकदेवजीले स्पष्ट भन्नुभएको छ जसको मृत्यु नजिक आएको छ त्यसले घर छोड़िदेओस्। ''गृहात् प्रवर्जितो धीरः'' धैर्य सहित घर छोड़, पवित्र तीर्थको जलमा स्नान गर र पवित्र एकान्त स्थानमा आसन जमाएर बस। मनबाट प्रणवको जप गर। प्राणायामद्वारा प्राणवायुलाई वशमा गर। मनलाई अन्य विचारहरूबाट रोकेर भगवान्‌को मंगलमय रूपसँग जोड़िदेऊ। मीराबाईले एकान्तमा गिरिधरका अगाड़ि नाच्न निश्चय गरेकी थिइन्। उनको तुक्का थियो ''मैं गिरधर के आगे नाचूँगी'' ( म गिरिधरका सामने नाच्ने छु )। तब उनको भक्ति सिद्ध भयो।

एकान्तमा बसेर पहिले प्राणायाम गर। मनको प्राणसँग सम्बन्ध छ। प्राणले मन पनि स्थिर हुन्छ। प्राणायामका तीन भेद हुन्छन्। प्रथम पूरक प्राणायाम गर्नुपर्छ। दाहिने नाकबाट बाहिरको हावा भित्र तान। यी योगका प्रक्रिया हुन्।

महाप्रभुले 'सुबोधिनी'मा भन्नुभएको छ योगलाई पनि भक्तिको साथ चाहिन्छ। योगलाई भक्तिको साथ पाइएन भने त्यो रोगी हुन जान्छ। विना भक्तिको योगले रोग उत्पन्न गराउँछ। भक्ति

नगरीकन योग साधक हुँदैन, यति मात्र होइन त्यो कुनै वेला बाधक पनि बन्न जान्छ। भक्तिसहित योग गरेमा प्रभुका साथ संयोग हुन जान्छ। योगद्वारा योगीले मनलाई स्थिर गर्न सक्छ तर हृदय विशाल हुँदैन। हृदयको विशालता भक्ति र ज्ञानले मात्र हुनेछ। त्यसकारण पूरक प्राणायामबाट यस्तो भावना गर प्रभुको तेजोमय स्वरूप तिम्रो हृदयमा आइरहेको छ। भगवान्‌को व्यापक तेज तिम्रो हृदयमा आइरहेछ।

फेरि जब कुम्भक गर्छौ तब भावना गर म ईश्वरको आलिंगन गरिरहेछु। प्राणलाई शरीरमा रोकिराख्नु कुम्भक हो। त्यस समय ब्रह्म सम्बन्धको भावना गर। त्यस समयमा विचार गर मेरा प्रभुका साथ मेरो मिलन भएको छ। मेरा प्रभुले मेरो अङ्कमाल गरेको छ। यस्तो ब्रह्म सम्बन्धलाई सधैं कायम राख्न सकिँदैन। संसारका विषयहरूमा मनलाई जान दिनाले ब्रह्म सम्बन्ध भङ्ग हुन जान्छ।

फेरि रेचक प्राणायाम गर्नुपर्छ। बायाँ नाकबाट वायुलाई बाहिर छोड्नुलाई रेचक भन्छन्। त्यसवेला यस्तो भावना गर म प्रभुका साथ एक भएको छु। म भगवान्‌सँग एकरूप भैसकेको छु, भगवान् भैसकेको छु, त्यसकारण मेरा पाप बाहिर निस्किरहेछन्, वासना बाहिर निस्किरहेछन्। मेरा मनका सारा विकार बाहिर आइरहेछन् र अब म शुद्ध भइरहेछु।

जबसम्म केही न केही लौकिक व्यवहार पनि गर्नु छ भने मन स्थिर हुन सक्तैन। बाहिरको संसारले भजनमा, कीर्तनमा विक्षेप गर्दैन तर मनको संसारले अवश्य विक्षेप गर्दछ।

ब्राह्मण सन्ध्यामा अघमर्षण गर्दछ। त्यो सोच्द मेरा पापहरू बाहिर निस्किरहेछन्।

मनको मलिनता दुइ प्रकारका हुन्छन्—स्थूल मलिनता र सूक्ष्म मलिनता।

स्थूल मलिनता—साधारण साधन, तप, व्रत, अनशन आदिद्वारा मलिनता हट्दछ।

सूक्ष्म मलिनता—तीव्र भक्तिले मात्र त्यसलाई हटाउन सक्छ।

शुकदेवजीले त्यसैकारण आरम्भमा विराट् पुरुषको ध्यान गर्ने कुरा गर्नुभएको छ। विराट् पुरुषको धारणा नगरीकन मन शुद्ध हुँदैन।

शुकदेवजी भन्नुहुन्छ त्यसो तर मेरो निष्ठा निर्गुणमा छ तथापि नन्दनन्दन यशोदानन्दनले बारंबार मेरो मनलाई आफूतर्फ तान्नुहुन्छ। श्रीकृष्ण भगवान्‌का मधुर लीलाहरूले मेरो मनलाई, मेरो हृदयलाई बलपूर्वक आफूपट्टि आकर्षित गर्दछन्। यसैकारणले मैले भागवतपुराणको अध्ययन गरें र म तपाईंलाई सुनाउने छु।

भगवान्‌को नाउँको प्रेमले सङ्कीर्तन गर्नु सबै शास्त्रहरूको सार हो।

सबै शास्त्र पढ, त्यसको विचार गर तर याद राख नारायण हरि मात्रै साँचो हुनुहुन्छ।

आलोड्य सर्वशास्त्राणिं विचार्य च पुनः पुनः।<br>
इदमेकं सुनिष्पन्नं ध्येयो नारायणो हरिः॥

मैले सबै शास्त्र हेरिसकें, कति पटक विचार गरें, तैपनि सार एउटै निस्कियो जो सबैको ध्येय केवल नारायण हरि मात्र हुनुहुन्छ। सबै शास्त्रहरूको वाचन-मननपछि मैले निश्चय गरें केवल भगवान्‌को मात्र ध्यान गर्नुपर्छ।

निर्गुणका प्रति निष्ठा जबसम्म हुन सक्तैन तबसम्म मनको राग-द्वेष जाँदैन। जसको सगुणमा निष्ठा छ तर ऊ निर्गुणलाई मान्दैन भने उसको भक्ति अपूर्ण रहन्छ।

ध्यानको आरम्भमा मनको सेवा गर। ध्यानका समय मन शुद्ध नभए आनन्द पाइँदैन। मनलाई बाहिरी विषयहरूमा रल्लिने बानी परिसकेको छ। वर्तमान कालमा जीवन भोगप्रधान बनिसकेको छ। त्यसकारण मनलाई अन्तर्मुखी गर्न बड़ो कठिन छ। ज्ञानी पुरुष मनको मलिनता धुन निमित्त विराट् पुरुषको धारणा गर्छन्। विराट् पुरुषको धारणाको अर्थ हो सारा जगत्‌लाई ब्रह्मरूप मान्नु। ब्राह्मण त्यस विराट्‌रूपको मुख हो, क्षत्रिय हात हो, वैश्य कम्मर हो, शूद्र गोड़ा हो, नदीहरू नाड़ी हुन्। यसप्रकार जगत्‌का प्रत्येक पदार्थलाई ब्रह्मरूप देखेर मनलाई शुद्ध गर्नु छ। साधारण साधकका निमित्त यस विराट् पुरुषको कल्पना र धारणा गर्न कठिन छ। त्यसकारण केही मानिस अति सुन्दर नारायण भगवान्‌को ध्यान गर्दछन्।

जगत्‌लाई जबसम्म ब्रह्मरूप मान्दैनौं तबसम्म राग-द्वेष मेटिँदैन। केही मानिस जगत्‌लाई ब्रह्ममय मान्दछन् भने केही प्रत्येक पदार्थमा ब्रह्मरूपको अनुभव गर्छन्। रागद्वेषको नाशका निमित्त विराट् पुरुषको ध्यान गर। सारा विश्व उही विराट्‌पुरुषको स्वरूप हो। यस्तो भावना मनमा दृढ़ भयो भने जगत्‌को कुनै वस्तुका प्रति हीन भाव वा कुभाव हुँदैन।

हरि जगत् हुनुहुन्छ। ब्रह्मदृष्टिबाट जगत् सत्य छ। ब्राह्मण भगवान्‌का मुखबाट निस्केका, क्षत्रिय भगवान्‌का हातबाट निस्केका हुन्, वैश्य कम्मरबाट निस्केको हो, शूद्र पाउबाट निस्केको हो। त्यसकारण कुनैको पनि अपमान गर्नु भगवान्‌कै अपमान गर्नु हो। त्यसकारण कसैको पनि तिरस्कार र अपमान नगर। जगत्‌मा जड़ र चेतनको जब भेद राख्छौं तबसम्म ध्यानमा एकाग्रता आउँदैन।

यसपछि भागवतमा वैराग्यको उपदेश दिएको छ। विना वैराग्यको ध्यान हुन सक्तैन, ध्यानमा एकाग्रता हुन सक्तैन।

संसारको स्मरण दुःख हो र संसारको विस्मरण सुख हो।

ज्ञानमार्गमा तीव्र वैराग्य हुनुपर्छ। भक्ति-प्रेममार्गमा समर्पणको प्रधानता छ। भक्ति गर्ने हो भने त्यो वैराग्यका विना चल्न सक्छ तर सबैका साथ प्रेम गर्नैपर्छ। वैराग्यबाट यो काम ज्यादा कठिन छ। सबैसित प्रेम गर अथवा एक्लै ईश्वरसँग प्रेम गर। जगत्‌को प्रत्येक पदार्थसँग प्रेम गर्नु भक्तिमार्ग हो।

ज्ञानमार्ग त्यागप्रधान हो। भक्तिमार्गमा समर्पणको प्राधान्यता छ। ज्ञानी सबैको निषेध गर्दै परिनिषेधमा जो शेष रहन्छ त्यसैमा मनलाई दृढ़ गर्दछ। साधारण मानिसलाई ज्ञानमार्ग सुलभ छैन। मनुष्य सर्वस्व त्याग्न सक्दैन।

शरीरबाट आत्मा भिन्न छ भन्ने कुरा सबैले बुझेको छ तर त्यसको अनुभव सजिलो छैन। भक्त मान्दछ गाईमा बस्नुभएका श्रीकृष्णको सेवा घाँसमा बस्नुभएका श्रीकृष्णसँग गरूँला।

भक्ति-मार्गमा सद्भाव आवश्यक छ। सबैका प्रति सद्भाव राख्नु कठिन काम हो। श्रीकृष्ण भगवान् त स्वयंलाई लात मार्नेलाई पनि सद्भावको दृष्टिले हेर्नुहुन्छ।

मनको मलिनता धुनलाई विराट्पुरुषको ध्यान गर्नुपर्छ। विराट्पुरुषको ध्यान गर्नु भनेको अर्थ हो, यस जगत्मा जो केही देखिइरहेको छ त्यसमा परमात्माको वास छ, यस्तो संझेर व्यवहार गर्नु। सारा जगत् त्यही विराट्पुरुषको स्वरूप हो। विराट् पुरुषको ध्यानलाई तीव्र वैराग्य जरूरी छ।

सारा विश्व ब्रह्मस्वरूप हो, यस्तो मानेर ज्ञानी पुरुष ललाटमा ब्रह्मको दर्शन गर्छ। वैष्णवजन हृदयमा चतुर्भुज द्वारिकानाथको दर्शन गर्छन्।

प्रभुको एक अङ्गको चिन्तन गर्नु ध्यान हो र प्रभुको सर्वाङ्गको चिन्तन गर्नु धारणा हो।

दास्य भक्तिद्वारा हृदय चाँड़ै दीन बन्नेछ। पहिले भगवान्का चरणारविन्दको ध्यान गर, फेरि मुखारविन्दको र अन्त्यमा सर्वाङ्गको ध्यान गर।

ध्यान योगको कथा 'कपिल गीता'मा विस्तारपूर्वक वर्णन गरिएको छ जसको यहाँ संक्षेपमा उल्लेख गरिएको छ।

साधकले सावधान भएर ध्यान गऱ्यो भने उसले यो कुरा बुझ्ने छ के भने मायाको शक्ति भ्रान्तिमय नै हो।

ईश्वरको चिन्तन हुन नसके पनि केही छैन तर संसारको चिन्तन कहिले पनि गर्नुहुन्न। ईश्वरको ध्यान चाहे हुन नसकोस् तर संसारको ध्यान छोड्ने बानी बसाल्नुपर्छ।

ध्यान विना ईश्वरको साक्षात्कार हुन सक्तैन। जस्ता किसिमबाट रुपियाँपैसाको ध्यान गर्छौं सोही किसिमबाट परमात्माको ध्यान गर।

शुरु-शुरुमा आँखाका सामुन्ने अन्धकार जस्तो छाउँछ। तर धैर्यसँग योगधारण गरेर मनलाई वशमा गर। बुद्धिद्वारा प्रभुको सर्वाङ्गको धारणा गर। जसै-जसै बुद्धि स्थिर भएर जान्छ तसै-तसै मन पनि स्थिर हुन लाग्छ। धारणा स्थिर भएपछि ध्यानमा प्रभुको मङ्गलमय स्वरूप देखिन्छ र भक्तियोगको प्राप्ति हुन्छ।

ध्यानमा यदि मन स्थिर हुन सकेन भने त्यस मनलाई मृत्युद्वारा तर्साऊ। तब त्यो स्थिर हुन्छ। मनलाई कुनै प्रकारले संझाऊ र स्थिर गराऊ।

**क्षणभंगुर जीवन की कलिका, कल प्रातःको जाने खिली न खिली,**
**मलयाचलकी शुद्धि शीतल मंद, सुगन्ध समीर चली न चली।**

कलिकाल कुठार लिए फिरता तन नम्र है चोट झिली न झिली,
रटले हरिनाम अरी रसना, फिर अन्त समय में हिली न हिली॥

ज्ञानदेवले मनलाई गुरु बनाएको छ, मनको सच्चा गुरु आत्मा हो।

एकनाथ महाराजका नजीक एकजना वैष्णव आए। उनले महाराजलाई सोधे—तपाईंको मन ईश्वरमा सदा-सर्वदा श्रीकृष्णमा कसरी स्थिर रहन्छ ? मेरो मन तर आधा घण्टा पनि प्रभुमा स्थिर हुन सक्तैन। मनलाई स्थिर गर्ने कुनै उपाय भन्नुहोस्। एकनाथले सोच्नुभयो उपदेश क्रियात्मक हुनुपर्छ। उहाँले भन्नुभयो, अहिले यस कुरालाई छोड़िदेऊ। मलाई लाग्दछ तिम्रो मृत्यु नजिकै आइरहेछ। मृत्युका पहिले वैर र वासनालाई त्याग्नुपर्छ। वैर र वासनाले मृत्युलाई बिगार्छ। सात दिनपछि फेरि मकहाँ आउनू।

मृत्युको नाउँ सुन्नासाथ ती वैष्णवको होशनै उड़िगयो। ती घर फर्किए। धन-सम्पत्ति आदि सबै कुरा छोराका जिम्मा लगाए। तिनले सबैसँग माफी मागे र ईश्वरको ध्यान गर्न लागे। सात दिनपछि ती एकनाथ महाराजकहाँ आए। महाराजले सोध्नुभयो—यी सात दिनहरूमा तिमीले के-के गर्‍यौ ? तिमीले कुनै पाप गरेनौ ? वैष्णवले उत्तर दिए—म मृत्युसँग यस्तो डराएँ सबै कुरा छोड़ेर प्रभुको ध्यानमा लागें।

तब एकनाथले भन्नुभयो मेरो एकाग्रताको पनि यही रहस्य हो। म मृत्युलाई सधैं सम्झन्छु। म मनमा मृत्युको डर राखेर सदा ईश्वर भजन गर्छु। त्यसैले सबै विषयहरूबाट मेरो मन हट्दछ र सदा-सर्वदा श्रीकृष्णमा एकाग्रता रहन्छ।

परमात्मामा मन तन्मय हुन नसके केही कुरा छैन तर संसारका साथ कहिल्यै तन्मय नबन।

परमात्माको ध्यानले जीव ईश्वरमा मिल्न जान्छ। ध्यान गर्ने मानिस ध्येयमा मिल्न जान्छ। ध्याता, ध्यान र ध्येय तीनै एक हुन्छन्। यही मुक्ति हो, यही अद्वैत हो।

दृष्टि, द्रष्टा र दर्शन एक हुनुपर्छ। साधन, साधक र साध्य एक बन्नुपर्छ।

ध्याता, ध्यान र ध्येय तथा दर्शन, द्रष्टा र दृश्य एक बन्यो भने सम्झ ध्यानमा र दर्शनमा एकाग्रता उत्पन्न भइसकेको छ। एकाग्रता भएपछि त्यसले अरू कुरा सबै बिर्सन्छ र उसलाई ईश्वरका सिवाय केही पनि देखिँदैन।

मानिस परमात्मालाई धन दिन्छन् तर उहाँ मन माग्नु हुन्छ। व्यवहार त गर तर ईश्वरमा, कृष्णमा मन राखेर गर। पानी बोक्ने आइमाइहरू शिरमा पानी भरिएको गाग्रो बोकेर कुरा गर्दै हिँड्छन् र पनि उनको ध्यान शिरमा रहेको गाग्रोमै रहन्छ किनभने नखसोस् भनेर। यस्तै किसिमले संसारको व्यवहार गर्दाखेरि पनि सधैं ईश्वरको स्मरण पनि गर्दैरहू। जगत्का पदार्थहरूमा आसक्त नहोऊ।

विषयानन्दी व्यक्तिले ब्रह्मानन्दलाई बुझ्न सक्दैन। ब्रह्मानन्दको वर्णन कसैले पनि गर्न सक्दैन। उपनिषद्‌मा दृष्टान्त दिइएको छ मिश्रीद्वारा तयार भएकी पुतलीले समुद्रको गहिराइलाई जान्ने कोशिश गरी। तर त्यो सागरभित्र के गई गएको गयै भई। त्यसैमा त्यो विलीन भई। जो ईश्वरमा लीन भएको छ, त्यस जीवलाई कसैले ईश्वरबाट भिन्न गर्न सक्दैन। जसै-जसै ध्यान गरिन्छ त्यसै रूपले जीवको परमात्मामा लय हुँदै जान्छ र फेरि जीवको जीवत्व रहँदै रहँदैन।

भागवतमा ज्ञानमार्ग र भक्तिमार्ग दुवैको वर्णन भएको छ।

ज्ञानमार्गमा जीव ईश्वरका साथ एक हुन्छ र ईश्वरमा विलीन हुन्छ। दोस्रो तर्फ कतिपय वैष्णवाचार्य केही द्वैत राखेर अद्वैतलाई मान्दछन्। भक्तिको आरम्भ द्वैतबाट भए पनि त्यसको समाप्ति तर अद्वैतबाटै हुन्छ। भक्त र भगवान् अलग्ग हुन सक्दैनन्। जो जीव ईश्वरमा विलीन भएको छ त्यसलाई भगवान्‌ले आफ्नो स्वरूपबाट अलग्ग गर्न सक्नुहुन्न। उपनिषद्‌मा ईश्वरको वर्णन गर्दै भनेको छ 'रसो वै सः।' अर्थात् ईश्वर रसरूप हो।

वैष्णव आचार्य अभेद भावमा श्रद्धा राख्छन्। पानीभित्र बस्ने माछाले पानी पिउन सक्दैन। यस्तै तरहले जो ब्रह्मरसमा ब्रह्मरूप भइसकेको छ, त्यो परमात्माको रसात्मक स्वरूपको अनुभव गर्न सक्दैन। ब्रह्मरूप हुनाले जीवको दुःख निवृत्ति चाहिँ हुन्छ तर त्यसले आनन्दको अनुभव गर्न सक्दैन। रसात्मक र आनन्दात्मक ब्रह्मको अनुभव गर्नका निमित्त जीवलाई केही अलग्गै बस्नु पर्ला, अलिकता द्वैत राख्नैपर्छ। तब भक्त भन्छ म आफ्नो प्रभुको अंश हुँ, म आफ्नो भगवान्‌को गोपी हुँ। मलाई परमात्मासँग एक हुनु छैन, मलाई गोलोक धाममा जानुछ।

भक्त जब लौकिक देहलाई छोड़ेर अप्राकृतिक शरीर धारण गरी गोलोक धाममा प्रवेश गर्छ तब भगवान्‌लाई आनन्द हुन्छ। उहाँ भन्नुहुन्छ, 'मेरो अंश ममा मिल्न आएछ।' त्यसकारण भगवान् उत्सव मनाउनुहुन्छ।

## भक्ति करता तुका झाला पांडुरंग

तर तुकाराम भन्नुहुन्छ कीर्तन गर्नमा जो मलाई आनन्द मिल्दछ त्यो विट्‌ठल बन्नमा पाइँदैन।

जीव ईश्वरको अनुभव कहिले गर्न सक्ला? जब ईश्वरबाट त्यो भिन्न रहला तब त्यसले त्यो रसको अनुभव गर्न सक्ला। वैष्णवाचार्य चाहनुहुन्छ जीव ईश्वरबाट केही अलग्गै रहोस्।

कीरा भमराको चिन्तन गर्दो छँदो स्वयं भमरारूप बन्न जान्छ। त्यस्तै किसिमले ब्रह्मको चिन्तन गर्दै जीव स्वयं ब्रह्मरूप बन्दछ। यो हो कैवल्य मुक्ति। तर वैष्णवजन यस्तो कैवल्य मुक्तिको इच्छा गर्दैनन्। तिनीहरू ईश्वरको सेवा-पूजा र त्यसको रसास्वादन गर्नका निमित्त अलिकता द्वैतभाव राख्छन्।

जो व्यापक ब्रह्ममा लीन भइसकेका छन् त्यो यसबाट अलग्ग कसरी हुन सक्छ? पानी जड़मा ठोस हुनाको कारणले माछा अलग्ग बस्न सक्छ। तर जो पानीमा सबै किसिमले डुबिसकेको

छ त्यसले पानीको स्वाद लिन सक्दैन। त्यस्तै किसिमले ईश्वरमा डुबेको जीव ईश्वरको स्वरूपको रसानुभव गर्न सक्दैन। त्यसैले वैष्णव महापुरुष अलिकति द्वैत राखेर भगवान्‌को सेवा-स्मरणमा कृतार्थताको अनुभव गर्छन्।

यी दुवै सिद्धान्त सत्य हुन्। खण्डन-मण्डनको भुमरीमा नपर। गौराङ्ग प्रभु पनि भेदाभेद भावलाई मान्नुहुन्छ। लीला भेदलाई मान्दछ। तर तत्त्व-दृष्टिबाट अभेद छन्। अभिन्न भएर पनि ती दुइमा सूक्ष्म भेद छ।

एकनाथ महाराजले 'भावार्थ रामायण' मा त्यस सिद्धान्तलाई संझाउनका निमित्त एक दृष्टान्त दिनुभएको छ।

अशोक वनमा रामका विरहमा सीताजी रामको अखण्ड ध्यान-समरण गर्छिन्। सीताजी रामको ध्यानमा तन्मय हुन्छिन्। सर्वत्र राम देखिनुहुन्छ। माताजीले बिर्सिदिन्छिन् कि आफू सीता हुन्।

सबैमा रामको रूप अनुभव गर्ने मानिस रामरूप बन्दछ। यही कैवल्य मुक्ति हो।

सीताजीलाई कैयौं पटक आफू रामरूप भएको लाग्यो। उनी आफ्नो स्त्रीत्व पनि बिर्सिदिन्थिन्।

एक पटक सीताजीले त्रिजटालाई सोधिन्, 'मैले सुनेकी छु कीरा भँवराको चिन्तन गर्दै स्वयं भमरा बन्नजान्छ त्यसै गरी रामजीको सदा चिन्तन गर्नाले म पनि यदि राम बनिगएँ भने के होला ?'

सीताजी रामजीको ध्यानमा यस्तो तन्मय हुन्छिन् मानौं उनी स्वयं राम भइहाल्छिन्।

**ब्रह्मविद् ब्रह्मेव भवति।**

त्रिजटाले भनिन्, 'माताजी, रामरूप भयो भने बेसै भयो नि। जीव-शिव एक भयो भने जीव कृतार्थ भइहाल्छ।'

तब सीताजी भन्छिन्, 'यदि म रामको चिन्तन गर्दै स्वयं राम बनें भने फेरि श्रीरामचन्द्रजीको सेवा कसले गर्ला ? सीता भएर रामको सेवा गर्नमा जो आनन्द छ, त्यो स्वयं रामस्वरूप बन्नमा छैन। मलाई राम बन्नमा आनन्द छैन। मलाई तर रामजीको सेवा गर्नु छ।'

सीताजीलाई दुःख हुन्छ उनको युगल भाव खण्डित भइजान्छ भनेर। त्यस हालतमा सीता-रामको युगल भाव रहन सक्दैन।

तब त्रिजटाले भनिन्—'अन्यान्य प्रेम भएको कारण रामजीले तपाईंको चिन्तन गर्दै सीतारूप बन्नु हुनेछ र यस्तै किसिमले तपाईंको युगल भाव जगत्‌मा अखण्डित हुनेछ।'

यही भागवती मुक्तिको रहस्य हो।

वैष्णव आचार्य प्रथम द्वैतको नाश गर्छन् र अद्वैत प्राप्त गर्छन्। फेरि काल्पनिक द्वैत बनाइराख्छन् जसको कारणले कृष्णको गोपीभावबाट पूजा गर्न सकियोस्।

ज्ञानीजन ज्ञानबाट अद्वैत सिद्ध गर्छन्। यो अद्वैत मुक्ति भयो, कैवल्य मुक्ति भयो।

भक्त भक्तिबाट अद्वैत सिद्ध गर्छन्। यो भागवती मुक्ति हो।

यसप्रकार दुइ भक्तिहरूको वर्णन भएको छ। सत्र तत्त्वहरूको सूक्ष्म शरीर छ। स्थूल र सूक्ष्म शरीरको नाश भएपछि मुक्ति प्राप्त हुन्छ।

विचार-प्रधान मनुष्य ज्ञानमार्ग मन पराउँछ। भावना प्रधान मनुष्य कमलो हृदय हुनाको कारणले भक्तिमार्ग रुचाउँछ।

ईश्वरबाट विमुख नहुनु भक्ति हो। सबै साधनहरूमा भक्ति मातर श्रेष्ठ हो। भक्तिशून्य पुरुषको सबै साधन निष्फल रहन्छ। जीव र ईश्वरलाई मिलाउने साधन कथा हो। भागवतमा जहाँ पनि भक्ति शब्दको प्रयोग गरेको छ त्यहाँ तीव्र शब्द पनि प्रयोग भएको छ। भक्ति तीव्र हुनुपर्छ। विना तीव्रताको साधारण भक्तिबाट केही हुँदैन।

**तीव्रेण भक्तियोगेन यजेत पुरुषं परम्।**

वैराग्यको इच्छावाला मुमुक्षु भक्त भयो भने तीव्र भक्तियोगबाट परम पुरुष, पूर्ण परमात्माको पूजन गर्नुपर्छ।

शुकदेवजी भन्नुहुन्छ—

'हे राजन्! मुक्ति प्राप्त गर्नु छ भने शुरुमा भोगहरूलाई त्याग गर्नै पर्छ। भोगी, ज्ञान या भक्ति मार्गमा अगाड़ि बढ्न सक्दैन। भोग भक्तिमा पनि बाधक छ र ज्ञानमा पनि। भोगको अपेक्षा त्यागमा अनन्तगुणा सुख छ।'

इन्द्रियजन्य सुख सबै प्राणीहरूमा एक समान हुन्छ। पशुको, मानिसको र देवगन्धर्वको त्वचेन्द्रियको स्पर्शसुख र जिह्वेन्द्रियको रससुख समानै हुन्छ। इन्द्रिय सुखको उपभोगका समयमा जो आनन्द मानिसलाई मिल्दछ त्यही आनन्द पशुलाई पनि पाइन्छ। छप्पन मन रुवाको डस्ना भएको पलङ्गमा सुत्ने सेठलाई जो आनन्द हुन्छ त्यही आनन्द फोहर मैलाको थुप्रामा बसेको गदहाले पनि पाउँछ। त्यसकारण मनुष्यले बुद्धिपूर्वक भोगलाई छोड़ोस्।

भोगमा क्षणिक सुख पाइन्छ तर त्यागबाट सदाका निमित्त अनन्त सुखको प्राप्ति हुन्छ।

भोगले शान्ति पाइँदैन, त्यागले शान्ति पाइन्छ। पशु, पंछी, मनुष्य सबैका निमित्त इन्द्रिय-सुख एक समान छ। मानिसलाई जो सुख मिठाई खानाले पाइन्छ त्यही सुख सुँगुरले विष्टा खानाले पाउँछ।

राजन्! तिमीले आजसम्म अनेक भोगहरूको उपभोग गर्‍यौ। अब तिमीले एक-एक इन्द्रियहरूलाई भक्तिरसको पान गराऊ। इन्द्रियरूपी पुष्प तिमी भगवान्‌लाई अर्पण गर।

राजन्! बिस्तार-बिस्तार संयम बढ़ाऊ, श्रीकृष्णको सतत् ध्यान गर्नु मनुष्यमात्रको कर्त्तव्य हो, जो ईश्वरमा तन्मय हुन्छ त्यसैले मुक्ति पाउँछ।

राजन् ! जन्म त्यसको सफल भएको छ भन्ठान जसलाई दोस्रो पटक आमाको गर्भमा जाने अवसर नमिलोस्। गर्भवास नरकवास हो। कर्म र वासनालाई साथ लिएर जो जन्म लिन्छ, त्यसका निमित्त गर्भवास नरकवास हो।

शुकदेवजी जनक राजाको राजगृहमा विद्या सिक्न भनी गए। विद्याभ्यास समाप्त भयो। शुकदेवजीले गुरुदक्षिणा दिने इच्छा प्रकट गर्नुभयो। जनक राजाले भन्नुभयो—'मलाई गुरुदक्षिणाको इच्छा छैन। तैपनि तिमी आग्रह गर्छौ भने जगत्मा जो वस्तु बिलकुल निरुपयोगी हो मलाई देऊ।'

जनक राजाले निरुपयोगी वस्तु माग्नुभयो, शुकदेवजी त्यसको खोजीमा निस्किनुभयो। उहाँले पहिले माटो उठाउनुभयो तब त्यसले भन्यो मेरा कैयौं उपयोग छन्। ढुङ्गाले पनि त्यसै भन्यो। जुन वस्तु उठाए पनि ती सबै उपयोगी निक्लिन पुगे। अन्तमा हार खाएर शुकदेवजीले विष्टा उठाउनुभयो त्यसले पनि भन्यो म पनि उपयोगी हुँ। मनुष्यको पेटमा जानासाथ मेरो यो अवस्था भयो तैपनि म निरुपयोगी छैन।

सोच्दा-सोच्दा शुकदेवजीले थाहा पाउनुभयो यो देहाभिमान मात्रै निरुपयोगी हो।

परमात्माको सेवा गर्दै पुरुषत्व र स्त्रीत्वको भान भयो भने गोपी भाव सिद्ध हुन्छ र परमात्माको नित्यलीलामा प्रवेश पाइन्छ। 'सङ्ग त्यक्त्वा सुखी भवेत्।'

शुकदेवजीले जनक राजासँग भन्नुभयो 'म आफ्नो देहाभिमान गुरुदक्षिणामा अर्पित गर्छु।' यो सुनेर जनक राजाले शुकदेवजीलाई भन्नुभयो 'अब तिमी कृतार्थ भयौ।'

शुकदेवजीले देहाभिमान छोड़िदिए र देहाभिमान नभएबाट उनले मङ्गलाचरण भन्नुभएन। चौथो अध्यायमा मङ्गलाचरण भनेको छ बाह्रौं श्लोकदेखि ( स्कन्ध २, अध्याय ४, श्लोक १२ )।

साधकलाई कथाले बाटो देखाउँछ। यति मात्र होइन, सिद्ध पुरुषलाई पनि कथा सुन्नुपर्दछ। शुकदेवजीका कथामा पनि पराशरजी, व्यासजी आदि बसेका थिए।

द्वितीय स्कन्धमा अध्याय १-२-३ मा भागवतको सारा सार र सारा बोध आएको छ। राजालाई जो उपदेश दिनु थियो त्यो तीन अध्यायमा विदित छ। फेरि त्यसपछि परीक्षित् राजाको मन विषयतर्फ नफर्कियोस् भन्नाखातिर सबै चरित्रहरूको वर्णन भएको छ।

शुकदेवजी स्तुति गर्नुहुन्छ—

**नमो नमस्तेऽस्त्वृषभाय सात्वतां विदूर काष्ठाय मुहुः कुयोगिनाम्।**
**निरस्तसाम्यातिशयेन राधसा स्वधामनि ब्रह्मणि रंस्यते नमः॥**

( भा० २-४-१४ )

जो महान् भक्तवत्सल छ र हठपूर्वक भक्तिहीन साधना गर्नेले जसको छायाको पनि स्पर्श गर्न सक्तैन, जसको समान कसैको पनि ऐश्वर्य छैन, जो ऐश्वर्य मुक्त भएर निरन्तर ब्रह्मस्वरूप आफ्नो धाममा विहार गरिरहन्छन्, यस्ता भगवान् श्रीकृष्णलाई म बारंबार नमस्कार गर्छु।

प्रेममा पक्षपात भइहाल्छ। शुकदेवजी राधाकृष्णलाई दुइपटक नमस्कार गर्नुहुन्छ। किनभने राधाजी श्रीशुकदेवजीकी गुरु हुन्, राधाजीले शुकदेवजीलाई ब्रह्मसम्बन्ध गराइदिएकी थिइन्। यस श्लोकमा 'राधस्य' शब्दको अर्थ केही महात्माहरूले राधिकाजी पनि लगाउँछन्।

शुकदेवजी पूर्वजन्ममा शुगा थिए। उनी रातदिन हरिया निकुञ्जहरूमा राधाको नाउँ रटिरहन्थे। शुकदेवजी श्रीराधाका शिष्य हुन्। यही कारण हो भागवतमा राधाजीका नाउँको उल्लेखसम्म भएको छैन। गुरुको नाउँ प्रकटरूपले लिनु शास्त्रनिषिद्ध छ।

भागवतका टीकाकार श्रीधरस्वामी यी पाँच वस्तुहरूलाई नित्य मान्दछन्। भगवान्‌को स्वरूप, भगवान्‌को लीला, भगवान्‌को धाम, भगवान्‌को काम र सेवा।

परीक्षित् राजाले सोध्नुभयो—आफ्नो मायाले भगवान् यस सृष्टिको रचना कसरी गर्नुहुन्छ। यस सृष्टिको उत्पत्तिको कथा भन्नुहोस्।

शुकदेवजीले भन्नुभयो—'राजन् तिमीले जो प्रश्न मलाई सोधेका छौ, त्यही प्रश्न नारदजीले ब्रह्माजीसँग सोध्नुभएको थियो। तिमी त्यसको कथा सुन। ब्रह्माजीले नारदजीसँग सृष्टिका आरम्भको कथा भन्नुभएको थियो।'

भगवान्‌को इच्छा भयो आफू एकबाट अनेक बनौं। 'एकोऽहम् बहुस्याम्।' उहाँले चौबीस तत्त्व उत्पन्न गर्नुभयो। ती तत्त्वहरूले केही गर्न सकेनन्, तब प्रभुले ती सबै तत्त्वहरूमा प्रवेश गर्नुभयो। तब ती तत्त्वहरूमा चेतन शक्ति प्रकट भयो।

सातौं अध्यायमा भगवान्‌को लीला अवतारको संक्षिप्त वर्णन छ।

ब्रह्माजीको निष्कपट तपश्चर्याबाट प्रसन्न भएर भगवान्‌ले उहाँलाई आफ्नो स्वरूपको दर्शन गराउनुभयो। आत्मतत्त्वको ज्ञानका निमित्त उहाँलाई परम सत्य परमार्थ वस्तुको जो उपदेश दिनुभयो, त्यसको कथा सुनाउँछु।

आदिदेव ब्रह्माजी आफ्नो जन्मस्थान कमलमाथि बसेर सृष्टि रच्ने इच्छामा डुबेर बस्नुभएको थियो। तैपनि जुन ज्ञानदृष्टिबाट सृष्टिको रचना गर्न सकिन्थ्यो, त्यो प्राप्त हुन सकेन। यत्तिकैमा ब्रह्माजीले आकाशवाणी सुन्नुभयो—'तप तप'। ब्रह्माजीले संझनुभयो मलाई तप गर्न आदेश भएको हो। ब्रह्माजीले सय वर्षसम्म तप गर्नुभयो र उहाँलाई चतुर्भुज नारायणको दर्शन भयो।

तप नगरिकन कसैको पनि काम बन्दैन। जसले तप गर्दैन त्यसको पतन हुन्छ। ('तप' शब्दलाई पल्टाइदिएमा 'पत' हुन्छ)।

नारायण भगवान्‌ले ब्रह्माजीलाई चतुःश्लोकी भागवतको उपदेश दिनुभयो। द्वितीय स्कन्धको नवौं अध्यायको ३२-३५ श्लोक भनेको चतुःश्लोकी भागवत् हो।

भगवान् आँखा चिम्लने खेल खेल्नुहुन्छ। आरम्भमा सबै जीव भागवतमा निहित थिए। भगवान् प्रत्येक जीवलाई खोजी-खोजी त्यसको कर्मानुसार शरीर उसलाई दिनुहुन्छ। फेरि भन्नुहुन्छ—'अब म लुक्छु तिमी मलाई खोजी निकाल।'

जब जगत् अस्तित्वमा थिएन, तब पनि म थिएँ। जब जगत् हुने छैन, तब पनि म हुने छु। जसरी सपनामा एउटै अनेक स्वरूप देखिन्छ, त्यस्तै किसिमबाट जाग्रत अवस्थामा पनि अनेकमा एउटै तत्त्व छ, यस्तो ज्ञानी पुरुषको अनुभव हो। आभूषण आकार भिन्न-भिन्न भए पनि सबै एउटै सुवर्णबाट बनेका हुन्छन्। मूल्य पनि त्यही सुवर्णको हो आकारको होइन।

ईश्वरका सिवाय जे-जति देखिन्छ, त्यो असत्य हो। ईश्वरका सिवाय अर्को जो-जति देखिन्छ त्यो ईश्वरको माया हो। अस्तित्व नभएर पनि जो देखिन्छ र सबैमा व्याप्त भइकन पनि ईश्वर नदेखिए त्यो पनि माया हो। यो मायाकै काम हो। यसैलाई महापुरुष आवरण र विक्षेप भन्छन्।

सबैको मूल उपादान-कारण प्रभु हो। प्रभुमा भासमान संसार सत्य होइन तर मायाका कारण आभासित हुन्छ।

मायाका दुइ शक्तिहरू छन्—आवरण शक्ति र विक्षेप शक्ति। (१) आवरण शक्ति—आवरण शक्तिले परमात्मालाई लुकाइरहन्छ। (२) विक्षेप शक्ति—मायाको विक्षेप-मायाको शक्तिले ईश्वरको अधिष्ठानमै जगत्को भास गराउँछ। ईश्वरमा जगत्को भास गराउँछ।

अधिकारको दृष्टान्तद्वारा यो सिद्धान्तलाई संझाइएको छ। जो छैन त्यो भूलले देखिन्छ र जो छ त्यो देखिँदै देखिँदैन।

आत्मस्वरूपको विस्मरण भनेको माया हो। आफ्नो स्वरूपको विस्मृति स्वप्न हो। जसले स्वप्न देख्दछ त्यो देख्नेवाला साँचो हुन्छ। स्वप्नमा एउटै पुरुष दुइवटा देखिन्छन्। तात्त्विक दृष्टिबाट हेर्‍यौंभने स्वप्नको साक्षी र प्रमाता एउटै हुन्छ। त्यो जब ब्यूँझन्छ तब उसलाई विश्वास भइहाल्छ म घरमा पलङ्गमा सुतेको छु। स्वप्नको पुरुष भिन्न हुन्छ। जगत्को ब्रह्मतत्त्व एउटै हो तर मायाको कारणले अनेकत्वको भास हुन्छ। माया जीवनसँग जोरिएको छ। यो माया जीवनसँग कहिलेदेखि मिल्न आयो भन्न सकिन्न, किनभने माया अनादि हो। त्यसको मूल खोज्ने आवश्यकता छैन।

मायाको अर्थ हो अज्ञान। अज्ञान कहिलेदेखि शुरु भयो, यो जान्नुपर्ने के आवश्यकता छ? माया जीवनसँग कहिलेदेखि लागी त्यसको विचार नगर। त्यसको समाधान कसैले गर्न सक्दैन। कहिले विस्मरण भयो, यो भन्न सकिँदैन। त्यस्तै किसिमले अज्ञानको कहिले आरम्भ भयो, यो पनि भन्न सकिन्न तर अज्ञानको तात्कालिक विनाश गर्नु जरूरी छ।

लुगामा दाग लाग्यो भने त्यो कसरी लाग्यो, कुन ठाउँमा लाग्यो, कुनचाहिँ मसी होला इत्यादिको विचार गर्नुको साटो त्यस दागलाई तुरुन्त हटाउनु जाती हुन्छ।

मायाका विषयमा सोचिरहनुको सट्टा मायालाई पन्छाउनका निमित्त परमात्माको शरण लिनु असल छ।

मायालाई दर्शन गर्ने सुदामाको इच्छा भएपछि उनले श्रीकृष्णसँग भने, 'तपाईंको मायाको म दर्शन गर्न चाहन्छु। त्यो कस्तो हुन्छ ?' श्रीकृष्णले भन्नुभयो, 'समय आएपछि त्यसको दर्शन गराउने छु। जाऔँ, पहिले गोमतीमा स्नान गरिहालौँ।'

दुवै गोमती किनारमा आएर नुहाउन थाले, भगवान् चाहिँ नुहाएर पीताम्बर लगाउन थाल्नुभयो। सुदामाले गोमतीको जलमा डुबुल्की मारे। त्यही समयमा भगवान्‌ले आफ्ना मायाको दर्शन गराइदिनुभयो।

सुदामालाई यस्तो लाग्यो गोमतीमा बाढ़ी आएको छ। त्यसमा उनी बगेर गइरहेछन्। उनले एउटा घाटको आश्रय लिए। घुम्दै-फिर्दै उनी एउटा गाउँनजिक आइपुगे। त्यहाँ एउटी ढोईले उनको घाँटीमा फूलमाला लाइदिई। मानिसहरूले सुदामालाई भने 'हाम्रा देशका राजाको मृत्युभएको छ। यस गाउँको नियम छ पहिलेका राजाको मृत्युपछि ढोईले जसलाई माला लगाइदिन्छे त्यही राजा हुन्छ। त्यस कारण तपाईं हाम्रो राजा हुनुभयो।'

सुदामा राजा भए। एउटी राजकन्याका साथ विवाह पनि भयो। बाह्र वर्षको दाम्पत्य जीवनमा दुइजना पुत्र पनि भए। फेरि एक दिन बिरामी हुँदा रानीको मृत्यु भयो। सुदामा दुःखले रुन थाले किनभने ती रानी सुन्दर र सुशील थिइन्। मानिसहरूले सुदामालाई भने 'न रुनुहोस्, हाम्रो मायापुरीमा नियम छ तपाईंकी दुलही जहाँ गएकी छन्, वहाँ तपाईंले पनि जानुपर्छ। पत्नीको चितामा तपाईंले पनि प्रवेश गर्नुपर्छ।'

अब सुदामा दुलहीका निमित्त रुन छोड़े र आफ्ना निमित्त रुन थाले। हाय ! अब मेरो के गति होला ? उनले मानिसलाई भने 'म परदेशी हुँ। तपाईंको गाउँको कानून ममाथि लागू हुन सक्तैन। मलाई एक पटक स्नान-संध्या गर्न दिनुहोस् अनि इच्छा लाग्छ भने मलाई पोलिदिनू।' नुहाउन गए त चार-पुरुषले रखवारी गर्न थाले कहीं सुदामा भागेर नजाऊन्। सुदामा खूब डराए। आत्तिएर उनी परमात्माको स्मरण गर्न थाले।

उनी रुँदै नदीमास्तिर आए। त्यसवेला भगवान् किनारमा उभिएर पीताम्बर पहिरिई रहनुभएको थियो। भगवान्‌ले सोध्नुभयो—'तिमी किन रोइरहेको ?' सुदामाले भने 'त्यो सबै कहाँ गयो ? यो सबै क्या हो ? मेरो संझनामा केही आउँदैन।' भगवान्‌ले भन्नुभयो, 'यही मेरो माया हो। मेराविना जो आभास हुन्छ त्यही मेरो माया हो।'

मायाको अर्थ हो विस्मरण। 'मा' निषेधात्मक र 'या' हकारात्मक, यस प्रकार जो हुँदैन र उसले देख्छ त्यही माया हो।

मायाका तीन प्रकार छन्—( १ ) स्व-मोहिका, ( २ ) स्वजन-मोहिका र ( ३ ) विमुख जन-मोहिका।

जो सतत् ब्रह्मनिष्ठ रहन्छ त्यसलाई मायाले समाउन सक्तिन। माया जीवसँग टाँसिइरहेकी हुन्छे; यो सिद्धान्त तत्त्व-दृष्टिबाट साँचो हुँदैन।

माया नर्तकी हो। त्यसले सबैलाई नचाउँछे। नर्तकी मायाको मोहबाट छुट्नु छ भने नर्तकी शब्दलाई उल्टाइदेऊ तब हुनेछ कीर्तन। कीर्तन गर्‍यौ भने माया पन्छिन्छे। कीर्तन-भक्तिमा हरेक इन्द्रियलाई काम पाइन्छ। यसैले महापुरुषले कीर्तन-भक्तिलाई श्रेष्ठ मानेका छन्।

मायाबाट उम्किनका निमित्त, माया जसकी दासी छे, त्यस मायापति परमात्मालाई पाउने प्रयत्न गर। मायाका दुःखबाट मुक्ति पाउने इच्छा गर्छौ भने माधव, रामका शरणमा जाओ।

मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते।

मलाई जो भज्दछन्, ती यस दुस्तर माया अथवा संसारलाई पार गर्छन् र तर्छन्।

तस्मात् सर्वात्मना राजन् हरिः सर्वत्र सर्वदा।
श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यो भगवान्नृणाम्॥

राजन्! त्यसकारण मानिसलाई चाहिन्छ त्यसले जस्तोसुकै स्थानमा र जस्तो समयमा पनि आफ्नो सम्पूर्ण शक्तिले भगवान् श्रीहरिको श्रवण, कीर्तन, स्मरण गरिरहोस्।

मायाको धेरै चर्चा नगर। ब्रह्माजीले नारदजीलाई यस्तो आज्ञा दिनुभएको थियो 'माया जसकी दासी हो, यस्ता मायापति परमात्माका चरणको भरोसा लिएर प्रभुशक्ति बढ़ोस् भन्नाखातिर त्यस किसिमको सिद्धान्तको प्रचार गर।' नारदजीले त्यो उपदेश व्यासजीलाई दिनुभयो, व्यासजीले ती चार श्लोकका आधारमा अठार हजार श्लोकको भागवत् शास्त्र रच्नुभयो।

हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

# ❀ तृतीय स्कन्ध ❀

आत्मालाई यस शरीरले बन्धनमा राख्तछ। शरीर जड़ हो, आत्मा चेतन हो तर जड़-चेतनको यो गाँठो असत्य छ। किनभने चेतनलाई जड़ वस्तुले कसरी बाँध्न सक्ला ? यो गाँठो असत्य भएमा पनि जसरी स्वप्नले हामीलाई रुवाउँछ त्यस्तै किसिमले यसले हामीलाई रुवाउँछ। तात्त्विक दृष्टिबाट हेर्‍यौं भने हामी यो भन्न सक्दैनौं जड़ शरीरले चेतन आत्मालाई बाँधेर राख्न सक्दछ। चेतन आत्मालाई जड़ शरीरले बन्धनमा राख्न सक्दैन। आत्मा शरीरबाट भिन्न छ, यो कुरा सबैलाई थाहा छ, तर यसको अनुभव थोरै-थोरै मानिसले गर्न सकेका छन्।

शुकदेवजी भन्नुहुन्छ—हे राजन, तिमी जो प्रश्न गर्दछौ, त्यस्तै प्रश्न विदुरजीले मैत्रेयजीसँग सोधेका थिए। यी विदुरजी यस्ता हुन् जसकहाँ आमन्त्रणविना पनि भगवान् उनका घर जानु भएको थियो।

परीक्षित्ले भने—विदुरजी र मैत्रेयजीको मिलन कहिले भयो त्यो मलाई भन्नुहोस्।

शुकदेवजी भन्नुहुन्छ—निम्तो नपाइकन भगवान् विदुरजीको घर जानुभएको थियो, त्यस प्रसङ्गको कथा पहिले भन्छु।

धृतराष्ट्रले पाण्डवहरूलाई लाहाको घरमा पोलिदिने कोशिश गरेका थिए। विदुरजीले धृतराष्ट्रलाई उपदेश दिए तर त्यसको धृतराष्ट्रले टेरपुच्छर लाएनन्। विदुरले सोचे—यी धृतराष्ट्र दुष्ट रहेछन्। यिनको कुसङ्गले मेरो बुद्धि पनि भ्रष्ट हुनेछ। तैपनि विदुरजीले उनलाई कैयौं पटक उपदेश दिए, तर धृतराष्ट्रले केही सुनेनन् तब विदुरले उनको घरै त्यागिदिए।

विदुरजी आफ्नी पत्नी सुलभाका साथ समृद्ध घरलाई छोड़ेर वनमा गए। वनवास विना जीवनमा सुवास आउँदैन। त्यसैले पाण्डवहरू र भगवान् रामचन्द्र पनि वनवास जानुभएको थियो।

विदुरजी पहिल्यैदेखि तपस्वीजस्तो जीवन बिताइरहेका थिए र भगवान्को कीर्तन गर्थे। त्यसकारण दुर्योधनको छप्पन भोग छोड़ेर श्रीकृष्णले विदुरको घरमा सागको भोजन गरे। विदुर र सुलभा वनमा नदी-किनारमा कुटी बनाएर बसेर तपश्चर्या शुरु गरे। तिनीहरू प्रतिदिन तीन घण्टा प्रभुको कीर्तन र तीन घण्टा प्रभुको सेवा गर्न थाले। बाह्र वर्षसम्म तिनीहरूले यस्ता प्रकारले भगवान्को आराधना गर्दै रहे।

मनलाई सतत् सत्कर्ममा लगाइराख। मन त्यसै बस्यो भने पाप गर्ला। भगवान्को उनीहरू कीर्तन गर्थे र भोक लागेमा साग खान्थे।

भोजन गर्नु पाप होइन। भोजनमा अल्मलिनु र भोजन गर्दा भगवान्लाई बिर्सनु पाप हो, कति मानिस कढ़ी खाँदा-खाँदै त्यसैमा हराउँछन् र आउने दिनमा माला फेर्दा पनि कढ़ीलाई संझना गर्दछन्। मनमा सोच्दछन् हिजोको कढ़ी कति स्वादिष्ट थियो।

विदुरले सुने द्वारिकानाथ सन्धि गराउन हस्तिनापुर आइरहनु भएको छ।

धृतराष्ट्रले सेवकहरूलाई आज्ञा दिए 'कृष्णको स्वागतको तयारी गर। छप्पन भोगको प्रबन्ध गर।'

धृतराष्ट्रले यो सेवा कुभावले गर्दछन्। सेवा सदा सद्भावले गर्नुपर्छ। कुभावले सेवा गर्नेमाथि भगवान् प्रसन्न हुनुहुन्न। जो सद्भावले सेवा गर्दछन् उनको सेवाबाट उहाँ प्रसन्न हुनुहुन्छ।

विदुरजी गङ्गा स्नान गर्न भनी गएका थिए। वहाँ उनले सुने भोलि रथयात्रा निस्कने वाला छ। सोधेपछि मानिसहरूले भने भोलि द्वारिकाबाट भगवान् श्रीकृष्ण आउनुहुने भएको छ।

विदुरजी घर फर्के। उनी बड़ो आनन्दमग्न देखिएका थिए। उनीलाई पत्नीले सोधिन्—'के कुरा हो आज तपाईं बड़ो खुशी देखिइनुभएको छ ?'

विदुरजीले भने—'सत्सङ्गमा सबै कुरा भनुँला। मैले कथामा सुनेको थिएँ जसले बाह्र वर्षसम्म लगातार सत्कर्म गर्ला जसमाथि भगवान् कृपा गर्नुहुन्छ। बाह्र वर्षसम्म एकै स्थानमा बसेर ध्यान गर्नेलाई प्रभुले दर्शन दिनुहुन्छ। मलाई लाग्छ द्वारिकानाथ दुर्योधनको निमित्त होइन बरु मेरा निमित्त आउनुहुने भएको छ।'

सुलभाले भनिन्—'मलाई सपनामा रथयात्राको दर्शन भएको थियो। त्यो सपना साँचो हुनेछ। बाह्र वर्षदेखि मैले अन्न खाएकी छैन।'

विदुरजी भन्दछन्—'देवी ! तिम्रो तपश्चर्याको फल पाउनेछ्यौ। भोलि परमात्माको दर्शन हुनेछ।'

सुलभा देवीले विदुरजीसँग सोधिन् 'तपाईंको प्रभुका साथ कुनै परिचय पनि छ कि ?'

विदुरजीले भने—जब म कृष्णलाई वन्दना गर्छु उहाँ मलाई 'चाचा' भनेर बोलाउनुहुन्छ। म तब उहाँलाई भन्दछु, म अधम हुँ। तपाईंको दासानुदास हुँ। मलाई 'चाचा नभन्नुहोस्।'

जीव जब नम्र भएर प्रभुका शरणमा जान्छ तब ईश्वर त्यसको सम्मान गर्नुहुन्छ।

सुलभाको मनमा एउटै भावना छ कृष्णजीले मेरो घरमा भोजन गरिदिनुहोला र मैले उहाँलाई प्रत्यक्ष हेर्नपाऊँ।

सुलभा भन्दछिन् 'यदि उहाँ तपाईंको परिचित हुनुहुन्छ भने हाम्रो घरमा सवारी चलाउन निम्ता दिनुहोस्। म भावनाबाट सधैं रोज भगवान्‌लाई भोग लगाउँछु। अब मेरो यही इच्छा छ मेरा आँखाका सामुन्ने उहाँले प्रत्यक्ष रूपबाट भोजन गरिदिनुहोला।'

विदुरजी भन्छन्, 'मेरो निमन्त्रणलाई अस्वीकार त नगर्नुहोला, तर यो सानो छाप्रोमा हामी उहाँको आदर-सत्कार कसरी गर्ने ? उहाँको आगमनले हामीलाई चाहिँ आनन्द होला तर उहाँलाई कष्ट हुनेछ। मेरा भगवान् छप्पन्न भोगको भोजन गर्नुहुन्छ। धृतराष्ट्रका घरमा उहाँको राम्ररी स्वागत होला। मसँग सागबाहेक केही छैन, म उहाँलाई के अर्पण गरूँला ? हामीकहाँ आउनाले प्रभुलाई परिश्रम हुनेछ। आफ्ना सुखका निमित्त म भगवान्‌लाई अलिकति पनि कष्ट दिन चाहन्नँ।' यही हो पुष्टि भक्ति।

सुलभाले भनिन्, 'मेरा घरमा अरू कुनै चीज भलै नहोस् तर मेरा हृदयमा प्रभुका निमित्त अपार प्रेम छ। त्यही प्रेम म भगवान्‌को चरणमा समर्पित गरिदिनेछु। हामी जो खाना खान्छौं, त्यही म ठाकुरजीलाई प्रेमपूर्वक खुवाउने छु।'

जिब्रो सुध्रिएपछि जीवन पनि सुध्रिन्छ र जिब्रो बिग्रिएपछि जीवन पनि बिग्रन्छ। सीधा सादा भोजन गर्नाले जीवन शुद्ध हुन्छ।

यदि आहार शुद्ध र सादा भयो भने शरीरमा सात्त्विक गुणको वृद्धि हुनेछ। सत्त्व गुण बढ्नाले सहनशक्ति पनि बढ्दछ र अन्तमा बुद्धि स्थिर हुन्छ।

आहार शुद्धौ सत्त्वशुद्धिः,
सत्त्व शुद्धौ ध्रुवा स्मृतिः।

त्यसकारण विदुरजीको जस्तो अतिशय सादा जीवन बिताऊ। जसको जीवन सीधा साधा छ, त्यो अवश्य साधु हुनेछ।

सुलभाले भनिन्, 'म गरीब छु, तब के भयो ? गरीब हुनु कुनै अपराध होइन। तपाईंले कथामा कतिपटक भन्नुभएको थियो प्रभु प्रेमको भोको हुनुहुन्छ। भगवान् गरीबहरूसँग ज्यादा प्रेम गर्नुहुन्छ।'

विदुरजी भन्दछन्—'भगवान् राजप्रसादमा जानुभयो भने वहाँ सुखपूर्वक बस्नुहुनेछ। मेरा घरमा उहाँलाई कष्ट होला। त्यसकारण भगवान्‌लाई यहाँ ल्याउन चाहन्नँ। देवी ! हामीभित्र केही पाप अझै बाँकी छ। म भोलि तिमीलाई कृष्णको दर्शन गराउन लैजानेछु, तर कृष्ण हाम्रो घर आउन् यस्तो आशा अहिले नगर। उहाँ पछि कहिल्यै कुनै वेलामा हामीकहाँ अवश्य आउनुहुनेछ, तर भोलि होइन।'

वैष्णव आशाको सहाराले मात्र बाँच्छ। मेरा प्रभु आज नभए पनि पाँच-दस वर्षपछि कुनै वेला निश्चयै पाल्नु होला। होइन भने कमसे कम मेरा जीवनको अन्त्यकालमा अवश्यै पाल्नु होला।

सुलभा सोच्दछिन् पति सङ्कोचमा निम्ता दिन थाल्नु भएको छैन, तर म मनद्वारा निम्ता दिन्छु। अघिल्लो दिन विदुर र सुलभा बालकृष्णको सेवा गर्छन्। बालकृष्ण मुस्कुराइ रहनुभएको छ। विदुर र सुलभा भगवान्को प्रार्थना गर्छन्—

रथारूढो गच्छन् पथि मिलितभूदेवपटलैः
स्तुतिप्रादुर्भावं प्रतिपदमुपाकर्ण्य सदयः।
दयासिंधुर्बन्धुः सकलजगतां सिंधु-सदयो
जगन्नाथः स्वामी नयनपथगामी भवतु मे॥

रथयात्राका समयमा बाटामा जम्मा भएका ब्राह्मणहरूद्वारा गरिएको स्तुतिलाई सुनेर हरेक पाइलाका साथ जो द्रवित भइरहेछन् ती दयाका सागर, अखिल ब्रह्माण्डका बन्धु र समुद्रलाई कृपा गर्नका निमित्त, उसको किनारामा निवास गर्ने श्रीजगन्नाथ स्वामी सदा मेरा नेत्रहरूका सामू रहनुहोस्।

सदा रथारूढ़ द्वारिकानाथको दर्शन गर।

भगवान् रथमा चढ़ेर गइरहनुभएको छ।

जबसम्म जीव शुद्ध हुँदैन, तबसम्म परमात्मा ऊसँग आँखा जोर्नुहुन्न र जब चार आँखा एक हुँदैनन् तबसम्म दर्शनमा आनन्द पाईंदैन।

विदुर र सुलभा पनि रथ हेरिरहेछन्। विदुरजी सोच्छन् ममा यति पात्रता छैन जो भगवान् मेरा घरमा आउनुहोला, तब एक नजर ममा पर्न नजाला? म पापी छु तर मेरा भगवान् पापीको उद्धारक हुनुहुन्छ, पतितपावन हुनुहुन्छ। उहाँका निमित्त मैले सबै विषयहरूलाई त्यागिदिएको छु। नाथ! हजूरका निमित्त मैले के-के सहिनँ? मैले बाह्र वर्षदेखि अन्न खाएको छैन। के भगवान्ले एक दृष्टि पनि नदिनुहोला? कृपा हवस्! हजारौं जन्मदेखि म हजूरबाट छुट्टिएको हुँ तर आज हजूरको शरणमा आएको छु।

मानिसहरूका भीड़का बीचबाट रथ अगाड़ि बढ़िरहेको थियो, प्रभुका आँखाले तल हेरिरहेका थिए। विदुर-सुलभाले दर्शन गरे। श्रीकृष्णले पनि विदुर चाचालाई हेर्नुभयो। विदुर कृतार्थ भए लौ मेरातर्फ भगवान्ले दृष्टि लाइदिनुभयो। भगवान्को हृदय पनि भरिएर आयो। दृष्टि प्रेमद्वारा रसायो। भगवान्ले सोच्नुभयो मेरा विदुर कुन्नि कैलेदेखि मेरा प्रतीक्षामा रहेका होलान्।

सुलभालाई लाग्यो मेरा प्रभु मपट्टि हेरेर हाँसिरहनु भएको थियो। मेरा प्रभुले मपट्टि हेर्नुभयो। भगवान्लाई थाहा छ म विदुरकी पत्नी हुँ र त्यसैले उहाँले ममाथि दृष्टि दिनुभयो।

प्रभुले दृष्टिद्वारै विदुरजीलाई भन्नुभयो 'म तपाईंको घर आउँला। तर अति आनन्दमा डुबिरहेका विदुर-सुलभाले भगवान्को संकेत चाल पाएनन्।'

कृष्ण हस्तिनापुर जानुभयो। त्यहाँ धृतराष्ट्र र दुर्योधनले प्रभुको स्वागतका निमित्त एक महिनादेखि तयारी गरिरहेका थिए। प्रभुको आगमन भयो। प्रभुले धृतराष्ट्र र दुर्योधनलाई भन्नुभयो, 'म द्वारिकाको राजाको हैसियतले होइन तर पाण्डवहरूको दूत भएर आएको हुँ।' पाण्डवहरूको नाउँ सुन्दैमा दुर्योधनले अपमान गरिदियो। दुष्ट दुर्योधनले भगवान्को अपमान गर्दै भन्यो, 'भीख मागेर राज्य पाइँदैन। सियोको टुप्पो अटाउने जमीन पनि म पाण्डवहरूलाई दिन्नँ। म युद्धलाई तयार छु।' उसले श्रीकृष्णको एउटै कुरा सुनेन। सन्धि गराउने प्रबन्धमा श्रीकृष्ण सफल हुनुभएन।

धृतराष्ट्रले भगवान्लाई भने यी भाइहरूको झगड़ाबाट यहाँ अलग्गै रहनुहोस्। तपाईंका निमित्त छप्पन्न भोग तयार छ, आरामसाथ भोजन गर्नुहोस्।

श्रीकृष्णले भन्नुभयो—तिम्रो घरको अन्न खानाले मेरो बुद्धि पनि भ्रष्ट हुनेछ।

पापीको घरको अन्न खानाले कुनै पनि व्यक्तिको बुद्धि भ्रष्ट हुन सक्छ।

छप्पन्न प्रकारका खाद्यावस्तुहरू भगवान्का निमित्त तयार गरिएको थियो तैपनि उहाँले खान मात्र भएन। अरू राजाहरूले आश गरेका थिए कृष्ण उनका घरमा भोजन गर्नु हुनेछ तर कृष्णले उनीहरूलाई र सबै ब्राह्मणहरूलाई पनि निराश गरिदिनुभयो।

द्रोणाचार्यले तब सोध्नुभयो, 'सबैको निम्तालाई स्वीकार गरिरहनु भएको छैन भने फेरि कहाँ जानु होला? भोजनको समय भइसकेको छ। कहीं न कहीं तर भोजन गर्नै पर्ला। यदि दुर्योधनकहाँ भोजन गर्नमा तपाईंलाई केही आपत्ति छ भने मेरो घरमा जाऊँ।'

भगवान्ले उनलाई पनि नामंजूर गरिदिनु भयो र भन्नुभयो 'मेरा एक भक्त गङ्गा किनारामा बस्दछन्, म उनैको घर जाने छु।'

द्रोणाचार्यले बुझिहाले हामी वेदशास्त्र-सम्पन्न ब्राह्मण आज हार्‍यौं।

धन्य छन् विदुरजी।

भगवान्ले सोच्नुभयो विदुरजी धेरै समयदेखि मेरो प्रतीक्षा गरिरहेका छन् त्यसकारण म आज उहाँकहाँ जाऊँ।

यतातिर विदुरजी सोचिरहेका छन् अहिलेसम्म म अपात्र रहेछु। त्यसैले भगवान् मेरो घर आउनुहुन्न।

आज सुलभाको हृदय पनि बड़ो दुःखी र आर्द्र भएर सेवा गरिरहेछ। उनी भगवान्सँग प्रार्थना गरिरहिछन्, 'मैले तपाईंका निमित्त सर्वस्व त्याग गरिदिएकी छु र पनि आइरहनु भएको छैन। गोपिनीहरू साँच्चै भन्दछन् कृष्णका पछि जो लाग्दछ, उसैलाई उनी रुवाइ दिन्छन्। तपाईंका निमित्त मैले संसार सुख त्यागिदिएँ। सर्वस्व तपाईंका चरणमा राखें, तैपनि मेरो घरमा तपाईंको आगमन किन भइरहेको छैन?'

कीर्तन-भक्ति श्रीकृष्णलाई अतिप्रिय छ। सूरदासजी भजन गर्नुहुन्छ तब श्रीकृष्ण आएर हातमा तम्बुरा दिनुहुन्छ, सूरदासजी कीर्तन गर्नुहुन्छ र कृष्ण सुन्नुहुन्छ।

नाह वसामि वैकुण्ठे योगितां हृदये न च।
मद्भक्ता यत्र गायन्ति तत्र तिष्ठामि नारद॥

भगवान् नारदसँग भन्नुहुन्छ 'न मेरो बैकुण्ठमा वास छ न योगीहरूको हृदयमा। म त्यहाँ रहन्छु जहाँ मेरा भक्त प्रेमले आर्द्र भएर मेरो कीर्तन गर्दछन्।'

छाप्रामा विदुर-सुलभा भगवान्को नाउँको कीर्तन गरिरहेका छन्। तर तिनलाई थाहा छैन जसको कीर्तन उनीहरू गरिरहेछन् उनै आज साक्षात्कार उनको ढोकामा उभिइरहेछन्।

मनुष्यको जीवन पवित्र भयो भने भगवान् विना निम्तामा पनि उसको घरमा आउनुहुन्छ। जो परमात्माका निमित्त बाँच्छ उसको घर परमात्मा स्वयं आउनुहुन्छ।

नबोलाइकन आज भगवान् विदुरको ढोकामा आएर उभिनुभएको छ। बाहिर प्रतीक्षा गर्दा गर्दा दुइ घण्टा बितिसक्यो। असाध्य भोक लागिरहेको थियो, भगवान् सोचिरहनु भएको थियो दिनको कीर्तन कहिले सकिएला ? विदुर-सुलभाको जीवन तर प्रभुका निमित्त मात्र थियो।

अन्त्यमा व्याकुल भएर श्रीकृष्णले छाप्रोको ढोका खटखटाउनुभयो र भन्नुभयो—'काकाज्यू, म आइपुगेको छु।'

कीर्तन गर तब यसरी गर भगवान् स्वयं आएर तिम्रो घरको ढोका खटखटाऊन्।

विदुरजीले भने—देवी ! द्वारिकानाथ आउनुभएको छ, मलाई यस्तो लाग्छ।

ढोका खोलेपछि चतुर्भुज नारायणको दर्शन भयो। अति हर्षका आवेगमा विदुर-सुलभाले आसनसम्म दिन सकेनन्, प्रभुले स्वयं आफ्नै हातले कुशासन ओछ्याउनुभयो र विदुरजीलाई पनि हात समातेर नजिक बसाल्नुभयो।

भगवान्ले भन्नुभयो—'म भोको छु। मलाई केही खान दिनुहोस्।'

भक्ति यति सशक्त हुन्छ जसले निष्काम भगवान्लाई पनि सकाम बनाइदिन्छ। त्यसो तर भगवान्लाई भोक लाग्दैन तर भक्तको कारणले मात्र उहाँलाई खाने इच्छा हुन्छ।

विदुरजीले सोध्नुभयो—'तपाईंले दुर्योधनको घर भोजन किन गर्नुभएन ?'

कृष्णले भन्नुभयो—'काका ! जसको घरमा तपाईं खानुहुन्न, त्यहाँ म पनि खान सक्तिनँ।'

ईश्वर भोका हुँदैनन् यस्तो उपनिषद्को सिद्धान्त छ। जीवरूपी पक्षी विषयरूपी फल खान्छ, त्यसकारण दुःखी हुन्छ। उपनिषद्को यो सिद्धान्त गलत होइन। ईश्वर नित्य आनन्दस्वरूप हुनुहुन्छ—भागवत्को यो सिद्धान्त साँचो हो।

ईश्वर तृप्त हुनुहुन्छ, तर जब कुनै भक्तको हृदय प्रेमले भरिएर आउँछ; उहाँ निष्काम भए पनि सकाम बनिदिनुहुन्छ। सगुण र निर्गुण एक हो। निराकार साकार बन्दछ। ईश्वर प्रेमका भोका हुनुहुन्छ। अतः ज्ञानभन्दा प्रेम श्रेष्ठ हो। प्रेममा यस्तो शक्ति छ जड़लाई पनि चेतन बनाइदिन्छ,

निष्कामलाई सकाम बनाइदिन्छ। निराकारलाई साकार बनाइदिन्छ। वस्तुको परिवर्तन गर्ने शक्ति ज्ञानमा छैन, प्रेममै छ।

पती-पत्नी सोच्न थाले भगवान्‌को स्वागत कसरी गर्ने। ती दुइ तपस्वी थिए र केवल सागमात्र खान्थे। उनलाई सङ्कोच भइराखेको थियो कृष्णलाई साग कसरी खुवाउने ? दुवैलाई केही बाटो देखिएन।

यत्तिकैमा द्वारिकानाथले चूलाबाट सागको भाँड़ो झिकेर त्यही खान थाल्नुभयो।

स्वादिष्टता र मीठोपना वस्तुमा छैन, प्रेममा छ। शत्रुको हलुवापुरी पनि विष जस्तै लाग्दछ।

भगवान्‌लाई दुर्योधनको घरको मिष्ठान्न राम्रो लागेन, तर विदुरजीको साग खानुभयो।

त्यसकारण आज पनि मानिसहरू गाउँछन्—

सबसे ऊँची प्रेम सगाई॥
दुर्योधनको मेवा त्यागो साग विदुर घर खाई॥
जूठे फल शबरी के खाए बहुविधि प्रेम लगाई।
प्रेमके वस नृप सेवा कीन्ही आपवने हरि नाई॥
राजसुयज्ञ युधिष्ठिर कीन्हों तामें जूठ उठाई।
प्रेमके वस अर्जुन-रथ हाँक्यो भूल गए ठकुराई॥
ऐसी प्रीति बढ़ी वृन्दावन गोपिन नाच नचाई।
सूर क्रूर इस लायक नाहिं कहँ लगि करौं बड़ाई॥

शुकदेवजीले भन्न लाग्नुभयो—'राजन्, सङ्गको मनको रङ्ग मनलाई पनि लाग्दछ। मनुष्य जन्मैदेखि भ्रष्ट हुँदैन जन्मको समयमा ऊ शुद्ध हुन्छ। ठूलो भएपछि त्यो जोसँग बस्दछ त्यसैको रङ्ग उसमा चढ्दछ। जस्तो सङ्ग हुन्छ, त्यस्तै बन्नेछौ। सत्सङ्गले जीवन उज्ज्वल हुन्छ र कुसङ्गले भ्रष्ट हुन्छ।'

विचार गर बालकको जन्म जब हुन्छ त्यस समयमा त्यो निर्व्यसनी हुन्छ। उसमा न कुनै खराब बानी हुन्छ न कुनै अभिमान। ठूलो भएपछि जस्तो सङ्गत भेट्टाउँछ त्यस्तै किसिमले जीवन बन्न-बिग्रन लाग्छ।

आँपवृक्षको वरिपरि बबुलको रूख लगायौ भने आँप पाईदैन। विलासीको सङ्ग भयो भने मनुष्य विलासी हुन जान्छ र विरक्तको सङ्ग भयो भने विरक्त। सबै कुरा बिग्रिए पनि मन बुद्धिलाई बिग्रन नदेऊ। मनमा लागेको दाग तीन जन्ममा पनि सायदै मेटिएला।

सङ्गको रङ्ग मनलाई लाग्छ। ज्ञान, सदाचार, भक्ति, वैराग्य आदिमा जो महापुरुष तिमीभन्दा बढ्ता हुन्छन् उनैका आदर्श आफ्नो दृष्टिका समक्ष राख। सधैं इच्छा गर भगवान् शङ्कराचार्यको जस्तो ज्ञान, महाप्रभुको जस्तो भक्ति र शुकदेवको जस्तो वैराग्य मलाई मिलोस्। प्रातःकालमा ऋषिहरूलाई संझेमा उनका सद्गुण हाम्रा जीवनमा चढ़ेर आउँछ। आ-आफ्ना गोत्रका ऋषिलाई पनि संझनुपर्छ। आज तर मानिसहरूलाई आफ्नो गोत्रको पनि नाउँ थाहा हुँदैन।

नित्य गोत्रोच्चारण गर, नित्य पूर्वजहरूको वन्दना गर। सधैं सोच्तै रहूकि मलाई ऋषि जस्तो जीवन बिताउनु छ, ऋषि हुनु छ, विलासी हुनु छैन।

राम पनि सँधैं वसिष्ठजीको वन्दना गर्नुहुन्थ्यो उहाँको सम्मान गर्नुहुन्थ्यो।

सांसारिक व्यवहार चलाउँदै ब्रह्मज्ञान कायम राख्न र भक्ति गर्न कठिन छ। सङ्गको असर पनि निकै हुन्छ। चोरी र व्यभिचार महापाप मानिएका छन्। यस्तो पाप गर्ने मानिस आफ्नो भाइ भए पनि उसलाई छोड़िदिनुपर्छ।

कुनै जीवको तिरस्कार नगर, तर त्यसको पापको तिरस्कार अवश्य नै गर।

धृतराष्ट्र जस्ता दुष्ट व्यक्तिसँग मेरो जीवन पनि भ्रष्ट होला, यो सोचेरै विदुरजीले घर त्याग गरेर गङ्गातटमा बसी भक्ति गर्थे। साग खाएरै सन्तुष्ट हुन्थे। इन्द्रियसुखमा फँसेको मनुष्य भक्ति गर्न सक्दैन। आहार यस्तो गर जसले इन्द्रियहरूलाई र जीवनलाई स्वस्थ राख्न सकोस्।

धृतराष्ट्रले विदुरजीका निमित्त त्यसो तर धेरै थोक पठाएका थिए। तर उनले केही पनि लिएनन्।

पापीको घरमा केही पनि खाईंदैन। अन्नदोष प्रभुको भजनकीर्तनमा बाधक हुन्छ।

भगवान् जब कृपा गर्नुहुन्छ तब धन सम्पत्ति दिनुहुन्न, तर साँचो साधुको सङ्ग गराइदिनुहन्छ। सत्सङ्ग ईश्वरकृपाले मात्र पाइन्छ, तर कुसङ्गमा नबस्नु आफ्नै हातको कुरा हो, आफ्नै वशको कुरा हो। कुसङ्गको अर्थ हो नास्तिकको सङ्ग, कामीको सङ्गत र पापीको सङ्गत नगर।

अगाड़ि कथा आउनेछ विदुरजीले धृतराष्ट्र-दुर्योधनलाई त्याग गरेर तीर्थ यात्रा गर्न गए। किनभने कुसङ्गमा बस्न चाहेनन्।

जीव ( मनुष्य ) जबसम्म लौकिक सुखको त्याग गर्दैन तबसम्म प्रभुलाई उसका प्रति दया आउँदैन। सर्वस्वको त्याग गरी विदुर-सुलभा परमेश्वरको आराधना गरिरहेका थिए, तप गरिरहेका थिए।

तपश्चर्या गर्नाले पाप डढ्छ। जीव शुद्ध हुन्छ। गृहस्थको यही धर्म हो उसले वर्षको एघार महीना घर-गृहस्थीमा बिताओस् र एक महीना कुनै पवित्र तीर्थस्थानमा, एकान्तमा बसेर भगवान्को आराधना गरोस्, तप गरोस्। त्यस समय ऊ भक्ति तपमा मात्र लागिरहोस् अन्य प्रवृत्तिहरू छोड़िदेओस्। जे पनि काम गर प्रभुका निमित्त मात्र गर। तप गर्नाले प्रभु प्रसन्न हुनुहुन्छ।

तपको प्रथम चरण हो जिब्रोमा अंकुश। जुन मानिसका धेरै आवश्यकताहरू छन् त्यसले कहिले पनि तप गर्न सक्दैन। आजकल मानिसहरूले आफ्ना आवश्यकताहरू बढ़ाउँदै गइरहेछन्। परिणाम यो हुन्छ कि सम्पत्ति र समयको व्यय इन्द्रियहरूलाई बहलाउनमा हुन जान्छ। मनुष्य साधना चाहिँ गर्दैन उल्टै उजूर गर्छ भगवान् दर्शन दिइरहनु भएको छैन। भगवान् सुलभ हुनुहुन्न, दुर्लभ हुनुहुन्छ।

विदुरजीले परमात्मालाई प्रसन्न गराउनका निमित्त धेरै ठूलो तपस्या गरेका थिए र भगवान्‌लाई दया आयो मेरो यस भक्तले मेरा निमित्त कति कष्ट उठाएको छ र उहाँ नबोलाईकनै विदुरजीको घर आउनुभयो। विदुरको प्रेम यति साँचो थियो उहाँसँग केही माग्नको इच्छा प्रभुलाई पनि भयो।

जब भगवान्‌का हृदयमा हामीसँग केही माग्ने इच्छा भयो भने संझ तिम्रो भक्ति साँचो भयो। 'जहाँ प्रेम छ त्यहाँबाट मागेर खाइन्छ' प्रेम भएमा कृष्णाले नौनी माग्नेछन्। जहाँ प्रेम हुँदैन त्यहाँबाट नमागी पाए पनि खाने इच्छा हुने छैन। परमात्मा प्रेमको अधीन भइहाल्नुहुन्छ। जसले ईश्वरसँग प्रेम गर्ने इच्छा राख्दछ उसले जगत्‌का साथ ज्यादा प्रेम नगरोस्। प्रेम गर्नेलाई केवल ईश्वर मात्र पात्र हुनुहुन्छ। उहाँसँग मात्र तिमीले साँचो प्रेम गर।

विदुरजीको घर परमात्माको आगमन भयो। विदुरजी र सुलभाको भावना तथा भक्ति सफल भयो। कृष्णजीले उनको सागको भोजन गर्नुभयो।

सत्कार्य यस्तो गर नबोलाइकन पनि भगवान्‌लाई आउने इच्छा होस्। मैत्री समान मानिसहरूमा हुन्छ। जीव जो ईश्वरको समान बन्दछ तब ऊसँग भेट गर्न भगवान् स्वयं आउनु हुनेछ।

प्रभुले धृतराष्ट्रका घरको पानीसम्म पिउनुभएन, सय कौरवहरूको नाश भयो।

शुकदेवजी राजालाई कथा सुनाइरहनु भएको छ—

दुर्योधनले पाण्डवहरूको राज्य जबर्जस्ती लियो। पाण्डवहरूको वनवास भयो। त्यहाँबाट फर्किएर आएपछि युधिष्ठिरले राज्यको आफ्नो भाग मागे तर धृतराष्ट्र र कौरवहरूले भाग दिन नामंजूर गरे। भगवान् श्रीकृष्ण पाण्डवहरूका तर्फबाट सन्धि गराउन आउनुभयो तर कुरुराजले उहाँको कुरा सुनेको नसुन्यै गरे। फेरि विदुरजीले पनि धृतराष्ट्रलाई संझाए। विदुरजीले धृतराष्ट्रलाई जो न्याय र धर्मको कुरा संझाएका थिए, त्यसलाई 'विदुरनीति' भन्छन्।

जसले अरूहरूको धन हरण गर्छ त्यही धृतराष्ट्र हो। जसको आँखाले रुपियाँ पैसा मात्र देख्छ, त्यो आँखा छँदाछँदै पनि अन्धो हो। पापी पुत्रमाथि प्रेमगर्ने बाबु धृतराष्ट्र हो। त्यस युगमा एउटै धृतराष्ट्र थिए, आज तर हजारौं लाखौं छन्।

विदुरजी धृतराष्ट्रलाई भन्न थाले—'दुर्योधन पापी हो। ऊ तपाईंको छोरो होइन तपाईंको पुत्ररूपमा आएको पापी हो।'

कैयौंपटक आफ्नो पाप पुत्रको रूप लिएर आउँछ र सताउँछ। शास्त्रमा भनेको छ दुराचारी पुत्र माता-पिताको दुर्गति गराउँछ। सदाचारी माता-पिताको सद्गति गराउँछ। दुराचारी पुत्रको संगत छाड़िदेऊ। मान यो मेरो पुत्र होइन तर मेरो पाप पुत्ररूपमा आएको छ। साना बालकहरूलाई पापको डर देखायो भने तिनीहरू मान्दछन्। आजकालका युवक पापको डर मान्दैनन् र त्यसैले लड़ाइँ-झगड़ा पनि पर्छ।

विदुरजी भन्दछन्—'हे धृतराष्ट्र ! दुर्योधन दुराचारी छ। त्यो तपाईंको वंशको विनाश गर्न आएको छ।'

चोरी र व्यभिचार महापाप हो। अरू सबै पाप क्षम्य हुनसक्छ तर यी दुइ पाप क्षम्य हुन सक्तैनन्। कोही चोर झ्यालखानाको हावा खान्छन् भने कोही महलको। चोर को हो ? जसको हो उसलाई नदिइकन जो खान्छ त्यो चोर हो। कसैको केही पनि सित्तै नखाऊ। मिहिनेत नगरिकन जो खान्छ त्यो चोर हो। स्थिति पात्र भएर पनि जो स्थितिहरूको राम्ररी सत्कार गर्दैन त्यो पनि चोर हो। जो आफूलाई मात्र पकाउँछ र खान्छ त्यो पनि चोर हो। अग्निलाई आहुति नदिई जो खान्छ त्यो पनि चोर हो। नाफा खाने पनि चोर हो। सोच तिमी पनि यीमध्ये कुनै प्रकारको चोर त होइनौ ?

'धृतराष्ट्र ! दुर्योधन चोर हो। प्रभुले पाण्डवहरूलाई राजसिंहासनमा बसाउनुहुनेछ किनभने प्रभुले उनीहरूलाई मात्र आफन्त बनाउनुभएको छ। धर्मराज तपाईंको अपराधलाई क्षमा गर्न तयार छन्।'

धर्मराज अजातशत्रु हुन्। भागवतले दुइ अजातशत्रु भनेको छ—एक धर्मराज युधिष्ठिर र दोस्रो प्रह्लादजी।

'धृतराष्ट्र ! तपाईं दुर्योधनको मोह छोड्नुहोस्, होइन भने सारा कौरवकुलको विनाश भएरै रहन्छ।'

दुर्योधन यति दुष्ट थियो द्रौपदीको सौन्दर्यलाई देखेर पिल्सिरहन्थ्यो।

शंकराचार्यजीले महाभारतको 'गीता, विष्णुसहस्त्रनाम, उद्योगपर्व र सनत्सुजात पर्व'—यी अङ्गहरूको टीका गर्नुभएको छ।

धृतराष्ट्र भन्दछन्—'भाइ ! तिम्रो कुरा साँचो हो, तर मनजिकै दुर्योधन आउनासाथ मेरो ज्ञान हराइहाल्छ।'

पापको पिता हो लोभ र आत्माको ममता। लोभ र ममताले पापलाई प्रेरणा दिन्छन्।

नोकर-चाकरहरूले दुर्योधनलाई समाचार सुनाए विदुर काका तपाईंको विरुद्ध कुरा गरिरहनुभएको थियो। दुर्योधन रिसाएर आगो भयो र तुरुन्त उसले विदुर काकालाई सभामा बोलाएर उनको अपमान गऱ्यो।

यक्षले युधिष्ठिरलाई सोधे 'सधैंका निमित्त नरकमा कसलाई बस्नुपर्छ ?' युधिष्ठिरले भनेका थिए—'निम्ता गरेर, इच्छापूर्वक दुर्बुद्धिद्वारा कसैको अपमान गर्दछ भने त्यस्तालाई सदाका निमित्त नरकमा बस्नुपर्छ।'

दुर्योधन विदुरकाकालाई भन्दछ—'तिमी दासी पुत्र हौ। मेरो अन्न खाएर मेरै निन्दा गर्दछौ ? मेरै विरुद्ध काम गर्दछौ ?'

विदुर तर धीर-गम्भीर थिए निन्दालाई सहन गरिलिन्थे।

सभामा निन्दाद्वारा विचलित नभएर त्यसलाई सहिलिनु त्यो सन्त हो। समर्थ हुँदा-हुँदै पनि जो सहन्छ त्यो सन्त हो। त्यो भगवान्‌को अवतार हो।

त्यसो तर विदुरजीमा यति शक्ति थियो एउटै दृष्टिपातमा दुर्योधनलाई डढ़ाएर भस्म पार्न सक्थे, तर विदुरजीले आफ्नो यस शक्तिको उपयोग गरेनन्।

शक्तिको दुरुपयोग गर्ने दैत्य हुन्छ। शक्ति, सम्पत्ति र समयको विवेकपूर्ण सदुपयोग गर्ने देव बन्न सक्दछ।

कष्ट सहँदै रह्यौ भने सन्त हुनेछौ। कोही सासू यस्ता पनि हुन्छन् जो आफ्नी बुहारीमाथि अत्याचार गरिरहन्छन्। उनको भनाइ के भने बुहारीभन्दा म ठूली, त्यसकारण उसमा हुकुम चलाउनु मेरो हक छ। सधैं यस्तै विचार गर बुहारी र सासू एकसमान हुन्। सासू बुहारीभन्दा ठूली होइन। कुनै पनि जीवलाई ठूलो र सानो नसंझ। जीव ईश्वरकै स्वरूप हो।

विदुरजीको जस्तो बाह्र वर्ष तप गर्‍यौ भने सहन शक्ति आउनेछ। सात्त्विक आहार गर्ने मानिसले मात्र सहन-शक्ति प्राप्त गर्न सक्छ। विदुरजीले बाह्र वर्षसम्म सागको मात्र भोजन गरे। तिमीले कमसे कम बाह्र महीनासम्म सागमात्र खाएर बस्यौ बने सहनशक्ति पाउनेछौ। तेल खोर्सानी धेरै खानेको स्वभाव पनि खोर्सानी जस्तै हुन्छ। अत्यधिक सहन गर्‍यौ भने सुखी हुनेछौ। सहन-शक्ति त्यसवेला आउँछ जब आहार-बिहार ज्यादै सात्त्विक हुन्छ। यस जीवनको स्वभावै यस्तो छ उसलाई जे-जति भेटिन्छ त्यतिमै ऊ सन्तुष्ट हुँदैन। बुद्धि यदि ईश्वरमा स्थिर राख्यौ भने तिमी सबै कुरा सहन गर्न सक्नेछौ र सन्तुष्ट पनि हुन सक्ने छौ। विदुरजीले केवल सागमा मात्र सन्तोष मानेर ईश्वरको आराधना गर्दै रहे।

अपमानबाट विदुरजीलाई न दुःख भयो न ग्लानि। दुर्योधनले राजसभामा उनको अपमान गर्‍यो, तर पनि उनी क्रोधित भएनन्। विदुरजीले केवल साग मात्र खाएको किन नहोस् न।

दुःख र क्रोधलाई पिउने शक्ति, सात्त्विक आहारबाट प्राप्त हुन्छ। सुखी हुनु छ भने अलिकति खाऊ र गम गर। मनुष्य सबै कुरा खान्छ, तर गम खान सक्दैन, क्रोध पचाउन सक्दैन।

तिम्रो कसैले निन्दा गर्‍यो भने त्यसलाई शान्तिले सहू। त्यस समय यस्तो भन्ठान त्यो निन्दक मलाई मेरा दोषहरूको भान गराइरहेको छ, मेरो पाप धोइरहेछ। कोही मानिसको स्वभावै यस्तो

हुन्छ निन्दारसमा नडुबिकन उसको खाना पच्तैन। यस दुनियाँले कसैलाई त्यसै छोड़ेको छैन। सबैको निन्दा गरेको छ। निन्दा गर्ने उपर क्रोध नगर। यस्तो मान यसमा पनि प्रभुको केही संकेत छ।

भगवान् बड़ो दुःखसाथ भन्नुहुन्छ मानवकल्याणका निमित्त मनुष्य अवतार लिएर यस पृथ्वीमा आएको थिएँ तर पनि मानिसहरूले मेरो निन्दा गरे। विदुरजी पनि अपमानमा प्रभुको कृपा अनुभव गर्छन्।

विदुरजीले सोचे दुर्योधन मेरो निन्दा गरिरहेको छैन, बरु उसका भित्र बस्नु भएको नारायणले मलाई कौरवहरूको कुसङ्ग छोड् भन्ने आदेश दिइरहनुभएको छ। कौरवहरूको कुसङ्ग छोड़ाउनलाई यो प्रभुप्रेरणा हो।

महापुरुष निन्दामा पनि सारतत्त्व खोज्दछन् जो राम्रो वस्तुमा असलपन देख्छ, त्यो साधारण वैष्णव हो, तर जो खराब वस्तुहरूमा पनि राम्रोपन देख्छ त्यो उत्तम वैष्णव हो। प्रतिकूल अवस्थामा पनि वैष्णवले प्रभुका अनुग्रहको अनुभव गर्दछ। भगवान्ले सोच्नुभयो यदि कौरवहरूका साथ विदुरजी बसे भने कौरवहरूको विनाश हुन सक्ने भएन। यसै कारणले विदुरजीलाई त्यो स्थान छोड्ने प्रभुको प्रेरणा भयो।

रामायणमा रावणले विभीषणको र भागवतमा दुर्योधनले विदुरको अपमान गरेको थियो यस प्रकारले सन्तहरूको अपमान गर्नाले उसको विनाश भयो।

कुटुम्बमा कमसे कम एक व्यक्ति पुण्यशाली भयो भने त्यस कुटुम्बको नाश हुन सक्दैन, कोही त्यसको अहित गर्न सक्दैन।

विदुरजी जानुको कारणले कौरवहरूको सर्वनाश भयो, विभीषण जानाले लंकाको रावण र अन्य सबै राक्षसहरूको संहार भयो।

दुर्योधनले नोकरहरूलाई आज्ञा दियो विदुरलाई धकेलेर बाहिर निकालिदेऊ, तर विदुरजी सम्झी-बुझीकन पहिल्यै घरबाट निस्किसकेका थिए। धनुष-बाण पनि त्यहीं छोड़ेर गए। कौरवहरूलाई यस प्रकारको उपदेश दिएको थियो पाण्डवहरूसँग धनुषवाण लिएर नलड्नु। यदि लड्नै छ भने वाणीद्वारा लड़।

विदुरजी तीर्थयात्राका निमित्त हिँड़े। धृतराष्ट्रद्वारा पठाएको धन उनले फर्काइदिए।

आवश्यकताहरू कम गर्दै लग्यौ भने पाप पनि घट्दै जानेछ। आवश्यकता बढ़ायौ भने पाप पनि बढ़िरहनेछ, प्राप्त स्थितिबाट असन्तोषको अनुभव गर्नाले मनुष्यलाई पाप गर्ने प्रेरणा दिन्छ। त्यसैले भनेको छ पापको पिता असन्तोष र लोभ हो।

जसले पाप गर्दैन त्यसले पुण्य गर्छ।

विदुरजी छत्तीस वर्षको यात्रामा निस्के तर साथमा उनले केही पनि लगेनन् तर आजकलका मानिसहरू यात्रा गर्न निस्कन्छन् तब छत्तीस चीजहरू लिएर निस्कन्छन्।

आफ्नो आवश्यकताको लामो-लामो लिष्ट बनाउँछन् र त्यसमा पनि कुनै चीज नछुटोस् भन्नाखातिर यसका निमित्त पूरा-पूरा कोशिश गर्छन्।

यात्राको अर्थ हो—याति, त्राति। इन्द्रियहरूलाई प्रतिकूल विषयहरूबाट हटाएर अनुकूल विषयमा लगाइदिनु यात्रा हो। तीर्थयात्रा त्यसैको सफल हुन्छ जो तीर्थ जस्तै पवित्र भएर त्यहाँबाट फर्कियोस्।

केवल यात्रा गरेर मात्र पुण्य हुँदैन। कैयौं पटक मानिस यात्रा गर्दा-गर्दा पापको पोको बाँधेर फर्कन्छ। यात्रा विधिपूर्वक गर्नुपर्छ। विधिपूर्वक यात्रा गर्नाले मात्र पुण्य प्राप्त हुन्छ। यात्रा गर्नुअघि पहिले प्रतिज्ञा गर्नुपर्छ म अब ब्रह्मचर्यको पालन गर्नेछु, कहिले पनि क्रोध गर्ने छैन, असत्य बोल्ने छैन, व्यर्थ भाषण गर्ने छैन। यस्तो प्रतिज्ञा गरेपछि मात्र यात्रा शुरु गरियोस्।

आजकल तर धन-सम्पत्ति बढ्नाले धनीहरू यात्राको नाउँमा घुम्न-फिर्न निस्कन्छन्। यसरी चाहिँ कागले पनि काशी-मथुराको परिक्रमा लगाउँदो होनि।

तीर्थहरूका सच्चा साधु-संत, ब्राह्मणहरूको निन्दा गर्ने मानिसहरूलाई तीर्थयात्राको पुण्य प्राप्त हुन सक्तैन। साधु-सन्तहरूप्रति सद्भाव भएन भने तीर्थयात्रा विफल हुन्छ। गुरुशब्दको अपभ्रंश हो गौर। केही यस्ता पनि मानिस छन् जो गौरलाई पत्र लेखेर सूचना दिन्छन् हामी यति मानिस यात्राका निम्ति आइरहेछौं, त्यसकारण भोजन आदिको व्यवस्था गरिदिए। तीर्थको गौरव तपाईंको नोकर होइन।

तीर्थ स्थानमा विधिपूर्वक स्नान गर्नुपर्छ। त्यहाँ कुल्ला गर्नु, साबुन लगाएर नुहाउनु हुँदैन।

महाप्रभुजी दुःखसाथ भन्नुहुन्छ अतिशय विलासी र पापी मानिस तीर्थस्थानहरूतर्फ जान लागे र वहाँ बस्न पनि थाले। यही कारण हो तीर्थस्थानहरूको महिमा लोप भएर गइरहेछ।

जब विदुरजी यात्रा गर्न गए तब साथमा के लगेका थिए? केही पनि थिएन। केवल कौरवहरूको पुण्य मात्र लगेका थिए।

स: निर्गत: कौरवपुण्यलब्धो।

कौरवहरूको पुण्य साथमा लिएर गए किनभने विदुरजीको अपमान गरेको थियो, निन्दा गरेको थियो।

तिम्रो कसैले निन्दा नगरोस् तर अपमान गर्छ र तिमीले त्यसलाई सह्यौ भने तिम्रो पाप त्यस निन्दकका पासमा जान्छ र उसको पुण्य तिमीले पाउनेछौ।

तीर्थमा गयौ भने त्यस दिन अनशन गर। ब्राह्मणहरूको अपमान नगर। सच्चा साधु-सन्त-ब्राह्मणहरूको अपमान गर्नाले तीर्थयात्रामा विफल हुन्छ। अनशन गर्नाले शरीरको शुद्धि हुन्छ, पाप डढ्दछ र सात्त्विक भाव जागेर आउँछ।

विदुरजी प्रत्येक तीर्थमा अनशन गर्थे र विधिपूर्वक स्नान गर्थे। यात्रा कसरी गर्नुपर्छ यस विषयमा विदुरजी भन्दछन्—

गां पर्यटन मेध्य विविक्त वृतिः
सदाऽऽप्लुतोऽध शयनोऽवधूतः।
अलक्षितः स्वैरवधूतवेषो
व्रतानि चेरे हरितोषणानि॥

(भा० ३-१-१९)

पृथ्वीमा उनी अवधूत वेषमा परिभ्रमण गर्दथे जसले गर्दा स्नेही-सम्बन्धीहरूले उनलाई चिन्न नसकून्। शरीरको शृंगार पनि गर्दैनथिए। उनी अल्पमात्रामा बहुतै थोरै भोजन गर्थे। शुद्ध वृत्तिबाट जीवननिर्वाह गर्थे, प्रत्येक तीर्थमा स्नान गर्थे, भूइँमा सुत्दथे र भगवान् जुनबाट प्रसन्न हुनुहुन्थ्यो त्यस्तो व्रत गर्थे।

सन्त तीर्थहरूलाई पवित्र गर्दछन्। भारद्वाज मुनि स्नान गर्न भनी आउनुहुन्थ्यो तब गङ्गाजी पच्चीस सिंढीमाथि आइदिनुहुन्थ्यो। गङ्गाजीलाई थाहा थियो अरू मानिस आफ्नो पाप मलाई दिन आउँछन् भारद्वाजमुनि तर मलाई पवित्र गर्नलाई आउनुहुन्छ।

अति सम्पत्ति अनर्थको मूल हो। यसै कारण भगवान्ले सुवर्णको द्वारिकालाई जलमा डुवाइदिनुभएको थियो।

द्वारिकामा भगवान्को मूर्ति बड़ो मनोहर छ, त्यसको स्वरूप अद्भुत छ। जति हेरिरहे पनि मन तृप्त हुँदैन। द्वारिकाधीशको दर्शन मानिसले अवश्य गर्नुपर्छ।

काशीको माहात्म्य पनि धेरै छ। काशीका प्रमुख देवता हुन् भैरवनाथ।

विश्वेशं माधवं ढुंडिं दंडपाणिं च भैरवम्।

यस श्लोकलाई नित्य पाठ गर्नाले काशीवासको फल पाइन्छ। काशीमा नौ महीना बस्नाले पुनर्जन्म हुँदैन। काशीको मर्णिकर्णिका घाटमा यो श्लोक लेखिएको छ—

मरणं मङ्गलं अत्र।
सफलं जीवनं अत्र॥

शिवजी ज्ञानका मुख्य देव हुन्। काशीमा ज्ञान चाँड़ै सिद्ध हुन्छ। ज्ञान पाउने इच्छा छ भने तिमीले श्मशानमा बस्नुपर्छ। श्मशान ज्ञानभूमि हो। श्मशानमा बस्नलाई होइन, त्यसलाई सधैं सम्झिरहनुपर्ने आवश्यक छ। दिनमा तीन-चार पटक श्मशानलाई संझँदै रह्यौ भने बुद्धिमा परिवर्तन आउने छ। कल्पना गर तिमी काशीमै बस्दैछौ। यहाँ बसेर मनले मात्र गङ्गास्नान गर। कलियुगमा मनले सत्कर्म गर्नेलाई पनि पुण्य मिल्छ।

तीर्थहरूका क्षेत्रमा गयाजी ( पितृगया ) प्रसिद्ध तीर्थ हो। त्यहाँ अनेक श्राद्ध गर्छन्। प्रथम श्राद्ध फल्गुका किनारामा हुन्छ र अन्तिम श्राद्ध अक्षयवटतल्तिर गरिन्छ जहाँ करारविन्द तथा पादारविन्दवाला बालकृष्ण निवास गर्नुहुन्छ। श्राद्ध क्रिया गराउने पुरोहितले कुनै एक वस्तुको त्याग गराउँछ र भगवान्सँग केही माग भन्छन्।

पहिले केही त्याग गरियोस् फेरि त्यसपछि केही मागियोस्। जसले भगवान्लाई केही त्याग गर्न सक्छ, त्यसलाई मात्र उनीसँग माग्ने अधिकार पनि दिइन्छ। ज्यादा जसो मानिस जुन कुरा आफूलाई मनपरेको छैन त्यसलाई मात्र छोड्ने प्रतिज्ञा गर्छन्। खाने-पिउने सामान्य चीज छोड्ने प्रतिज्ञा ज्यादा जसो मानिस गर्छन् यस किसिमबाट साग-पात या फल आदिको त्यागले केही फाइदा छैन। यदि पाप र विकारको त्याग गर्‍यौं भने फाइदा छ। यसो भन काशी विश्वनाथको दर्शन गरेर काम छोड़िदिएँ र गोकुल, मथुराको यात्रा गरेर क्रोधलाई छोड़िदिएँ। एक-एक तीर्थमा एक-एक पाप छोड़, एक-एक त्याग गर। प्रभुका निमित्त अति प्रिय वस्तु त्याग गर्‍यौं भने उहाँ प्रसन्न हुनुहुनेछ।

काशी ज्ञानभूमि हो। अयोध्या वैराग्य भूमि हो। ब्रज प्रेमभूमि हो। ब्रजरजमा कृष्णप्रेम भरिएको छ।

नर्मदाको किनारा तपोभूमि हो। ''रेवातीरे तपः कुर्यात्।'' नर्मदाको किनारमा ज्ञान, वैराग्य र भक्ति, तीनै सिद्ध हुन सक्छन्।

तीर्थमा क्रोध नगर, तीर्थमा ब्रह्मचर्य आदि व्रतहरूको पालन गर्‍यौं भने तीर्थयात्राको फल पाइने छ।

यात्रा गर्दै विदुरजी यमुना-किनार वृन्दावनमा आइपुगे, ठाकुरजीका कृपाले तिमीले समय पायौ भने चार महीना वृन्दावनमा बसेर प्रभु-भजन गर।

कृष्ण व्रजमा नाङ्गो पाउ घुमिरहनुभएको थियो। यशोदाले संझाउनुभयो 'खाली खुट्टा जङ्गलमा घुम्नाले काँढ़ा-कंकड़ बिझ्ला, त्यसकारण जुत्ता लाएर जाऊ।' तर कृष्णले भन्नुभयो 'गाईहरूको सेवा गर्न मात्र तपाईंको घरमा आएको छु। पहिलो जन्ममा म राजाको घरमा राम बनेर जन्मेको थिएँ। त्यस वेला मलाई कसैले गो-सेवाको अवसर दिएनन्। त्यसैले मैले सोचें अब भविष्यमा म कुनै गोपालको घरमा जन्म लिनेछु र गौ सेवा गर्नेछु।' जब उहाँ पाँच वर्षका बालक हुनुहुन्थ्यो त्यसै वेलादेखि गाईहरूलाई ख्वाएर मात्र आफूले खाने नियम उहाँको थियो। कृष्णले भन्नुभो, 'मेरा गाईहरूका खुट्टा पनि नाङ्गै छन् भने म किन जुत्ता लाऊँ।'

कृष्णाका त्यसो तर कैयौं नाउँ छन्, तर एक वैष्णवले भन्यो मलाई तर गोपाल कृष्ण मात्र धेरै मन पर्छ। कृष्ण ब्रजमा खाली गोड़ाले हिँड्नुहुन्छ, त्यसकारण ब्रजरज अति पवित्र छ। द्वारिकामा राजा हुनुहुन्थ्यो र खाली गोड़ाले हिँड्न सक्नुहुन्नथ्यो।

विदुरजी कृष्ण-रमण गर्ने पवित्र माटोमा लड़िबुड़ी गर्नुहुन्छ। रमण रेतीमा गोपीहरूको पनि चरणरज छ। विदुरजी कृष्णाको मङ्गलमय लीलाको चिन्तन गर्नु हुन्छ। यमुनाको किनारमा लौकिक कुरा गर्नु पाप हो। यो भूमि अतिशय पवित्र छ, श्रीकृष्ण यहाँ गाई चराउन आउनुहुन्थ्यो। ब्रजको लीला नित्य हुन्छ। भागवतका प्रमुख टीकाकार श्रीधर स्वामीले भन्नुभएको छ भगवान्‌को नाउँ, लीला, स्वरूप, धाम, परिकर नित्य हुन्छ। आज पनि भगवान् व्रजमा प्रतिदिन लीला गर्छन्।

भगवान् भन्नुहुन्छ 'जगत्‌का कुनै पनि स्त्री, पुरुष, जड़, चेतन वस्तुमा आनन्द छैन। तिमी मेरा नजिक आऊ। म मात्र आनन्दस्वरूप हुँ।'

श्रीकृष्ण आनन्दस्वरूप हुनुहुन्छ।

विदुरजीले अनुभव गर्नुभयो श्रीकृष्ण गाई लिएर यमुनाको किनारामा आउनुभएको छ। त्यो कदम्बको वृक्ष हो। वैष्णव यसलाई टेर कदम्ब भन्छन्। कदम्बमा रम्दै श्रीकृष्ण वंशी बजाउनुहुन्छ र आफ्नी प्यारी गाईलाई बोलाउनु हुन्छ।

'हे गंगी, हे गोदावरी आऊ।' विदुरजीको यस्तो भावना थियो लीलालाई प्रत्यक्ष हेर्न सकौं। त्यसकारण उनलाई यो सबै अनुभव भयो।

गाईहरूका बीचमा उभिनुभएका गोपाल कृष्णाको ध्यान गर। यस किसिमबाट श्रीकृष्णाको ध्यान गर्नाले तन्मयता तुरुन्त प्राप्त हुन्छ।

इन्द्रियहरूको विवाह परमात्मासँग गर विषयहरूका साथ होइन।

भगवान्‌को एउटा नाउँ ऋषीकेश। त्यसको अर्थ हो—ऋषीक भनेको इन्द्रिय र ईशको अर्थ हो स्वामी। इन्द्रियहरूका स्वामी श्रीकृष्ण हुन्। यी पाँच इन्द्रियहरू साँचा पति होइनन्। इन्द्रियहरू पति हुन चाहन्छन्, संसारको जुनसुकै रूपलाई आँखाले जबसम्म हेरिरहन्छ, तबसम्म निद्रा आउँदैन। यसको अर्थ यो हो रूप आँखाको पति होइन।

विदुरजी सोच्छन् मेरो अपेक्षा यी पशु श्रेष्ठ हुन् जो परमात्मासँग भेट गर्न आतुर भएर दौड़न्छन्। गाईहरू पनि कृष्ण-मिलनका निमित्त व्याकुल छन्। धिक्कार छ मलाई अहिलेसम्ममा कृष्णमिलनको तीव्र इच्छा उत्पन्न भएको छैन। गाई दौड़न्छन् म ढुङ्गा जस्तो बसिरहेको छु। उनका आँखाहरू प्रेमाश्रुले रसाए। यस्तो प्रसङ्ग कहिले आउला म पनि यी गाईहरू जस्तै कृष्णमिलनका निमित्त दगुरौं। उनी कृष्णलीलाको चिन्तन गर्दै कृष्ण-प्रेममा पागल भएका छन्, अति तन्मय भएका छन्।

कुनै पनि किसिमबाट जगत्‌लाई बिर्सिदेऊ र प्रभुप्रेममा तन्मय होऊ। सबै साधनहरूको यही रहस्य हो। विरह जब अतिशय तीव्र हुन्छ तब परमात्मासँग मिलन हुन्छ।

प्रभु त्यस समयमा प्रभासमा हुनुहुन्थ्यो। उद्धवलाई ज्ञानको उपदेश दिनुभयो। भागवत धर्मको उपदेश दिनुभयो। फेरि उद्धवलाई बद्रिकाश्रम जान भन्नुभयो। तब उद्धवले भने एक्लै जान मलाई डर लाग्छ, हजूर पनि मसँग सवारी होस्।

जीवले ईश्वरलाई आफ्ना नजिक राख्योभने त्यो कहिले पनि भयभीत हुँदैन।

उद्धवलाई भागवत धर्मको उपदेश मिल्यो, तैपनि उनको मन शान्ति भएन। उनी भगवान्‌लाई भन्दछन् म एक्लै कसरी जान सक्छु। हामी दुवै सँगै जाउँला।

निर्गुण ब्रह्मको ज्ञान साह्रै उपयोगी हुँदैन। सगुण ब्रह्मको सहारा लिएर मात्र निर्गुण ब्रह्मलाई चिन्नुपरेको छ।

श्रीकृष्णले उद्धवलाई भन्नुभयो म क्षेत्रज्ञरूपबाट तिम्रो साथै छु। म तिमीमा मिलेको छु। मेरो स्मरण गरेमा उसै बखत उपस्थित हुने छु। तब उद्धवजीले प्रार्थना गर्नुभयो विना आधारको भावना रहन सक्दैन। मलाई केही आधार दिनुहोस्, तब श्रीकृष्णले उनलाई आफ्नो चरणपादुका दिनुभयो। उद्धवले मानिलिए अब द्वारिकानाथ मेरा साथ हुनुहुन्छ। अब म अनाथ छैन, सनाथ छु। यी पादुकाहरू होइनन्, प्रत्यक्ष प्रभु मेरा साथ हुनुहुन्छ। उद्धवजीको प्रभुप्रति प्रेम अत्यन्त प्रगाढ़ थियो। भगवान्‌का पादुकामा पनि उनी प्रभुकै दर्शन गर्दछन्। उनले आफ्ना शिरमा पादुकाहरू राखिलिए।

शिर बुद्धिप्रधान हो। यसमाथि प्रभुलाई राखेपछि तिम्रा मनमा कुनै विकार घुस्ने छैन।

शुकदेवजी भन्नुहुन्छ—'राजन् ! उद्धवजी बद्रिकाश्रम गइरहेका थिए। उनलाई बाटामा यमुनाजी र ब्रजभूमिको दर्शन भयो; मेरा ठाकुरजीको यही लीला हो।'

तीर्थस्थानमा मात्र स्नान गर्नाले मन पूरा शुद्ध हुँदैन। त्यहाँ बसेका कुनै भजनानन्दी सन्तको सत्सङ्ग गर्नाले मन अरू ज्यादा शुद्ध हुन्छ।

उद्धवजीले सोच्नुभयो म यहाँ केही दिन बस्नेछु र कुनै सन्तको, कुनै वैष्णवको सत्सङ्ग गर्नेछु। उनी निश्चय गर्छन् कोही प्रभुको प्यारो वैष्णव पाइएला अनि मात्र म बोल्नेछु अन्यथा मौन बस्ने छु।

वृन्दावनमा अनेक साधु आज पनि राधा-कृष्णका गुप्त लीलाहरूको वर्णन गर्दै फिर्दै गर्छन्। यमुनाकिनारमा रमणरेतीमा विदुरजी बसिरहेका थिए। टाढ़ाबाट उद्धवजीले उनलाई देखेर सोच्नुभयो मलाई लाग्छ यिनी कोही वैष्णव बसिरहेछन् र उनको हृदय कृष्णप्रेमले भरिएको छ। नजीक गएपछि उद्धवजीले चिन्नुभयो यिनी महान् भगवद्भक्त विदुरजी हुन् र उनले विदुरजीको वन्दना गरे। त्यसै वेला विदुरजीले आँखा खोले र उद्धवजीलाई भने यो ठीक भएन तपाईंले मलाई वन्दना गर्ने। विदुरजीले उद्धवजीलाई प्रणाम गरे।

सन्तहरूको मिलन कति मधुर हुन्छ—

चार मिले चौंसठ खिले, बीस रहे कर जोड़।
हरिजनसे हरिजन मिले, विहसे सात करोड़॥

चार-चार आँखाहरू, बत्तीस-बत्तीस गोप्य दाँत, बीस हातगोड़ाका औंलाहरू, सात करोड़—( सात कोटि ) रौं शरीरमा हुन्छन्। हरिभजनको अर्थ भयो हरिका प्यारा।

विदुरजी र उद्धवजीको दिव्य सत्सङ्ग भयो।

मनुष्य सत्सङ्गमा जति समय बिताउँछ त्यति मात्र त्यसले सही अर्थमा बाँचेको हो। सन्तहरूको मिलनमा केवल परमात्माको मात्र चर्चा हुन्छ। सन्तसँग भेट भएपछि तिमीले आफ्नो सांसारिक कुरा नगर्नू।

यमुनाजीलाई आनन्द भइरहेछ यी भक्त आज मेरा प्रभुका लीलाको वर्णन गर्नेछन्। मेरा श्रीकृष्णको कुरा गर्लान्। मेरा श्यामसुन्दरको गुणानुवाद गर्लान्, लीला गान गर्लान्, म आफ्नो कृष्णका लीलाहरूको वर्णन सुन्नेछु। यमुनाजी शान्त, गम्भीर भइन्, ती दुइ भक्तहरूले प्रथम बाललीला, फेरि पौगण्डलीला, प्रौढ़लीला आदि सम्पूर्ण लीलाहरूको वर्णन संक्षेपमा गरे।

उद्धवजी भन्नुहुन्छ—'मलाई प्रभुले प्रभासमा भागवत धर्म उपदेश दिएर बद्रिकाश्रम जाने आज्ञा दिनुभएको थियो तपाईंको दर्शनले मलाई बहुतै आनन्द भएको छ।'

विदुरजी भन्दछन्—'जुन भागवत-धर्मको उपदेश भगवान्‌ले तपाईंलाई दिनुभयो, त्यो म सुन्न चाहन्छु। म जातिहीन र कर्महीन हुँ, तर तपाईं जस्तो दयाका सागर वैष्णव कहाँ हुन्छन्? भगवान्‌ले अलिकता कृपा ममाथि गर्नुभएको हो। तपाईंले मेरो इच्छा पूर्ण गरिदिनुहोस्। म अधम हुँ। तैपनि जो उपदेश तपाईंलाई प्रभुले दिनुभएको थियो त्यो तपाईंबाट सुन्ने इच्छा राख्दछु। तपाईंले कृपया मलाई सुनाइदिनुहोस्।'

उद्धवजी भन्नुहुन्छ—'तपाईं साधारण मानव होइन।'

मानिस जबसम्म दीन र नम्र हुँदैन तबसम्म त्यो भगवान्‌लाई मन पर्दैन। जहाँ पनि दृष्टि पुगोस्, वहाँ श्रीकृष्णको दर्शनको भावना गर अनि मात्र दैन्य भाव आउनेछ।

'विदुरजी तपाईंसँग अरू के कुरा गरूँ। जब मलाई उपदेश दिनुभएको थियो, तब मैत्रेयजी वहाँ बसिरहनुभएको थियो। भगवान्‌ले जब स्वधाम गमन गर्नुभयो त्यस समय उहाँले वसुदेव, देवकी, रुक्मिणी, सत्यभामा आदि कसैको पनि संझना गर्नुभएन तर तपाईंलाई तीन पटक संझनुभयो। उहाँले मलाई भन्नुभयो 'मलाई आफ्ना विदुरको संझना भइरहेछ। उनी मलाई भेटिएनन्। एक पटक जो साग मैले उनको घरमा खाएँथें त्यसको स्वाद मैले अझसम्म पनि बिर्सन सकेको छैन। त्यो साग मलाई आज पनि संझना भइरहेछ।'

भगवान्‌ले जसलाई आफ्नो भन्नुहुन्छ, मान्नुहुन्छ, त्यसको नाउँ सदा संझना गरिरहनुहुन्छ।

साधारण व्यवहारमा कोही कसैलाई भन्दैन तँ मेरो होस्, जीव मन्दिरमा गएर भगवान्‌सँग भन्छ—म तपाईंको हुँ र घर फर्केपछि आफ्नी दुलहीलाई भन्छ 'म तेरो हुँ।' मन्दिरमा जो भगवान्‌को थियो त्यो घर आएपछि कुनै अरूको भयो। त्यसकारण भगवान् न प्रसन्न हुनुहुन्छ न भन्नुहुन्छ

तँ मेरो होस्। मन्दिरमा जो भगवान्‌को थियो त्यसले फर्किएर आएपछि बिर्सियो ऊ कसको थियो।

भगवान्‌लाई त्यसो तर धेरै मानिसहरू भन्छन् हामी तपाईंका हौं, तर यस्तो कोही पनि भन्दैन म केवल तपाईंकै हुँ र अन्य कसैको होइन।

कृष्ण तवाऽस्मि न चास्मि परस्य

जगत्‌मा जबसम्म मानिस कुनै अरूको हुन्छ, तबसम्म भगवान्‌को हुन सक्तैन। भगवान् जसलाई आफ्नो संझिनुहुन्छ त्यो मायाको बन्धनबाट मुक्त हुन जान्छ। भगवान्‌सँग प्रतिदिन प्रार्थना गर र तपाईं एकपटक भनिदिनुहोस् तँ मेरो होस्। भगवान् जब भन्नुहुन्छ तँ मेरो होस्, तब सच्चा ब्रह्म सम्बन्ध हुन्छ।

तुलसीदासजी भन्नुहुन्छ 'म जस्तो कामीलाई आफ्नो भन्न रामजीलाई लाज हुन्छ, तपाईं राजाधिराजको आँगनमा बसिरहने कुकुर हुँ म। मलाई आफ्नो आँगनमा बसिरहन दिनुहोस्। मलाई आफ्नो भनिदिनुपर्‍यो।'

तुलसी कुत्ता रामका, मोतिया मेरा नाम।
कण्ठे डोरी प्रेमकी, जीत खींचो उतजान॥

मैले तपाईंको पट्टी घाँटीमा बाँधेको छु। म पापी हुँ तर पनि तपाईंकै हुँ। म कुकुर हुँ रामजीको। परमात्माले मलाई आफ्नो तुल्याइसक्नुभएको छ।

परमात्माले जब तिमीलाई आफ्नो गराइलिनुहुन्छ तब उहाँलाई जुन काम मन पर्छ त्यही काम गर।

भोगमा सन्तोष मानिलेऊ तर भगवान्‌को भजनमा कहिल्यै पनि सन्तुष्ट नहोऊ। भक्तिमा जसले सन्तोष मान्दछ, त्यो प्रभुको बाटोमा कहिले पनि अगाड़ि बढ्न सक्तैन। भक्ति यस्तो गर भगवान्‌ले तिम्रो संझना गरून्, भगवान्‌लाई तिम्रो संझनाले पिरिराखोस्।

भगवान्‌ले विदुरजीलाई तीन पटक संझनुभएको थियो।

विदुरजी उद्धवलाई सोध्छन्—'के मलाई साँच्चै भगवान्‌ले संझनुभएको थियो ?'

उद्धवजी भन्नुहुन्छ—'तपाईं बड़ो भाग्यशाली हुनुहुन्छ। भगवान्‌ले तपाईंलाई एक पटक होइन तीन-तीन पटक संझनुभयो। उहाँले यो पनि भन्नुभयो सबैलाई मैले केही न केही दिएको छु तर विदुरजीलाई मैले केही दिन सकिनँ। त्यसकारण मैत्रेयजीलाई आज्ञा गर्नुभयो जब विदुरजीको तिमीसँग भेट होला उनलाई यस भागवत धर्मको ज्ञान दिए।'

यो कुरा सुनेर विदुरजीका आँखाहरूबाट अश्रुधारा बगे। प्रेमले विह्वल भएर उनी रोइदिए।

आत्मानं च कुरुश्रेष्ठ कृष्णेन मनसेक्षितम्।
ध्यायन् गतन् भागवते रुरोदप्रेमविह्वलः॥

परम भक्त उद्धवजीका मुखारविन्दबाट भगवान्को प्रशंसनीय कामहरूका कुरा तथा प्रभु अन्तर्ध्यान भएको समाचार सुनेर तथा परमधाम जाँदा पनि प्रभुले मलाई संझनुभयो भन्ने थाहा पाएर उद्धवजी हिँड्सिकेपछि प्रेम-विह्वल भएर विदुरजी रुन थाले।

उद्धवजी बद्रिकाश्रम गए र विदुरजी मैत्रेयऋषिको आश्रममा जान निस्किए। यमुनाजीले कृपा गरेर विदुरजीलाई भक्तिको दान दिइन्। यमुनाजीले नवधा भक्ति दिइन्। ज्ञान र वैराग्यविना भक्ति दृढ़ हुँदैन र सफल पनि हुँदैन। ज्ञान र वैराग्यको दान गंगाजीले गर्छिन्।

विदुरजी गंगा किनारमा मैत्रेय ऋषिका आश्रममा आए। गंगाजीको ठूलो महिमा छ, विदुरजीले गंगाजीमा स्नान गरे। गंगाजीका किनारका यी पत्थर भाग्यशाली छन्। यी पत्थरहरूमा वैष्णवहरूका चरण-रज खसिरहेको छ।

विदुरजी सोचमा डुबिरहेका छन्—जातिहीन हुनाले मलाई मैत्रेय ऋषिले उपदेश दिनुहुने हो वा होइन। म जातिहीन छु तर कर्महीन छैन, म पापी छु, अधम छु, तर परमात्माले मलाई आफ्नो गराउनुभएको छ। त्यसकारण मैत्रेय ऋषिले मलाई अवश्य उपदेश दिनुहुनेछ।

भक्तिमार्गको श्रेष्ठताको यही कारण हो जबसम्म परमात्माको प्रत्यक्ष मिलन हुन पाउन्न, तबसम्म भक्तले यही विचार गर्छ मेरा दोषका कारणले मिलन भइरहेको छैन। भक्तिद्वारा दैन्यको उत्पत्ति हुन्छ। ज्ञानमा योगी ब्रह्मस्वरूप हुन थाल्छ तर अभिमान आउनका कारणले धेरै जनाको पतन पनि हुन्छ।

आश्रममा आएर विदुरजीले मैत्रेयजीलाई साष्टाङ्ग प्रणाम गरे। उनको विनय विवेकबाट सबैलाई आनन्द भयो।

मैत्रेय ऋषि भन्नुहुन्छ—'विदुरजी, तपाईंलाई म चिन्दछु, तपाईं साधारण मानिस होइन। तपाईं हुनुहुन्छ यमराजको अवतार। माण्डव्य ऋषिको श्रापको कारणले दासी पुत्रको रूपमा शूद्रको घरमा तपाईंको जन्म भएको थियो।'

एक पटक केही चोरहरूले राजाको ढुकुटीबाट चोरी गरे। चोरी गरेर तिनीहरू भाग्न थाले। राजाका सेवकहरूलाई यो चोरीको समाचार पुग्यो। तिनीहरूले चोरको पीछा गरे। राजाका सेनाहरूलाई पछिबाट आउँदै गरेको देखेर चोर आत्तिए। चोरीको मालका साथ भाग्न मुश्किल थियो। यत्तिकैमा बाटामा माण्डव्य ऋषिको आश्रम आयो। चोरहरूले चोरेर ल्याएका ती सारा धन सम्पत्ति त्यही आश्रममा फ्याँकिदिएर कुलेलम ठोके। राजाका सैनिक पछि लाग्दै आश्रममा आइपुगे। त्यहाँ राजाको ढुकुटीबाट चोरेर ल्याएको सारा सम्पत्ति देखेर उनीहरूले मानिलिए यिनै माण्डव्य ऋषि चोर हुन्। उनीहरूले ऋषिलाई समाते र धन-सम्पत्तिका साथ राजाका समक्ष उपस्थित गरिदिए। राजाले मृत्युदण्ड दिए।

माण्डव्य ऋषिलाई शूली दिने खाँबामा उभ्याए। उनले त्यहीं गायत्री मन्त्रको जप गर्नथाले। माण्डव्य मर्दै मरेनन्। ऋषिको दिव्य तेज देखेर राजालाई लाग्यो यी कुनै तपस्वी महात्मा लाग्दछन्। राजा डराए। ऋषिलाई खाँबाबाट तल ओह्राले। सबै कुरा थाहा पाएपछि राजालाई दुःख लाग्यो र पश्चाताप गर्न थाले 'मैले निरपराध ऋषिलाई शूली चढ़ाउन चाहें।' माण्डव्य ऋषिसँग क्षमा पाउनका निमित्त प्रार्थना गरे।

माण्डव्य ऋषि भन्नुहुन्छ—'राजन्! तिमीलाई म क्षमा गरिदिन्छु, तर यमराजसँग म सोध्ने छु मलाई यस्तो दण्ड किन दिइयो? मैले कुनै पाप गरेको छैन र पनि मलाई यस्तो दण्ड किन? म यमराजलाई क्षमा गर्न सक्दिनँ।'

जसले पाप गरेको छ त्यसलाई डर लाग्छ। पापीलाई यमराज क्रूर लाग्दछन्।

माण्डव्य भन्दछन् 'म निष्पापलाई सजाय किन? म त्यस न्यायाधीश यमराजलाई सजाय दिन्छु।'

आफ्नो चरित्रमा कस्तो अटल विश्वास? भरतखण्डको एक पवित्र सन्त आज न्यायाधीशसँग उत्तर माग्न थालिरहेका छन्।

यमराजको सभामा आएर ऋषिले यमराजलाई सोधे 'जब मैले कुनै पापै गरेको छैन भने मलाई शूलीमा किन चढ़ाइयो? शूलीमा झुण्ड्याइने सजाय मलाई मेरो कुनचाहिँ पापका निमित्त दिइयो?'

यमराज आत्तिए, उनले सोचे यदि भूल भयो भनौं भने यी मुनिले श्राप दिइहाल्छन्। त्यसकारण उनले ऋषिलाई भने जब तपाईं तीन वर्षको हुनुहुन्थ्यो त्यसवेला तपाईंले एउटा पुतलीलाई काँढ़ाले घोचिदिनु भएको थियो, त्यही पापको यो सजाय हो।

जानी नजानी जुन पनि पाप गरिन्छ त्यसको दण्ड भोग्नै पर्छ। भगवान् पापलाई स्वीकार गर्दैनन्। पुण्यको उपभोगको इच्छा नगरे पनि केही कुरा छैन तर पाप चाहिँ भोग्नै पर्छ।

पुण्य कृष्णार्पण हुन सक्छ, पाप हुँदैन। पाप तर भोग्नै पर्छ अन्यथा पापको नाश हुँदैन।

मानिस बेलुका पसलबाट घर फर्कंदा मन्दिरमा जान्छन् र हात जोड़ेर प्रार्थना गर्छन्—'सारा दिनमा जे-जति झूठो बोलें हुँला, कसैलाई ठगें हुँला, कुनै कुकर्म गरें हुँला ती सबै तपाईंमा अर्पित गर्छु।'

कायेन वाचा मनसेन्द्रियैर्वा बुध्याऽत्मना वा प्रकृतेः स्वभावात्।
करोमि यद्यत् सकलं परस्मै नारायणायेति समर्पयामि॥

शरीर, मन, वचनबाट जो गरिन्छ अर्थात् यिनबाट जो पुण्य गरिन्छ, त्यो प्रभुलाई अर्पण गर्नु छ। पुण्य समर्पित हुन सक्छ, पाप हुँदैन, भगवान् पाप लिनुहुन्न। सामान्य सरकार पुरस्कार फिर्ता लिन सक्छ तर कसैलाई दिएको दण्ड फिर्ता लिँदैन।

भगवान् भन्नुहुन्छ 'कस्तो मूर्ख व्यक्ति होला जो मलाई आफ्नो पाप अर्पित गर्न थालिरहेछ।' परमात्मालाई सदा पुण्य समर्पित गर। सदा यही सोच सजाय म सहिलिने छु र भगवान्लाई पुण्य अर्पित गर्नेछु।

भगवान्लाई सर्वोत्तम वस्तु अर्पित गर्नुपर्छ। यसैको नाउँ भक्ति हो, भगवान्लाई पुण्य मात्र समर्पित गर्नुपर्छ।

माण्डव्य ऋषिले यमराजलाई भने—'शास्त्रको आज्ञा छ यदि अज्ञानावस्थामा कुनै मानिसले केही पाप गरेको छ भने त्यसको उसलाई सपनामै दण्ड दिनुपर्छ। म बालक थिएँ अबोध थिएँ। त्यसकारण त्यस समयमा गरेका पापको सजाय मलाई सपनामै दिनुपर्थ्यो। तिमीले मलाई अयोग्य प्रकारले दण्ड दियौ। त्यसकारण म तिमीलाई श्राप दिन्छु तिम्रो जन्म शूद्र योनिमा होस्।'

यस प्रकार माण्डव्य ऋषिको श्रापको कारण यमराजलाई विदुरजीको रूपमा दासीको घरमा जन्म लिनुपर्‍यो।

देवबाट भूल भएपछि उसले मानिस हुनुपर्छ र मानिसले भूल गर्‍यो भने त्यसले चार पाइलावाला पशु बन्नुपर्छ। पापी मनुष्य पशु बन्दछ।

विदुरजी भन्छन् 'एक पटक मबाट भूल भएको हुँदा मलाई देवबाट मनुष्य बन्नुपर्‍यो र अब पनि म असावधान भएँ भने मलाई पशु बन्नुपर्ने छ।'

फेरि यसपछि मैत्रेयजीसँग विदुरजीले अनेक प्रश्न सोधे—'भगवान् अकर्ता हुनुहुन्छ, तैपनि कल्पको आरम्भमा यस सृष्टिको रचना उहाँले कसरी गर्नुभयो? संसारमा सबै जना सुखका निमित्त प्रयत्न गर्छन्, तैपनि तिनको न दुःख हट्छ र न उनलाई सुख हुन्छ। यस्तो किन? यी प्रश्नहरूको उत्तर पाउँ, यस्तो कथा भन्नुहोस् र भगवान्का लीलाहरूका वर्णन गर्नुहोस्।'

मैत्रेयजीले भन्नुभयो—'सृष्टिको उत्पत्तिको कथा भागवतमा बराबर आउँछ। तात्त्विक दृष्टिबाट जगत् मिथ्या हो। त्यसकारण साधुहरूले त्यसको ज्यादा विचार गरेनन् तर सृष्टिका कर्ताको भने बार-बार विचार गरेका छन्।'

परमात्मालाई मायाको स्पर्श भयो अनि उसले सङ्कल्प गर्‍यो एकबाट अनेक बनूँ—*'एकोऽहम् बहुस्याम।'* पुरुषबाट प्रकृति, प्रकृतिबाट महत्तत्त्व, महत्तत्त्वबाट अहङ्कार उत्पन्न भयो। अहङ्कारका चार प्रकार छन्, फेरि पञ्च तन्मात्राबाट पञ्चमहाभूतहरूको उत्पत्ति भयो। तर यी तत्त्वले स्वयं केही पनि क्रिया गर्न सक्तैन थिए, त्यसकारण ईश्वरले हरेक वस्तुमा प्रवेश गर्नुभयो।

उपनिषद्मा भनेको छ प्रत्येक वस्तुमा प्रभुले प्रवेश गर्नुभएकाले सारा जगत् परमात्माको मङ्गलमय स्वरूप हो।

भगवान्को नाभिबाट कमल उत्पन्न भयो। उसबाट ब्रह्मा प्रकट हुनुभयो।

ब्रह्माजीले कमलको मुख खोज्ने कोशिश गर्नुभयो तब चतुर्भुज नारायणको दर्शन भयो। ब्रह्माजीले उहाँको स्तुति गर्नुभयो।

सन्तति र सम्पत्ति भगवत्कृपाको फल होइन, प्रारब्धको फल हो। भगवान् जसका ऊपर कृपा गर्नुहुन्छ त्यसको मन शुद्ध हुन्छ। विना मन शुद्धि ईश्वरको दर्शन हुँदैन। ईश्वरको दर्शनविना जीवन सफल हुँदैन।

जसले मलाई जन्म दियो त्यसलाई चिन्ने कोशिश पनि भएन। म जस्तो मूर्ख अरू को होला ?

ब्रह्माजीलाई डर लाग्यो संसारमा आएपछि इन्द्रियहरूले कहीं कुबाटोतिर लग्ने होइनन् ? भनेर।

ब्रह्माजीले सृष्टिको निर्माण गर्नुभयो। कामलाई जन्म दिइयो। कामले प्रथम पितालाई मोहित पाऱ्यो।

पहिले भए स्वायंभुव मनु र शतरूपा रानी। त्यस समयमा पृथ्वी रसातलमा डुबिरहेकी थिइन्। ब्रह्माले सोच्नुभयो प्रजाको निर्माण चाहिँ गरौंला तर तिनलाई कहाँ लगेर बसाउने ? त्यसकारण नाकभित्रबाट वराह भगवान् प्रकट भए। उनले पृथ्वीलाई पानीभित्रबाट बाहिर निकाले। बाटामा हिरण्याक्षलाई मारे र पृथ्वीको शासन मनुका हातमा सुम्पिएर भगवान् स्वधाम फर्कनुभयो।

विदुरजीले भने 'तपाईंले बहुतै छोटकरीमा कथा सुनाउनुभयो। यो कथाको रहस्य के हो ? त्यो हिरण्याक्ष को थियो ? पृथ्वी रसातलमा किन डुबेकी थिइन् ? वराह नारायणको चरित्र मलाई सुनाउनुहोस्।'

यो कथा मैत्रेयजीले विदुरजीलाई सुनाउनुभएको थियो र शुकदेवजीले परीक्षित्‌लाई।

दिति कश्यप ऋषिकी धर्मपत्नी थिइन्। एक दिन दिति सायङ्कालमा सिँगारिएर पतिका नजिक आइन् र कामसुखको उपभोग गर्ने इच्छा प्रकट गरिन् किनकि उनी कामातुर भइसकेकी थिइन्।

कश्यपले भने—'देवी ! यो समय सायङ्कालको छ, यो समय कामसुखका निमित्त उपयुक्त छैन। यस समय कामाधीन हुनु ठीक छैन। जाऊ, बत्ती बाल।'

शास्त्रमा भनिएको छ सौभाग्यवती स्त्रीमा लक्ष्मीको अंश हुन्छ। सायङ्कालका वेलामा लक्ष्मीनारायण घर आउनुहुन्छ त्यस समयमा ढोका बन्द भयो भने लक्ष्मीजी 'जय श्रीकृष्ण' भन्दै फर्केर जानेछिन्। आजकाल सभ्य मानिसहरू खास गरेर बेलुकै ताल्चा मारी बाहिर निस्कन्छन्। घुम्न जानु छ भने पनि सूर्यास्तको पहिले घरमा फर्केर आउनुपर्छ। स्वास्नी मानिसहरूले पनि बेलुका घरबाहिर विनाकाम घुम्नुहुँदैन। सन्ध्या समयमा तुलसीको पूजा गर र त्यहाँ बत्ती बाल। भगवान्‌का अगाड़ि धूपदीप सल्काऊ।

मनुष्यका हृदयमा अन्धकार छ। त्यहाँ प्रकाश फिँजाउनु छ।

दशम स्कन्धमा कथा छ। गोपिनीहरू यशोदाजीसँग उजुर गर्छन् कृष्णले हाम्रो नौनी चोरेर खाइदिन्छन्। यशोदा जवाफ दिन्छिन् 'अँध्यारामा नौनी राख्ने गर अनि कृष्णले देख्न पाउने छैनन्।' गोपिनीहरू भन्छन्—'नौनी अँध्यारोमै राखेको हो, तर कृष्ण आउनासाथ त्यहाँ उज्यालो भइहाल्यो।'

ईश्वरलाई अर्काको प्रकाश चाहिँदैन, ऊ स्वयंप्रकाशी छन्। परमात्मालाई बत्तीको आवश्यकता छैन। बत्तीको आवश्यकता मानवलाई मात्र छ।

सायङ्कालमा सूर्य-चन्द्रको तेज क्षीण हुन्छ। दुर्बल हुन्छन्। सूर्य बुद्धिको स्वामी हो र चन्द्रमा मनको। मन र बुद्धिका स्वामी सूर्य-चन्द्रको सायङ्काल दुर्बल हुनाको कारणले मन र बुद्धिमा काम त्यस समयमा प्रवेश पाउनसक्छ। काम मनमा साँझको वेलामा प्रवेश गर्छ र रातमा प्रकट हुन्छ। सन्ध्याकालमा प्रभुको नाउँको जप गरेमा कामको प्रवेश हुन पाउँदैन।

कश्यप ऋषि दितिलाई संझाउँछन्—'मानिनी ! मानिलेऊ भगवान् शङ्कर यस समयमा जीवलाई हेर्नका निमित्त भ्रमण गर्नुहुन्छ। त्यसकारण यस समयमा स्त्रीसङ्ग गर्नाले शङ्कर भगवान्को अपमान हुनेछ र अपमानका कारणले अनर्थ हुनेछ। शङ्कर भगवान्ले देख्नुभयो भने दण्ड दिनुहुनेछ।'

'भस्मान्तम् शरीरम्।' यो शरीर अन्त्यमा भस्मै हुने हो, त्यसकारण शिवजी भस्म लगाउनुहुन्छ र जगत्लाई वैराग्यको बोध गराउनुहुन्छ। शरीरलाई अतिशय सम्भार नगर। सधैं यो सम्झिराख यस शरीरलाई एक-न-एक दिन श्मशानमै जानु छ। गृहस्थाश्रम विलासका निमित्त होइन, तर मर्यादासँग बसेर विवेकसाथ काम-सुखको उपभोग गरेर कामको विनाश गर्नलाई हो, वैराग्यलाई हो। नियमपूर्वक कामको विनाशका निमित्त यो गृहस्थाश्रम हो। काम यस्तो दुष्ट छ जो एक पटक हृदयमा प्रवेश गरेपछि ऊ बाहर निस्कँदै निस्कन्न। एक पटक कामभित्र प्रवेश गरेपछि तिम्रो सारा स्फूर्ति हावा हुन्छ। त्यसकारण जीवन यति सादा र पवित्र बनाऊ मन-बुद्धिमा प्रवेश गर्ने अवसर कामले पाउनै नसकोस्।

उल्लूहरूले एक सभामा प्रस्ताव पास गरे सूर्यनारायणको अस्तित्व छँदै छैन, किनभने उहाँ हामीलाई देखिनु हुन्न। उल्लूले सूर्यलाई देख्न नपाउँदैमा के यसको अर्थ हो सूर्यको अस्तित्व छैन ? धर्ममा आस्था नराख्ने मानिस, ईश्वरलाई नमान्ने व्यक्ति यसै उल्लूको ठूलो दाइ हो।

दितिको भेद—बुद्धिबाटै हिरण्याक्ष र हिरण्यकशिपुको जन्म भएको छ। सबैमा मेरा नारायणको वास छ। यस्तो अभेद भाव राख्यौ भने पाप लाग्दैन।

दितिले कश्यपको कुरा मानिन् र कश्यप पनि दितिको दुराग्रहको अगाड़ि हारे। अन्त्यमा दितिलाई आफ्नो क्षतिको भान भयो। उनले पश्चाताप गरिन्। उनले कश्यपको पूजा गरिन् र भगवान् शिवजीसँग क्षमा मागिन्।

कश्यपले भने—'तिम्रो गर्भबाट दुइ राक्षस उत्पन्न हुनेछन्।'

पति र पत्नीले उचित संयमको पालन गरेनन् भने उनबाट पापी प्रजाको उत्पत्ति हुन्छ। पवित्र दिन अर्थात् दुवै पक्षको द्वितीया, पंचमी, अष्टमी, एकादशी, चतुर्दशी, पूर्णिमा, अमावस्या तथा पर्वहरूका दिन ब्रह्मचर्यको पालन अवश्य गर्नू। मानिस भन्छन् काल बिग्रियो त्यसैले पापी प्रजा उत्पन्न भइरहेछन्। त्यसो तर काल पनि अलि-अलि बिग्रेको छ तर मानिसहरूको मन ज्यादा बिग्रिएको छ। एकादशी, पूर्णिमा या पवित्र दिनको विचार नगरिकनै कामान्ध भइहाल्छन्। त्यसैले पापी प्रजा उत्पन्न भइरहेछन्।

कामलाई हृदयमा प्रवेश गर्ने अवसरै नदिइयोस्। एक पटक कामको हृदयमा प्रवेश भयो भने बुद्धिले कामै गर्दैन।

दितिले कामान्ध हुनाको कारणले बुद्धि गुमाउनुपर्‍यो।

मनुष्यले केवल यस शरीरको मात्र विचार गर्‍यो भने पनि त्यसको हृदयमा शरीर सुखका प्रति तिरस्कार उत्पन्न हुनेछ र वैराग्यका भावहरूको उत्पत्ति हुनेछ। यो शरीर कस्तो छ? यसमा हाड़हरू टेढ़ो र तेर्सो ओछ्याइदिएको छ। त्यसमाथि मासु राखिदिएको छ र छालाले मोरिदिएको छ, त्यसकारण भित्रका चीजहरू देखिँदैनन्। अन्यथा बाटामा परिरहेका हाड़का टुक्रालाई कसैले छुने पनि छैन। त्यसले सोच्ला त्यसलाई छुनाले शरीर अपवित्र हुनेछ। तर त्यही मानिसले शरीरभित्रका हाड़हरूलाई प्रेम गर्छ। यस्तो मूर्ख अरू को हुन सक्ला।

भागवतमा एक ठाउँमा भनिएको छ—'यो शरीर कुकुर र स्यालको भोजन हो। अग्निसंस्कार नभएका खण्डमा यसलाई कुकुरले खाने हो। यस्तो शरीरको मोह छोड़।'

जब दितिले थाहा पाइन् उनको गर्भबाट राक्षस उत्पन्न हुनेछन् तब उनी बहुतै आत्तिइन्। तब कश्यपले भने उनको संहार गर्नलाई भगवान् नारायण पाल्नुहुनेछ। तब दितिले भनिन्—तब मेरो पुत्र बड़ो भाग्यशाली हुनेछ।

कश्यपले दितिलाई यस्तो पनि आश्वासन दिए तिम्रो नाति महान् भागवत भक्त र महान् वैष्णव हुनेछ र प्रह्लाद नाउँले जगत् विख्यात हुनेछ।

जसले ठाकुरजीको सेवा र स्मरण एक्लै गर्छ, त्यो साधारण वैष्णव हो। तर जसको सङ्गतले अरूहरूलाई पनि ईश्वरको सेवा र स्मरण गर्ने प्रेरणा मिल्दछ र इच्छा जागेर आउँछ, त्यो महान् वैष्णव हो।

भक्तहरूले एकपटक महाप्रभु वल्लभाचार्यजीसँग भने—'हामीलाई वैष्णवको लक्षण भन्नुहोस्।' महाप्रभुजीले भन्नुभयो—'जसले ठाकुरजीको सेवा गर्छ, त्यो पक्का वैष्णव हो।' भक्तहरूले भने—'यो कुरा हामी पनि जान्दछौं। हामीलाई केही विशिष्ट लक्षण भन्नुहोस्।' तब महाप्रभुजीले भन्नुभयो—'महान् वैष्णव त्यो हो जसका सङ्गतमा आउने मानिसलाई ठाकुरजीको सेवामा प्रीति हुन जान्छ र त्यसमा पनि कृष्ण-भक्तिको रंग चढ्दछ।'

प्रह्लाद महान् वैष्णव हुनुहुन्छ।

प्रह्लादका सङ्गतमा आउनेहरूलाई पनि रंग लागिहाल्यो। तिम्रो सङ्गत गर्नेमा भक्तिको रंग लागेन भने मान तिम्रो भक्ति अहिले काँचो छ। तर अरूहरूलाई सुधार्ने कष्टमा पर्नु साधारण मानिसलाई केही आवश्यकता छैन। तिमीले आफ्नै मन शुद्ध गर, यही पनि प्रशस्त हुन्छ।

व्यसन जस्तो कुनै पाप छैन। जसले व्यसनलाई पराजित गर्न सक्छ, त्यसले मात्र भक्ति गर्न सक्छ। आजकल तर फेसन र व्यसनमै समय र सम्पत्तिको व्यय हुन्छ। व्यसनका पछि बहुलाएको मानिसले भगवान्को सेवा गर्न सक्दैन। वैष्णव त्यो हो जो निर्व्यसनी छ, जो भगवान्को आराधना गर्न चाहन्छ, त्यसले सांसारिक व्यसनसँग प्रेम गर्न हुन्न। जसले ईश्वरको आराधना गर्नुछ, उसले फेसन र व्यसनमा फँस्नु हुँदैन। व्यसन चाहिँ एउटै होस् र त्यो व्यसन हो श्रीकृष्ण-भक्तिको।

विद्याव्यसनम् अथवा हरिपादसेवनम् व्यसनम्।

तुकाराम महाराजको यस्तै व्यसन थियो। उनका आँखाहरूलाई यस्तो बानी भैसकेको थियो जहाँ उनको नजर पुग्थ्यो वहाँ उनलाई मुरलीमनोहरको स्वरूप देखिन्थ्यो।

भक्ति व्यसनरूप भयो भने तिमीलाई मुक्ति दिलाउनेछ। भक्ति व्यसन जस्तो भएपछि तुरुन्त मुक्ति पाइन्छ।

राज्यशासनले समाज सुध्रिँदैन। सन्तले मात्र सद्भावनाद्वारा त्यागलाई सुधार्न सक्छ। प्रह्लादका साथ जो पनि लागे ती सबैको कल्याण उनले गरे।

दिति गर्भवती भइन्। उनले सोचिन् मेरा छोराले देवहरूलाई कष्ट देलान्, त्यसकारण यिनको जन्म छिटो नहोस्। यस विचारले दितिले सय वर्षसम्म गर्भ धारण गरिराखिन्। सूर्य-चन्द्रको तेज क्षीण हुन थाल्यो। देवहरू आत्तिए। तिनीहरू ब्रह्माजीकहाँ आए र उनले सोधे—'दितिको गर्भमा को छ?' उनीहरूलाई ब्रह्माजीले दितिको गर्भमा जो थिए उनको कथा सुनाउनुभयो। ब्रह्माजीले भन्नुभयो—

एक पटक मेरा मानस पुत्र सनकादि ऋषि घुम्दै फिर्दै बैकुण्ठलोकमा गए।

अन्तःकरणचतुष्टयको शुद्धि भएपछि मात्र ईश्वरको दर्शन हुन्छ। ईश्वर दर्शन गर्न जाँदाखेरि यी चारैलाई शुद्ध गरेर जाऊ। अन्तःकरणका चार विभाग (प्रकार) छन्। अन्तःकरण जब सङ्कल्प विकल्प गर्छ तब त्यसलाई मन भनिन्छ, त्यसले जब कुनै वस्तुको निर्णय गर्छ त्यसलाई बुद्धि भनिन्छ। श्रीकृष्णको चिन्तन गरेपछि त्यसलाई चित्त भन्छन् र उसमा जब क्रियाको अभिमान जाग्दछ, तब त्यसलाई अहङ्कार भन्छन्। मन, बुद्धि, चित्त र अहङ्कार—यी चारैलाई शुद्ध गर। यी चारैको शुद्धि भएपछि मात्र परमात्माको दर्शन पाइन्छ। ब्रह्मचर्यविना यी चारैको शुद्धि हुँदैन। ब्रह्मचर्य तब मात्र सिद्ध हुन्छ जब ब्रह्मनिष्ठा सिद्ध हुन्छ।

सनत्कुमार ब्रह्मचर्यका अवतार हुन्। उनी महाज्ञानी छन् र पनि बालक जस्तै दैन्यभावले रहेका हुन्छन्।

सनत्कुमार आदि नारायणको दर्शनका निमित्त बैकुण्ठमा जान्छन्।

काम र कालले बैकुण्ठमा प्रवेश गर्न पाउँदैनन्। जहाँ बुद्धि कुण्ठित हुन्छ, त्यो बैकुण्ठ हो। बैकुण्ठका वृक्ष र पुण्य दिव्य छन्। छः ऋतुहरू सखी भएर त्यस धामको सेवा गर्छन्। त्यहाँ सात ठूलठूला किल्ला छन्, जसलाई नाघेर जानुपर्छ।

दक्षिणमा रंगनाथको मन्दिर यसै आधारमा बनाइएको छ।

सनत्कुमारहरूलाई अलौकिक बैकुण्ठ धामको दर्शन भइरहेछ। यहाँ भँवरा पनि प्रेमले भगवान्को गुणगान गर्न थालेका हुन् झैं लाग्छ। ती भँवराहरू गुनगुनाइरहेछन् मानौं श्रीकृष्णको दर्शन-कीर्तन चलिरहेको छ जस्तो लाग्थ्यो। बैकुण्ठमा विषमता छैन। यहाँका पार्षद भगवान्जस्ता छन् र दासीहरू लक्ष्मी जस्ता छन्। पार्षद् पनि शङ्ख-चक्र गदाधारी चतुर्भुज हुन्।

ईश्वर जब केही दिन थाल्नुहुन्छ तब दिँदाखेरि केही संकोच मान्नुहुन्न। भगवान् जब दिनुहुन्छ तब लिने मानिस पनि लिँदा-लिँदा थाक्छ। मनुष्य आखिर कति लिन सक्छ र?

ईश्वरको राजसभामा विषमता छैन। तिमीले पनि भोजन आदिमा विषमता नगर। कोही सेठहरू घरमा तीन किसिमका चामल राख्छन्—नोकरका निमित्त अलग्गै, साधुबाबाहरूलाई दिन अलग्गै र स्वयंलाई दिल्लीको बासमती चामल। यसप्रकार तीन प्रकारका चामल राख्छन्। यस्तो भेद कहिल्यै राख्नु हुँदैन। सबैका निमित्त एकैभावले एकै किसिमको भोजन बनाऊ। हाम्रा आमाहरू भोजन भाग लाउन बड़ा चतुर हुन्छन्। आफ्नो र आफ्नाहरूका रोटीमा केही बढ़ी घिउ लगाउँछन्।

भोजनमा विषमता नगर। विषमता गर्ने मानिसलाई संग्रहणीको रोग हुन्छ। विषमताले वैरको उत्पत्ति हुन्छ। विषमता गर्नु छ भने सद्भावले गर। व्यवहारमा सम्पूर्ण समानता हुँदैन, बैकुण्ठमा विषमता हुँदैन। लक्ष्मीजी पनि बैकुण्ठमा प्रमाद गर्नुहुन्न। त्यहाँ लक्ष्मीजी स्वयं सेवा गर्नुहुन्छ, कुचो लाउनुहुन्छ।

शुकदेवजीले कथा भनिरहनुभएको भन्दा पनि लक्ष्मीनारायणको दर्शन गरिरहनुभएको छ। प्रतिविम्बलाई हेर्नाले विम्बको मोह हुन्छ। तब विम्बलाई हेर्नाले कति आनन्द हुँदो होला? वैष्णव भाग्यशाली छन् तिनीहरूले प्रतिविम्बलाई देख्न सक्छन्। भगवान्ले आफ्नो विम्ब देख्न सक्नुहुन्न। कृष्ण ऐनामा आफ्नो प्रतिविम्ब देख्दछन्। कृष्ण यशोदालाई भन्दछन्—'यो बालक धेरै राम्रो छ, म त्यसका साथ खेल्न चाहन्छु।' आमा सम्झाउँछिन् 'त्यो कोही अरू बालक होइन। त्यो तेरै प्रतिविम्ब हो।' आफ्नो प्रतिविम्बलाई हेरेर जब भगवान् स्वयं मुग्ध हुन्छन्, गोपिनीहरूले विम्बको दर्शन गरेर खान बिर्सन्छन् भने त्यसमा आश्चर्यको कुन कुरा भयो।

सनत्कुमार बैकुण्ठका ६ द्वार पार गरेर सातौं द्वारमा आए। त्यहाँ जय-विजय उभिइरहेका थिए। सनत्कुमार भगवान्को प्रासादमा प्रवेश गर्नै आँटेका थिए भगवान्का द्वारपाल जयविजयले उनलाई रोके।

सनत्कुमारहरूले भने—'हामी माता र पिता लक्ष्मी र नारायणसँग भेट्न गइरहेछौं।'

सनत्कुमार कोपीनधारी थिए। कोपीनको अर्थ केवल लँगौटी होइन जितेन्द्रिय पनि कौपीनधारी हुन्।

भगवान्‌को दर्शन गर्नलाई जितेन्द्रिय भएरै जानुपर्छ।

द्वारपालहरूले सन्तकुमारहरूलाई भने—'भित्रबाट आज्ञा पाएपछि मात्र हामी तपाईंलाई प्रवेश गर्न दिन्छौं। त्यतिञ्जेल तपाईं यहीं पर्खनुहोस्।' सनत्कुमार यो सुनेर रिसाए।

क्रोध कामानुज-कामको सानो भाइ हो। अति सावधान भएमा कामलाई मार्न सकिन्छ तर त्यसको सानो भाइ क्रोधलाई मार्न कठिन छ। कामको मूल सङ्कल्प हो। ज्ञानी कुनै अरूको शरीरको चिन्तन गर्दैनन् त्यसकारण काम उनलाई दुःख दिन पाउँदैन। ज्ञानी पुरुषको पतन कामद्वारा हुँदैन, क्रोधको कारणले हुन्छ। ६ द्वार पार गरेर ज्ञानी पुरुष अगाड़ि बढ्छ तर सातौं द्वारमा जयविजयले उसलाई रोक्छन्।

योगका सात प्रकारका अङ्ग भनेका बैकुण्ठका सात द्वार हुन्। ती हुन्—यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, ध्यान र धारणा। यी सातै द्वारहरूलाई छिचोलेपछि ब्रह्मको साक्षात्कार हुन्छ। योगका सातै अङ्गहरूलाई सिद्ध गरेपछि बैकुण्ठमा प्रवेश पाइने छ।

ध्यानको अर्थ हो एक अङ्गको चिन्तन। शरीर, आँखालाई स्थिर राख्नु आसन हो। धारणाको अर्थ हो सर्वाङ्गको चिन्तन। धारणामा अनेक सिद्धिहरूले विघ्न पार्दछन्। सर्वाङ्गको दर्शन धारणा हो। साधकलाई जीवनको अन्तिम साससम्म सावधान हुनुपर्ने जरूरी छ। जय-विजय प्रतिष्ठाका दुइ स्वरूप हुन्। सर्वाङ्गको चिन्तनमा सिद्धि-असिद्धिले बाधा खड़ा गर्छन्। सिद्धि पाएपछि प्रसिद्धि हुन्छ। सेवामा प्रमाद गर्नेको पतन हुन्छ।

जय अर्थात् स्वदेशमा प्रतिष्ठा र विजय अर्थात् परेदशमा विजय।

जगत्‌ले मलाई के भन्लान् त्यसको पीर नगर, तर जगदीश्वरले के भन्नुहोला त्यसैको ख्याल राख। जो सांसारिक प्रतिष्ठामा फँस्दछ, त्यो परमात्माबाट टाढ़ा हुन जान्छ।

भगवान्‌को राजमहलमा सातौं द्वारमा जीवलाई जय र विजयले रोक्दछन्।

जय-विजयको अर्थ हो कीर्ति र प्रतिष्ठा। कीर्ति र प्रतिष्ठाको मोहलाई मनुष्य छोड्न सक्दैन। त्यसले घरको नाउँ राख्छ अशोक निवास, तर त्यो अशोक भई कहिलेसम्म त्यसमा बसिरहला? घरमा ठाकुरजीको नाउँ राख। घरमा पनि नाउँ छ र कथामा बसेपछि पनि आसनमा नाउँ छ। घरमा र आसनमा लेखिएको नाउं कतिसम्म रहन पाउला र? घरको मोह छुट्छ तर प्रतिष्ठाको मोह छुट्न पाउँदैन।

शिष्यले अलिकता प्रशंसा गरिदियो भने गुरु मान्न थाल्छन् त्यो ब्रह्मरूप भयो। सेवा-स्मरणको त्यसले विस्तार-विस्तार उपेक्षा गर्न थाल्छ र त्यो पतित भइहाल्छ।

मनुष्यको मन नाम-रूपमा फँसेको छ। नाम र रूपको मोह जबसम्म छुट्दैन तबसम्म भक्ति हुन सक्तैन। मन श्रीकृष्णको रूपमा फँसोस् तब मुक्ति पाइन्छ। प्रतिष्ठाको मोह आएको छैन भने भगवान्को ढोकाबाटै फर्कनुपर्छ।

क्रोध गर्नाले सनत्कुमारहरूलाई प्रभुको सातौं ढोकाबाट फर्कनुपऱ्यो, तर उनको क्रोध सात्त्विक थियो। ती द्वारपालहरूले भगवान्को दर्शनमा बाधा खड़ा गरिरहेका थिए, त्यसकारण उनीहरू क्रोधित भए। त्यसकारण भगवान् अनुग्रह गरेर ढोकामा आउनुभयो र सनत्कुमारहरूलाई दर्शन दिनुभयो, तर तिनले भगवान्को राजमहलमा प्रवेश पाउनै सकेनन्।

यहाँ प्रभुले यस चरित्रको समाप्ति गर्दै भन्नुभएको छ— ज्ञानीका निमित्त ज्ञानमार्गमा अभिमान विघ्नकर्ता हो। अभिमानको मूलमा यही क्रोध छ। केही अज्ञानावस्थामा मर्छन् कोही ज्ञानी भएर अभिमानवश भएर मर्छन्। ब्राह्मणलाई शिक्षा भएन भने त्यो अज्ञानी रहन्छ र शिक्षा केही बढ्ता पायो भने कहिलेकहिले अभिमानी भएर पनि मर्दछ।

कर्म-मार्गमा विघ्नकर्ता काम हो। कश्यप र दितिका मार्गमा कामले बाधा पारेको थियो। कामबाट कर्मको नाश हुन्छ।

भक्ति मार्गमा लोभ बाधक बन्दछ। लोभले भक्तिको नाश गर्छ।

ज्ञान-मार्गमा क्रोध विघ्न गर्छ। सनत्कुमारको मार्गमा क्रोधले बाधा पाऱ्यो। क्रोधबाट ज्ञानको नाश हुन्छ।

देह दृष्टिबाट काम उत्पन्न हुन्छ। ज्ञानीका मार्गमा कामले बाधा पार्दैन तर क्रोधले बाधा पार्छ।

यी तीनैको कारण पुण्यको लय ( क्षय ) हुन्छ। विवेकद्वारा काम नष्ट हुन्छ, तर क्रोधलाई नष्ट गर्नु कठिन छ।

एकनाथजी महाराजले भावार्थ रामायणमा लेख्नुभएको छ कामी र लोभीलाई केही तात्कालिक लाभ हुन सक्छ, तर क्रोध गर्नेलाई कहिल्यै केही पनि लाभ हुन सक्तैन, यतिमात्र होइन, उसको पुण्यको क्षय पनि भइहाल्छ।

वल्लभाचार्यजीले यस चरित्रको समाप्तिमा भन्नुभएको छ—

कामेन कर्मनाशः स्यात् क्रोधेन ज्ञाननाशनम्।
लोभेन भक्तिनाशः स्यात् तस्मात् एतत् त्रयं त्यजेत्॥

यसै कारणले गीताजीमा काम, क्रोध, लोभलाई नरकको द्वार भनिएको छ।

त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।
काम क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्॥

( गी० अ० १६ श्लोक २१ )

भक्तिमार्गमा लोभ विघ्नरूप छ। मनुष्यले भगवान्‌का निमित्त अथवा दान दिनका निमित्त सकेसम्म कमसल वस्तुहरूको उपयोग गर्छ। छोरालाई लुगा तयार गर्नुपर्‍यो भने सात या सत्र रुपियाँ मिटर मोलको लुगा ल्याउँछ तर ठाकुरजीको वस्त्र-शृंगार बनाउनु छ भने दुइ-तीन रुपियाँ मिटरवाला लुगा खोज्दछ। एउटा गृहस्थ बजारमा ठाकुरजीका निमित्त फूल लिन जान्छ। माली भन्छ—'गुलाबको फूलको मोल चार आना छ।' तब ग्राहक भन्छ कनेरको फूल देऊ, किनभने मेरा भगवान् भावनाको भोको हुनुहुन्छ तर जब दुलहीले मेरा निमित्त एउटा राम्रो कपालमा लाउनका निमित्त फूलको गजरा ल्याइदिनू भनेपछि धेरै खर्च गरेर पनि त्यसले मन परेको वेणी लिएर आउँछ।

सत्यनारायणको कथा भन्न लाउनु छ भने ऊ दुइ सय पर्ने पीताम्बर लाएर बस्दछ र जब ठाकुरजीलाई वस्त्र परिधान गर्ने वेला आउँछ तब ऊ भन्छ त्यो कलावा ( डोरी विशेष ) कहाँ छ ? त्यही ल्याऊ। भगवान् भन्नुहुन्छ छोरा म सबै कुरा बुझ्छु। म पनि तिमीलाई कुनै एक दिन लँगोटी मात्र लगाइदिनेछु। मैले तिम्रो लँगोटीका निमित्त डोरी राखिछोड़ेको छु।

यसो गर्नु हुँदैन। भगवान्‌लाई उत्तमोत्तम वस्तु अर्पण गर।

'२५२ वैष्णवनकी वार्ता' नामक पुस्तकमा जमनादास भक्तको एउटा दृष्टान्त छ। एक पटक उनी ठाकुरजीका निमित्त फूल लिन बजारमा गए। मालीको पसलमा एउटा राम्रो कमल देखे। उनले सोचे आज आफ्ना ठाकुरजीका निमित्त यही राम्रो कमल लैजाऊँ। त्यसै सयम त्यहाँ एक यवनराज आयो जो वेश्याका निमित्त फूल लिन चाहन्थ्यो। जमनादास भक्तले त्यस कमल-फूलको मोल सोधे तब मालीले भन्यो यसको मोल पाँच रुपियाँ हो। तब यवनराजले बीचैमा भनिदियो—'म यस फूलका निमित्त दस रुपियाँ दिन्छु। तैंले यो फूल मलाई दे।' तब ती जमनादास भक्तले भने—'म पच्चीस रुपियाँ दिन तयार छु, फूल मलाई दिनू।' यस प्रकार फूल लिनका निमित्त दुवैका बीच होड़बाजी पर्न गयो।

यवनराजले दस हजारको बोली गर्‍यो तर भक्त जमनादासले भने एक लाख। वेश्याका निमित्त यवनराजको त्यस्तो कुनै सच्चा प्रेम थिएन, केवल मोह थियो। त्यसले सोच्यो मेरा पास लाख रुपियाँ भयो भने कुनै अर्को स्त्री पनि पाइनै हाल्नेछु तर उतापट्टि जमनादास भक्तका निमित्त ठाकुरजी सर्वस्व हुनुहुन्थ्यो। उनको प्रभु प्रेम सच्चा थियो, शुद्ध थियो। उनले आफ्नो सारा सम्पत्ति बेचिदिए र लाख रुपियाँमा त्यो कमलको फूल किनेर श्रीनाथजीको सेवामा अर्पित गरिदिए। फूल अर्पित गर्नासाथै श्रीनाथजीको सिरबाट मुकुट तल खस्यो। यस प्रकार भगवान्‌ले देखाइदिनु भयो भक्तको यस फूलको तौल मेरा निमित्त कति ज्यादा छ।

सनत्कुमार रिसाए, त्यसकारण उनको पतन भयो। प्रभुको ढोकासम्म पुगेर फर्कनुपर्‍यो।

मन र बुद्धिमा कहिल्यै विश्वास नगर। तिनीहरूले बराबर धोखा दिन्छन्। आफूलाई निर्दोष भन्ठान्नु जस्तो दोष अरू कुनै छैन।

काम, क्रोध भित्रका विकार हुन् ती बाहिरबाट आउने होइनन्। सनत्कुमारहरूको क्रोध बाहिरबाट आएको होइन। अवसर पाउनासाथ यी विकार बाहिर आइहाल्छन्। त्यस कारण मनमाथि सत्संगको, भक्तिको अंकुश राख। निरन्तर ईश्वर चिन्तन गर्नाले भित्रको विकार शान्त हुन्छ।

सनत्कुमारले क्रोधित भएर जय-विजयलाई श्राप दिए राक्षसहरूमा मात्र विषमता हुन्छ। तिमी दुइ जनाका बीचमा पनि विषमता छ। अब तिमीहरू राक्षस भै जाओ।

मन्दिरमा अलिकता पाप गरे पनि महापाप हुन्छ। सनत्कुमारहरूले बैकुण्ठमा क्रोध गरे।

शुकदेवजी सावधान गराउनुहुन्छ—राजन्, यस्तो पाप कहिल्यै नगर्नू।

सनकादिक ऋषिहरूले श्राप दिए दैत्यकालमा तिमीलाई तीनपटक जन्म लिनुपर्छ। भगवान्ले सोच्नुभयो यिनीहरूले मेरा आँगनमै पाप गरेका हुन्, अतः तिनीहरू घरमा आउने पात्र भएनन्। यिनीहरूले अहिलेसम्म क्रोधमा विजय पाएका छैनन्। त्यसकारण यनले मेरो धाममा आउने पात्रता गुमाइसकेका छन्। म बाहिर गएर दर्शन दिई आऊँ।

सनकादिकहरूलाई भित्र प्रवेश मिलेन। यदि तिनीहरू भित्र जानसकेका भए फेरि बाहिर आउने प्रश्नै उठ्दैन। कारण भगवान्को परमधाम हो—''यद्गत्वा न निवर्तन्ते।''

भगवान्ले लक्ष्मीजीलाई भन्नुभयो मलाई लाग्छ बाहिर केही झगड़ा भइरहेछ। दुवै बाहिर आए। ठाकुरजीले सनत्कुमारहरूतिर हेर्नुभएन। आज नजर पृथ्वीतिर छ।

आफूद्वारा गरिएका पापहरूका निमित्त सच्चा हृदयले जीव जबसम्म पश्चात्ताप गर्दैन तबसम्म ठाकुरजी दर्शन दिनुहुन्न।

## अगर खुदा नजर दे तो सब खुदा का है

मानिस आफैंलाई वैष्णव भनाउँछन् तर पाप गर्न छोड्दैनन्। स्वदोष दर्शन—यो ईश्वर दर्शनको फल हो। सनत्कुमार वन्दन गर्नुहुन्छ, तर प्रभुजीले उनीतर्फ हेर्नुभएन। दुवै ऋषि भगवान्सँग क्षमायाचना गरिरहेछन्। प्रभुले भन्नुभयो भूल यिनीबाट भएको हो। तिम्रो अपमान मेरो अपमान हो।

ब्राह्मण भगवान्लाई प्रिय छन् किनभने तिनीहरूले भगवान्को परिचय गराउँछन्। भगवान् भन्नुहुन्छ तपाईंले मेरो भक्ति र ज्ञानको प्रचार गरिदिनुभएको छ। ब्रह्मा, लक्ष्मीभन्दा पनि मलाई मेरा भक्त ज्यादै प्रिय छन्। भगवान् वाणीचतुर हुनुहुन्छ। लक्ष्मीजीले कहीं नराम्रो नमान्नुहोस् भन्दाखेरि फेरि सोचेर उहाँ भन्नुहुन्छ—'यदि भक्त अनन्य नभएका खण्डमा त्यो प्रिय छैन।' लक्ष्मीजीको भक्ति पनि अनन्य छ। उहाँ निष्कामभावले प्रेम गर्नुहुन्छ। अतः उहाँ भगवान्को विशेष प्रिय हुनुहुन्छ। भगवान् भन्नुहुन्छ—'निष्काम भक्ति मलाई अतिशय प्रिय छ। यदि लक्ष्मीजीको भक्ति निष्काम भएन भने मलाई उनी पनि प्रिय लाग्दिनन्।'

चञ्चल लक्ष्मी ठाकुरजीका चरणहरूमा स्थित हुन्छिन्। तुलसी राधाजीको स्वरूप हो। तुलसी विवाहको तात्पर्य जीवात्माकै विवाह हो।

सनकादिक सोचिरहेका छन् हाम्रो प्रशंसा धेरै भइरहेछ तर हामीलाई धामभित्र भने बोलाउँदैनन्। हामीलाई अहिले तपश्चर्या गर्ने आवश्यकता छ। अहिलेसम्म हाम्रो क्रोध नष्ट हुन पाएको छैन। उनीहरू ब्रह्मलोक गएका छन्।

जय-विजयलाई सान्त्वना दिँदै भगवान्ले भन्नुभयो—'तिम्रा तीन अवतार हुनेछन्।'

सनकादिकहरूका श्रापले गर्दा जय र विजय क्रमशः हिरण्याक्ष र हिरण्यकशिपुका रूपमा अवतरित भए।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

दितिको गर्भमा जय-विजय आए। दुइ बालकहरूको जन्म भयो। तिनको नाउँ हिरण्याक्ष र हिरण्यकशिपु रह्यो।

असमयमा गरिएको कामोपभोगले गर्दा दिति—कश्यपकहाँ राक्षसहरूको जन्म भयो। त्यसकारण कामको अधीन नहोऊ। एकादशी, द्वादशी, पूर्णिमा, अमावस्या, जन्मतिथि आदि दिनहरूमा ब्रह्मचर्यको पालन गर।

महाप्रभुजीले यस चरित्रको अन्त्यमा कश्यपको सिरमा तीन दोष आरोपित गर्नुभएको छ—कर्मत्याग, मौनत्याग र स्थानत्याग।

हिरण्याक्ष र हिरण्यकशिपु रोज चार-चार हातभर बढ्दथे। यदि साँच्चै यस्तो हुँदै गयो भने मातापिताको दुर्गतिको कल्पना गर्न सकिन्छ र आपत्तिको पनि केही वास्ता नगरौं भने रोजरोज लुगा सानु हुँदै जाने भयो।

तर यो भागवतको समाधिभाषा हो। भागवतमा समाधि भाषा मुख्य हो र सांसारिक भाषा गौण हो।

यसद्वारा लोभको स्वरूप जनाएको छ। अर्थात् लोभ दिनानुदिन बढ्दै जान्छ। लाभबाट लोभ बढ्छ। विना प्रभुकृपाले लोभको अन्त्य हुँदैन। वृद्धावस्थामा शरीर जीर्ण हुनाको कारणले काम चाहिँ मर्छ तर लोभको नाश हुन पाउँदैन।

लाभबाट लोभ र लोभबाट पाप बढ्छ। पाप बढ्नाले पृथ्वी रसातलमा जान्छिन्। पृथ्वीमुनि मानव-समाज दुःखरुपी रसातलमा डुब्न जान्छ।

हिरण्याक्षको अर्थ हो संग्रह-वृत्ति र हिरण्यकशिपुको अर्थ हो भोग-वृत्ति।

हिरण्याक्षले धेरै कुरा एकत्रित गरे र हिरण्यकशिपुले धेरै कुरा उपभोग गरे।

भोग बढ्दछ भने भोग बढ्नाले पाप बढ्दछ। जबदेखि मानिसले रुपियाँ-पैसाबाट मात्र सुख पाइन्छ भन्ठान्न लागे, त्यस वेलादेखि जगत्मा पाप ज्यादै बढ्न गएको छ। केवल धनबाट सुख पाइन्छ भन्ने कुरा होइन।

हिरण्याक्ष र हिरण्यकशिपुको संहारका निमित्त भगवान्‌ले क्रमशः वराह र नृसिंह अवतार धारण गर्नुभयो। हिरण्याक्ष र हिरण्यकशिपु लोभका अवतार हुन्।

भगवान्‌ले कामलाई मार्नका निमित्त एउटै अवतार लिनुभयो अर्थात् रावण-कुम्भकर्णलाई संहार गर्नका निमित्त रामचन्द्रजीको अवतार भयो। क्रोधलाई मार्नका निमित्त—शिशुपालको वधका निमित्त एक कृष्णावतार भयो। तर लोभलाई मार्नका निमित्त दुइ अवतार लिनुपऱ्यो—वराह र नृसिंहावतार।

काम, क्रोधलाई मार्न एक-एक अवतार मात्र लिनुपऱ्यो तर लोभलाई मार्नका निमित्त दुइ अवतार लिनुपऱ्यो। यसले यही देखाउँछ लोभलाई पराजित गर्ने काम बड़ो दुष्कर हो।

वृद्धावस्थामा धेरै मानिसहरूमा बुद्धिमानी आउँछ, तर जो जवानीमै बुद्धिमान हुन्छ भने त्यही सच्चा बुद्धिमान हो। शक्तिको क्षीण भएपछि कामलाई जित्नु कुनै ठूलो कुरा होइन। कसैले भनेको नमाने पनि यदि बूढ़ाको क्रोध मेटिन्छ भने त्यसमा कुनचाहिँ ठूलो कुरा भयो? तर यो लोभ वृद्धावस्थामा पनि अन्त्यसम्म छुट्न पाउँदैन। लोभलाई मार्न कठिन छ, सत्कर्ममा विघ्नकर्ता लोभ हो। अतः सन्तोषद्वारा त्यसलाई मार्नुपर्छ। लोभ सन्तोषद्वारा मात्र मर्छ। त्यसकारण सन्तोषी बानी बसाल।

लोभ आदिको प्रसारबाट पृथ्वी दुःखरूपी सगरमा डुबेकी थिइन्। त्यसकारण भगवान्‌ले वराह अवतार लिएर उनको उद्धार गर्नुभयो। वराह भगवान् सन्तोषका अवतार हुनुहुन्छ।

वराह अवतार यज्ञावतार हुन्। वर + अह वर अर्थात् श्रेष्ठ र अहको अर्थ हो दिन। कुनचाहिँ दिन श्रेष्ठ छ? जुन दिन तिम्रो हातबाट सत्कर्म हुन्छ, त्यही दिन श्रेष्ठ हो। श्रेष्ठ काम गर्नाले दिन पनि श्रेष्ठ हुन्छ। जुन कामबाट प्रभु प्रसन्न हुनुहुन्छ, त्यही सत्कर्म हो। सत्कर्मलाई मात्र यज्ञ भन्छन्।

हिरण्याक्ष सत्कर्ममा विघ्नकर्ता हो। मनुष्यका हातहरूमा सत्कर्म हुँदैन किनभने उसलाई लाग्छ प्रभुले उसलाई धेरै थोक दिनुभएको छ। हिरण्याक्ष लोभको स्वरूप हो।

समुद्रभित्र डुबेकी पृथ्वीलाई वराह भगवान्‌ले बाहिर निकाल्नुभयो तर उसलाई आफ्ना साथमा राख्नुभएन। उहाँले पृथ्वी मनुलाई अर्थात् मनुष्यलाई सुम्पिदिनुभयो। जति आफ्नो हात परेको थियो सो सबै अरूलाई दिनुभयो। यही सन्तोष हो।

वराह भगवान् यज्ञको दृष्टान्तरूप हुनुहुन्छ। यज्ञ गर्नाले चित्त शुद्धि हुन्छ। लोभ आदिलाई नाश गरेर चित्त शुद्धि गर्नुपर्छ। चित्त शुद्धि भयो भने कपिलमुनिको अर्थात् ब्रह्मविद्याको प्राप्ति हुन्छ।

यज्ञपूर्वक जीवन बितायो भने ज्ञान पाइन्छ। यज्ञावतारविना मनको शुद्धि हुँदैन र मन शुद्धि या चित्त शुद्धिको विना ज्ञान पाइँदैन। ज्ञानावतार पनि हुँदैन र कपिलदेव पनि आउनुहुन्न। अज्ञानलाई हटाउने काम वराह अवतारको हो भन्दछन्। अज्ञान हटाउनलाई विरोध गर। सत्यभाषण पनि यज्ञ हो। यज्ञ गऱ्यौ भने कपिल भगवान्‌को ब्रह्मविद्या बुद्धिमा स्थिर हुनेछ।

कर्म चित्तशुद्धिका निमित्त हो। भक्ति मनको एकाग्रका निमित्त हो। कर्म, उपासना र ज्ञान तीनै थोकको जीवनमा आवश्यकता छ। कर्मबाट चित्त शुद्धि भएर पछि ब्रह्मजिज्ञासा जाग्दछ।

श्री शङ्कराचार्य भन्नुहुन्छ—'मानिस त्वचाको मीमांसा धेरै गर्छन् तर आत्माको मीमांसा कोही गर्दैनन्'।

हिरण्याक्षलाई स्वर्गबाट सम्पत्ति ल्याउने इच्छा भयो। दिन प्रतिदिन उसको लोभ बढ्दै जान थाल्यो। एकपटक ऊ पातालमा गयो। त्यहाँ उसले वरुणसँग लड्न खोज्यो।

वरुणले भने—'तिमी वराह नारायणसँग युद्ध गर।'

हिरण्याक्षले वराह भगवान्कहाँ आएर भन्यो—'तिमी सुँगुरजस्ता छौ।' तब वराह नारायणले उसलाई भन्नुभयो 'तँ कुकुर जस्तो छस्।' यत्तिकैमा कुरा चर्कियो।

सबै पापहरूको मूल वाणी हो। वाणी दोष भएमा वीर्य दूषित हुन्छ। नबोलीकन पाप हुँदैन। पहिले मनबाट उच्चारण भएपछि पाप हुन्छ।

मुष्टि प्रहार गरेर वराह भगवान्ले हिरण्याक्षको संहार गरेर पृथ्वीको राज्य मनु महाराजलाई सुम्पिदिनुभयो। मनुलाई भगवान्ले भन्नुभयो—'धर्मपूर्वक पृथ्वीको पालन गर्नू।' त्यस पछि वराह बद्रीनारायणको स्वरूपमा लीन हुनुभयो।

मनुष्यमात्रको धर्म हो समाजलाई सुखी तुल्याउनु, यो आदर्श वराह भगवान्ले आफ्नै आचरणद्वारा मनुष्यहरूलाई सिकाउनुभयो।

लोभलाई मार्नका निमित्त वराह नारायणका चरणहरूको आश्रय लेऊ। वराहको चरण सन्तोषको स्वरूप हो।

मानिसका जीवनमा जबसम्म लोभ हुन्छ तबसम्म पाप रहन्छ। पाप जबसम्म रहन्छ तबसम्म शान्ति प्राप्त हुन सक्दैन। जसको जीवन निष्पाप हुन्छ, त्यसलाई शान्ति मिल्दछ।

केवल अर्थोपार्जनका निमित्त बुद्धिको उपयोग नगर। त्यसको उपयोग ईश्वरोपासनाका निमित्त गर। अन्यथा तल उल्लिखित जौहरीको जस्तै तिम्रो दशा पनि हुनेछ।

एक पटक कुनै राजाको दरबारमा एउटा जौहरी आयो। त्योसँग एउटा हीरा थियो। त्यस हीराको मोल कायम गर्न धेरै जौहरीहरूलाई बोलाइयो। सबैले भिन्ना-भिन्नै दाम लगाए। राजा निराश भए। यत्तिकैमा एउटा बूढो जौहरी आइपुग्यो। उसले हीराको मोल उनान्सय लाख रुपियाँ भन्यो। तब राजाले सोधे—'पूरा एक करोड़ रुपियाँ किन नभनेको।' तब त्यस वृद्ध जौहरीले अरू सयवटा हीरा झिकाएर त्यस हीराको नजीकमा राखिदियो। तब त्यस हीराको तेज उनान्सय हीरामाथि पऱ्यो तर एउटामा परेन। वृद्ध जौहरीले भन्यो—'यही कारण हो मैले एक लाख कम भनेको।'

यो जौहरी कति बुद्धिमान् रहेछ भन्ने कुरा राजालाई लाग्यो। उनले भने—'मन्त्रीजी, यिनलाई केही पुरस्कार देऊ।' तब त्यहाँ बसेका एक महात्माले भने—'यस जौहरीको टाउकामा धूलो हाल।' महात्मासँग यस्तो विचित्र प्रस्तावको कारण सोधियो।

महात्माले भने—'यस जौहरीले आफ्नो बुद्धिको उपयोग केवल ढुङ्गाहरूको विचार गर्नलाई गरेको हो, ईश्वरको भजन गर्नका निमित्त गरेन। जुन बुद्धिको उपयोग त्यसले केवल ढुङ्गाहरू हेर्न र जाँच्नमा गऱ्यो, त्यही उसले ईश्वरलाई चिन्नमा गरेको भए उसको उद्धार भइहाल्थ्यो। तपाईं यस जौहरीलाई चतुर मान्नुहुन्छ, तर म उसलाई मूर्ख मान्दछु।'

हिरण्याक्षको मृत्यु होला अनि पाप मर्ला र तब ब्रह्म-विद्याको ज्ञान बुद्धिमा स्थायी होला। बुद्धि निष्काम भएपछि मात्र ब्रह्मज्ञान स्थायी हुन सक्छ।

मानिसका शरीरमा नौ प्वाल छन्, जहाँबाट ज्ञान बाहिर निस्कन्छ। इन्द्रियहरूद्वारा ज्ञान बाहिर निक्लन नसकोस् भन्नाखातिर इन्द्रियहरूको विरोध गर र तिनलाई प्रभुका मार्गतर्फ फर्काइदेऊ।

तृतीय स्कन्धमा दुइ प्रकरण छन्—पूर्वमीमांसा र उत्तरमीमांसा।

पूर्वमीमांसा वराह नारायणको अवतारको कथा छ, उत्तरमीमांसामा कपिल नारायणको चरित्रको वर्णन छ। यज्ञ नगरिकन कपिल नारायणको विद्या-बुद्धिमा स्थिरता आउँदैन।

मन, वचन र कायाबाट कसैलाई पीड़ा नदिनु पनि यज्ञ हो। जो बिनाकारण मन पकाउँछ, त्यसले आत्मघात गरिरहेछ। सदासर्वदा प्रसन्न हुनु पनि यज्ञ हो।

यज्ञ नगरिकन सत्कर्मविना चित्त शुद्धि हुँदैन र चित्त शुद्धिविना ज्ञान टिक्दैन। सत्कर्मबाट सबै इन्द्रियहरू शुद्ध हुनेछन्। जसको मन कलुषित छ, त्यसलाई परमात्माको अनुभव हुन सक्दैन।

मानव शरीर एउटा गाग्रो हो। यसमा नौवटा प्वाल छन्। यदि गाग्रो प्वाल परेको छ भने त्यो कहिल्यै पनि भरिन सक्तैन। हरएक प्वालबाट ज्ञान बगेर जान्छ। ज्ञान प्राप्त हुन कठिन छैन। ज्ञान आउँछ तर त्यो रहन सक्दैन। विकार वासनाको वेगमा त्यो कति पटक बग्दछ।

सबैको आत्मा ज्ञानमय छ। अज्ञानी कोही पनि छैन, तर ज्ञानलाई सदा कायम राख्नका निमित्त इन्द्रियहरूद्वारा बगेर गइरहेको बुद्धि शक्तिलाई रोक्नु छ। ज्ञानीले इन्द्रियहरूलाई विषयतर्फ जान दिँदैन, उता वैष्णव इन्द्रियहरूलाई प्रभुको मार्गतर्फ घुमाउँछ।

ज्ञान टिक्न पाउँदैन किनभने मानिसको जीवन विलासी भएको छ। साराका सारा ज्ञान पुस्तकमा मात्र परिरहेछ। गिदीभित्र पस्दैन।

जो पुस्तकपछि लाग्छ, त्यो विद्वान् हो र भक्तिपूर्वक परमात्मापछि दौड़ने सन्त हो। विद्वान् शास्त्रका पछि दगुर्छ र उता शास्त्र सन्तका पछि दगुर्छ। शास्त्र पढ़ेर जो बोल्न सक्छ, त्यो विद्वान् हो। प्रभुलाई प्रसन्न पारेर उनैमा पागल भएर जो बोल्छ, त्यो सन्त हो।

गीतामा अर्जुनलाई भगवान्ले भन्नुभएको छ—अर्जुन, ज्ञान तिमीमै छ। हृदयमा सात्त्विक भाव जागोस्, मन शुद्ध होस् तब हृदयभित्रबाट ज्ञान स्वयं प्रकट हुन्छ।

मीराबाईले आफ्नो भजनमा कहीं पनि लेखेको छैन उनका कोही गुरु थिए वा कसैको घरमा उनी शास्त्र पढ्न भनेर गएकी थिइन्।

हृदयमा स्थित भएको लोभलाई मार्नाले कपिल भगवान् स्वयं आउनुभयो।

ज्ञानको शत्रु हो हिरण्याक्ष। भागवतमा उल्लेख गरिएका अवतारहरूको क्रममा पनि रहस्य छ। ज्ञानलाई बुद्धिमा स्थिर गर्नु छ र हिरण्याक्षलाई मार्नु छ। पहिले हिरण्याक्षलाई मारेपछि अनि कपिल भगवान् आउनुहुन्छ।

आफ्नो मनसँग प्रश्न गर प्रभुबाट जो सुख-सम्पत्ति मैले पाएको छु, त्यसका निमित्त म पात्र पनि छु कि छैन। उत्तर नकारात्मक हुनेछ। लोभलाई सन्तोषले मार। ज्यादा पाउने इच्छा नगर। पाप यस निमित्त हुन्छ मनुष्य मान्दछ प्रभुले मलाई जो दिएको छ त्यो धेरै थोरै छ। पाप नभएका खण्डमा इन्द्रियहरूको शुद्धि हुनेछ र तब इन्द्रियहरूमा ज्ञान भक्ति टिक्न पाउनेछ। यज्ञादि सत्कर्मबाट चित्त शुद्धि हुन्छ। यसपछि ब्रह्मज्ञान बुद्धिमा टिक्न पाउँछ।

पूर्वमीमांसापछि यस उत्तरमीमांसाको आरम्भ हुन्छ। उत्तरमीमांसामा ज्ञान-प्रकरण छ। कपिलमुनि ज्ञानको अवतार हुनुहुन्छ।

स्वयम्भू मनुकी रानीको नाउँ शतरूपा थियो। मनु महाराजका दुइ पुत्र थिए—प्रियव्रत र उत्तानपाद। तीन कन्याहरू पनि थिए—आकुति, देवहूति तथा प्रसूति। आकुतीको रुचिसँग, देवहूतिको कर्दमसँग र प्रसूतिको दक्षसँग विवाह भयो।

कर्दम ऋषि र देवहूतिको घर कपिल भगवान् आएका थिए।

विदुरजी प्रश्न गर्छन्—'मैत्रेयजी, तपाईं कर्दम र देवहूतिका वंशको कथा भन्नुहोस्। कपिल भगवान्को यस कथालाई सुन्ने मेरो इच्छा छ।'

मैत्रेयजी भन्नुहुन्छ—'कपिल ब्रह्मज्ञानको स्वरूप हुनुहुन्छ। कर्दम बन्यौ भने तिम्रो घरमा कपिल आउनु हुनेछ। कर्दम अर्थात् इन्द्रियहरूलाई दमन गर्ने ब्राह्मण, कर्दम अर्थात् जितेन्द्रिय। जबसम्म मानिस कर्दम बन्न सक्दैन तबसम्म त्यसले कपिल भेट्दैन। शरीरमा सत्त्वगुणको वृद्धि भयो भने स्वयं ज्ञानको झरना फुट्छ र ज्ञान प्रकट हुन्छ।'

शरीरमा सत्त्वगुणको वृद्धिबाट ज्ञान प्राप्त हुन्छ। शुद्ध आहार, शुद्ध आचार र शुद्ध विचारबाट सत्त्वगुणको वृद्धि हुन्छ। सत्त्वगुणको बढ्यो भने ज्ञान पाइन्छ। सत्त्वगुण बढ्दछ संयमबाट, सदाचारबाट। सत्त्वगुण बढ्नाले भित्रबाट ज्ञानको प्रस्फुरण हुन्छ। जिब्रो सुध्रिनाले जीवन सुध्रिन्छ। जिब्रोले जे कुरा माग्छ, त्यो सबै उसलाई नदेऊ। सुतेपछि दुइ चार मिनटमै निद्रा आइहाल्नेछ भन्ने ठानेमा मात्र सुत्नुपर्छ। सुतेपछि छिट्टै निद्रा आएन भने जीवले काम-सुखको चिन्तन गर्न थाल्छ। अगाडि कथा आउनेछ घर-काज गरेपछि गोपिनीहरू कृष्ण-कीर्तन गर्दथे।

जीवन सात्त्विक बनाऊ।

जितेन्द्रिय बन्नका निमित्त सरस्वतीका किनारामा बस्नुपर्छ। सरस्वतीको किनारा सत्कर्मको किनारा हो। यमुनाजी भक्तिस्वरूपा हुन्, गङ्गा ज्ञान र सरस्वती सत्कर्मस्वरूपा हुन्।

शुकदेवजी राजर्षिलाई सुनाउनुहुन्छ—'राजन्, कर्दम ऋषि सारा दिन तप गर्नुहुन्थ्यो। उहाँको तपबाट भगवान् प्रसन्न हुनुभयो। भगवान् ऋषिको घर आउनुभयो। विदुरजीको घर द्वारिकानाथ पनि जानुभएको थियो।'

भगवान् श्रीकृष्ण हरकिसिमबाट उदार हुनुहुन्छ, तर समय दिनुमा उदार हुनुहुन्न। सुवर्णको अपेक्षा समयलाई ज्यादा मूल्यवान् मान। लक्ष्यलाई लक्ष्यमै राख्यौ भने जीवन सफल हुनेछ। विनालक्ष्यको मानिस विनाबहनाको नाउजस्तै हुनेछ।

कर्दम जितेन्द्रिय महात्मा थिए। उनको तपश्चर्या सफल भयो। उनका सामुन्ने भगवान् प्रकट हुनुभयो। सिद्धपुरको नजीक कर्दम ऋषिको आश्रम थियो। उनले ठूलो तपश्चर्या गरे। शरीरमा केवल हाड़मात्र बाँकी रह्यो। यस्तो कठोर तपस्याबाट भगवान् प्रसन्न हुनुभयो। आँखाहरूबाट हर्षाश्रु निस्किए। तिनै आँसुहरूद्वारा विन्दुसरोवर बन्यो। सिद्धपुरको यात्रा गर्दा यस विन्दु-सरोवरमा स्नान गर्नुपर्छ।

तिमीले पनि धेरै ध्यान गर्‍यौ भने भगवान् तिमीउपर पनि प्रसन्न हुनुहुनेछ र तिमीलाई दर्शन पनि दिनुहुनेछ। भगवान्‌को ध्यान हुन नसके केही कुरा छैन तर सावधान होऊ तिम्रो मन कहीं सांसारिक विषयहरूमा स्थिर नहोस्। आँखारूपी रत्नको जतन गर। आँखाको शक्तिको दुर्व्यय नगर।

संसारको सौन्दर्य क्षणिक छ।

धन-सम्पत्ति बढ़ेपछि मानिसमा विवेकको अभाव हुन थाल्छ। एक भाइ भेटिए। उनले भने—'काश्मीर सुन्दर प्रदेश छ। हेर्ने इच्छा छ भने मसँग हिँड्नुहोस्।'

जगत्‌को कुनै पनि वस्तु सुन्दर छैन। आँखाहरूमा विकार हुनाको कारण वस्तु राम्रो लाग्दछ मानिस सौन्दर्यका पछि पागल हुन्छ। तर जुन व्यक्तिको सौन्दर्यमा त्यो पागल भएको छ, उसको मुख यदि माईको दागले बिग्र्यो भने त्यसलाई हेर्न पनि मन लाग्दैन।

शरीरको होइन, हृदयको सुन्दरतालाई हेर। जगत्‌को अपेक्षा जगत्‌को सृष्टिकर्ता ज्यादा सुन्दर हुनुहुन्छ।

मानिस काश्मीरको सौन्दर्य हेर्न जान्छन्। तर त्यस काश्मीरलाई बनाउनेवाला मेरा श्यामसुन्दर कति धेरै सुन्दर हुनुहोला?

श्रीकृष्ण सुन्दर हुनुहुन्छ, यस्तो बारम्बार विचार गर्नाले भक्तिको उदय हुन्छ। एउटै ईश्वर मात्रै नित्य सुन्दर हुनुहुन्छ।

कृष्णजीको दर्शन गर्नाले आँखा सफल हुन्छ। कर्दम भन्छन्—'महाराज तपाईंको दर्शन गर्नाले मेरा आँखाहरू सफल भएका छन्। तपाईंलाई भेट्टाएपछि संसारको माग गर्ने मानिस मूर्ख हो। संसारको जुन सुखको भोग नरकमा कीरा पनि गर्छन्, त्यस्तो सुखको इच्छा परमात्मासँग गराउन खोज्नेभन्दा मूर्ख को होला ?'

लौकिक कामसुखको इच्छापूर्तिका निमित्त श्रीकृष्णको आराधना गर्ने मानिस तुच्छ हो।

कर्दमले भगवान्सँग भने—'तपाईंसँग स्त्रीसङ्ग होइन, सत्सङ्गको इच्छा गर्छु। मलाई यस्ती स्त्री दिनुहोस् जसले मलाई प्रभुतर्फ डोऱ्याओस्। यस्ती पत्नी मलाई मिलोस् जब कुनै वेलामा मेरो मनमा पाप आयो भने त्यसले मलाई त्यस पाप कर्मबाट रोकोस् र प्रभुको बाटोमा लैजाओस्। मेरो विवाह संसारसागरमा डुब्नका निमित्त होइन बरु पौड़ी खेल्नलाई होस्। कृष्णसेवा महान् धर्म हो। म काम-सुख माग्दिनँ। शास्त्रमा पत्नीलाई कामपत्नी होइन धर्मपत्नी भनिएको छ। ब्रह्माजीले मलाई विवाह गर्ने आज्ञा दिनुभएको छ। म पत्नी होइन, घरमा सत्सङ्ग चाहन्छु। स्त्रीसङ्ग काम-सङ्ग होइन, सत्सङ्ग हो। धर्मको आचरणका निम्ति पत्नी हो।'

एक्लो पुरुष या एक्ली स्त्री धर्म मार्गमा अगाड़ि बढ्न सक्तैनन्। माझीविना एक्लो नाउले संसारसागरलाई पारी तार्न सक्तैन। माझी पनि एक्लै संसार-सागर तर्न सक्तैन।

स्त्री नाउ हो, पुरुष माझी। दुवैलाई एक-अर्काको सहायता चाहिन्छ। पुरुषहरूमा विवेक हुन्छ र स्त्रीमा स्नेह। विवेक र स्नेहका मिलनबाट भक्ति प्रकट हुन्छन्। पुरुष कमाउन सक्छ। पुरुष ज्ञानस्वरूप हो। स्त्रीको हृदय कमलो हुनाको कारणले त्यो समर्पण गर्छे। स्त्री क्रियाशक्ति हो।

धेरै जनालाई आश्चर्य होला कर्दमले यति धेरै तपस्या गरेर पनि भगवान्सँग मुक्ति किन नमागेको ? कर्दमले सोचे हजारौं जन्महरूका कामवासनाहरू सुषुप्त रीतिबाट मनमा जम्मा भएका हुन्छन्, तिनलाई सन्तुष्ट गरेर मानिसमा जो तीन प्रकारका ऋण छन्, तिनबाट मुक्त हुनु असल हो र त्यसपछि मुक्तिको इच्छा गर्नुपर्छ।

भगवान्ले भन्नुभयो—'दुइ दिनपछि मनु महाराज तिमीकहाँ आउनुहुनेछ र आफ्नी छोरी देवहूति तिमीलाई दिनुहुनेछ।' परमात्माले आज्ञा दिनुभयो—'मनु महाराज कन्या लिएर आएमा नखरा नगर्नू। आजकलका मानिस मलाई विवाह गर्नु छैन भनेर नखरा गर्छन्।'

*पति-पत्नीले पवित्र जीवन बिताए भने उनीहरूकहाँ जन्म लिने भगवान्को इच्छा हुन्छ।*

भगवान्ले भन्नुभयो—'म पुत्ररूपबाट तिमीकहाँ आउनेछु। जगत्लाई मैले सांख्यशास्त्रको उपदेश दिनु छ।' यस्तो भनेर श्रीहरि त्यहाँबाट विदा हुनुभयो।

नारदजी मनु महाराजकहाँ आएर उनलाई भने—'तिमीले कर्दमलाई कन्यादान देऊ।'

मनु महाराज शतरूपा र देवहूतिका साथ कर्दम ऋषिका आश्रममा आए।

कर्दमले देवहूतिको विवेकको परीक्षा लिए। उनले तीन आसन दिए। सबैलाई बस्न भने तब मनु र शतरूपा बसिहाले तर देवहूति बसिनन्। तब कर्दमले उनलाई भने—'देवी, यो तेस्रो आसन तिम्रै निमित्त हो, बस।'

देवहूतिले सोचिन् भविष्यमा यी मेरा पति हुनेवाला छन्। पतिद्वारा ओछ्याइएको आसनमा बसौं, पाप लाग्ला। यस आसनमा बस्नु मेरो धर्म होइन र आसनमा नबस्दा पनि आसन दिनेको अपमान हुनेभो। त्यसकारण आफ्नो दाहिने हात आसनमा राखेर आसनको नजीक उनी बसिन्।

ती बिचरी पुरानो जमानाकी थिइन्, आजकलकी भएको भए आसनमा पहिल्यै बसिहाल्थिन्। आज तर पत्नीले पतिलाई छोरालाई झोलुंगोमा हालेर हल्लाऊ भन्छन्। सन्तानलाई दुलहाको जिम्मा लाएर आफू एक्लै घुम्न फिर्नलाई निस्कन्छन्। यस्तो नगर।

आर्यनारीको साँचो संस्कार हिजोआज बिर्सिंदै गइरहेछ। आज कन्या परीक्षाको रीति पनि बदि्लएको छ।

कर्दमले सोचे कन्या योग्य छिन्, विवाह गर्नमा केही हर्जा छैन।

मनु महाराजले भने, 'यी कन्या तपाईंलाई अर्पण गर्न चाहन्छु।'

कर्दम ऋषिले भने—'विवाह गर्ने इच्छा मेरो पनि छ, तर पहिले एक प्रतिज्ञा गर्नु छ। मेरो विवाह विलासको निमित्त होइन, कामको नाश गर्नका निमित्त हुनेछ।'

विवाहको प्रयोजन कामविकास होइन, कामविनाश हो। काम भावलाई एकै ठाउँमा संकुचित गरेर कामको उपयोग गरी त्यसको विनाश गर्नु साँचो गृहस्थाश्रमको आदर्श हो।

कर्दम ऋषिले भने—'मेरो विवाह कामको विनाशको निमित्त हो। काम कृष्णमिलनमा विघ्नकर्ता हुन्छ, त्यसै कामलाई मैले मार्नु छ। एक पुत्र नभएसम्म लौकिक सम्बन्ध बनाइराख्नेछु, एक पुत्र भएपछि लौकिक सम्बन्धको त्याग गर्नेछु र संन्यास लिइहाल्नेछु।'

कन्यादानको मन्त्रमा लेखेको छ—सन्तत्या इति एक वचनम्। सन्ततिभिः यस्तो भनेको छैन। वंशको रक्षा गर्नका निमित्त एउटै पुत्रका निमित्त कन्यालाई अर्पित गर्छु। शास्त्रले पहिलो पुत्रलाई मात्र धर्मपुत्र भनेको छ। अरू सबै पुत्र कामजपुत्र हुन्। कामाचरणका निमित्त होइन, धर्माचरणका निमित्त विवाह हो। पिता-पुत्रसँग भन्छन् 'त मेरो आत्मा होस्।' एक पुत्र भएपछि पत्नी आमासमान हुन्छिन्।

काम ईश्वरको जस्तै व्यापक हुन चाहन्छ। जहाँ सुन्दरता देखिन्छ, त्यहीं काम उत्पन्न हुन्छ। उसलाई एउटै स्त्रीमा सँगालेर नाश गर्नका निमित्त विवाह गर्नु छ।

विवाहका समयमा 'सावधान' भनिन्छ किनभने सबैलाई थाहा छ विवाहका पछि ऊ सावधान रहँदैन। विवाहको पछि सावधान जो रहन्छ, त्यसैले जित्दछ अथवा जो पहिल्यैदेखि सावधान हुन्छ, उसैले जित्दछ।

रामदास स्वामी विवाह अगावै सावधान भइसकेका थिए। विवाह-मण्डपमा पूरोहितले 'सावधान-सावधान' भने र उनी सावधान भएर मण्डपबाट भागेर गए।

भोगविना रोग हुँदैन। पूर्वजन्मको पापको कारण पनि केही रोग हुन जान्छ तर केही रोग यस जन्मका भोग-विलासका कारणले हुन्छन्। 'भोग-रोगभयम्'। भोगोपभोगमा रोगहरूको भय हुन्छ। भोग बढ्नाले आयुष्यको क्षय हुन्छ। हामी भोगको उपभोग गर्न पाउँदैनौं, भोगले हाम्रो उपभोग गरेर लैजान्छ।

जबदेखि दुलहा मोटरमा बसेर बिहा गर्न जान थालेका छन् तबदेखि घरसंसार बिग्री सकेको छ। आजका दुलहालाई घोड़ाबाट खस्ने डर लाग्छ। त्यसलाई सोध त एउटै घोड़ाले तिमीलाई खसालिदिन्छ भने ती एघार घोड़ाले तिम्रो के दशा गर्लान्? एउटा घोड़ालाई अंकुसमा राख्न सकेनौ भने ती एघार घोड़ाहरूलाई कसरी अंकुसमा राख्न सकौला? एघार इन्द्रियहरू भनेका एघार घोड़ा हुन्। जितेन्द्रिय हुनलाई विवाह गर्नु छ। आज हामीले विवाहको कारण बिर्सेका छौं।

कर्दम ऋषिले एउटा आदर्श देखाए मेरो विवाह एक सन्तपुत्रका निमित्त हो। त्यसपछि म संन्यास लिन्छु। मेरो यो प्रतिज्ञा तपाईंकी छोरीलाई मान्य भएमा म विवाह गर्न तयार छु।

मनु महाराजले छोरीलाई भन्नुभो—'यी विवाहका समयमै सन्यासको कुरा गर्न थालेका छन्।'

तर देवहूति पनि असाधारण थिइन्।

देवहूतिले भनिन्—'मलाई यस्तै पतिको आवश्यकता थियो, कामान्ध भएर संसारसागरमा डुब्नका निमित्त गृहस्थाश्रम होइन। मेरो यस्तै इच्छा थियो मलाई कोही जितेन्द्रिय पति पाइयोस्।'

देवलाई बोलाउने शक्ति भनेकै देवहूति हो। निष्काम बुद्धिले मात्र देवलाई बोलाउन सक्छे।

मनु महाराजले विधिपूर्वक कन्यादान गरिदिए। देवहूति-कर्दमको विवाह भइगयो। देवहूति कर्दमको आश्रममा बस्न थालिन्। उनले सोचिन् मेरा पति तपस्वी छन्, त्यसकारण मैले पनि तपस्विनी हुनुपर्ला। ती दुइजना एउटै घरमा बसे पनि संयमी र निर्विकार भएरै रहे।

दक्षिण प्रदेशमा आजभन्दा एघार सय वर्षपहिले वाचस्पति मिश्र नाउँका ऋषि भएका छन्। षड्शास्त्रहरूमा उनले टीकाहरू लेखेका छन् जो आज पनि प्रख्यात छन्।

उनी सारा दिन तपश्चर्या र ग्रन्थ-लेखनमा बिताउँथे। विवाह भएपछि छत्तीस वर्ष बितिसक्यो, तर उनी यो पनि जान्दैनथे उनकी पत्नी कुन हुन्? छत्तीस वर्ष सँगसँगै बसे पनि उनले आफ्नी पत्नीलाई चिन्न सकेका थिएनन्।

एक दिन उनी ब्रह्मसूत्रको शाङ्करभाष्यमा टीका लेखिरहेका थिए। तर एक पङ्क्ति अलि राम्री लेखिन लागेको थिएन। बत्ती पनि अलि मधुरो भइरहेको थियो, त्यसकारण राम्ररी

देखिँदैनथ्यो। उनकी दुलहीले बत्ती केही उकासिरहेकी थिइन्। यत्तिकैमा वाचस्पतिको नजर उनमा पऱ्यो र उनले सोधे—'देवी, तिमी को हौ?'

विवाह भएको छत्तीस वर्ष भयो र पनि उनले आफ्नी पत्नीलाई चिन्दैनथे। कति संयमी र जितेन्द्रिय हुँदा हुन् तिनी !

पत्नीले सोधिन्—'कहिले तपाईंको विवाह भएको थियो, त्यो संझना छ?'

वाचस्पतिले भने—'अँ, केही-केही संझना भइरहेछ।'

पत्नीले भनिन्—'मसँग तपाईंको विवाह भएको थियो। म तपाईंकी दासी हुँ। आजभन्दा छत्तीस वर्षअघि हाम्रो विवाह भएको थियो।'

पत्नीले विवाहको संझना गराइदिइन् तब वाचस्पतिका मनमा प्रकाश जाग्यो र उनले दुलहीलाई भने—'तिमीसँग मेरो विवाह भएको छ। छत्तीस वर्ष तिमीले मौन बसेरै मेरो सेवा गऱ्यौ। तिम्रो उपकार अनन्त छ। तिम्रो के इच्छा छ?'

पत्नी भामतिले भनिन्—'नाथ, मेरो त केही पनि इच्छा छैन। तपाईं जगत्‌को कल्याणका निमित्त शास्त्रहरूका टीकाहरू रच्नुहुन्छ। म तपाईंको सेवा गरेर कृतार्थ भएकी छु। तपाईंको सेवा गर्दा-गर्दै मेरो मृत्यु होस्।'

वाचस्पति मनभरि भए। पत्नीलाई एकपटक फेरि केही माग भने, तर उनले केही मागिनन्।

वाचस्पति—'देवी, तिम्रो नाउँ के हो?'

*भामति*—'यस दासीलाई सबैजना भामति भन्छन्।'

वाचस्पति—'म शाङ्करभाष्यमा जो टीका लेखिरहेछु त्यसको नाउँ, 'भामति-टीका' राख्नेछु।' आज पनि वाचस्पतिको त्यो टीका 'भामती-टीका'-को नाउँले प्रसिद्ध छ।

यस्तो थियो हाम्रो भारतवर्ष। एकै घरमा छत्तीस वर्षसम्म साथ-साथ बसेर पनि संयमको पालन उनीहरूले गरेका थिए। यस्तै संयमीलाई मात्र ज्ञान पाइन्छ। ज्ञान बजारमा पाइँदैन। आजकल पुस्तकहरूद्वारा ज्ञानको प्रसार र प्रचार धेरै भइरहेछ, तर कुनै पनि व्यक्तिको गिदीमा ज्ञान देखिँदैन।

पूर्ण संयमविना ज्ञान पाउन सकिँदैन, पूर्ण संयमविना परमात्मा पनि प्रकट हुनुहुन्न।

एकै घरमा बसेर पनि कर्दम-देवहूतिले बाह्र वर्षसम्म र वाचस्पति-भामतिले छत्तीस वर्षसम्म संयमको पालन गरे। आजकलका मानिस छत्तीस घण्टा पनि संयमित बस्न सक्दैनन्।

कर्दम जीवात्मा हो र बुद्धि देवहूति हुन्। देवहूति देवलाई बोलाउने निष्काम बुद्धि हुन्। एक दिन कर्दमले देखे देवहूतिको शरीर बहुतै दुर्बल भएको छ। उनले मेरा सेवा गर्दागर्दा आफ्नो शरीर सुकाइदिएकी छन्। यो देखेर उनको मन पग्लियो। उनले देवहूतिलाई भने—'देवी केही वरदान माग। तिमी जे माग्छ्यौ म दिन्छु।'

देवहुतिले भनिन्—'तपाईं जस्तो ज्ञानी पति मैले पाएकी छु, यही वरदान हो। म पूजा गरेर यही मात्र माग्दछु मेरो सौभाग्य अखण्डित रहोस्।'

पहिलो पेट हो या पेटका दाता परमात्मा ?

स्त्रीको धर्म हो सधैं उसले तुलसी र पार्वतीको पूजा गरोस्, आजका स्त्रीले तुलसीको पूजा गर्दा होलान्, तर चिया-नाश्ता गरेपछि मात्र।

यो सुनेर कर्दमले भने—'केही न केही तिमीले माग्नै पर्छ।'

पतिको आग्रह भएपछि देवहूतिले भनिन्—'तपाईंले प्रतिज्ञा गर्नुभएको थियो एक सन्तान भएपछि म संन्यास लिनेछु। अब यदि इच्छा छ भने एउटा बालकको दान मलाई दिनुहोस्।'

मनुष्यशरीरको रचनै यस्तो छ त्यसले भोगहरूको मर्यादित प्रमाणमै उपयोग गर्न सक्छ। मर्यादाको उल्लङ्घन गऱ्यो भने त्यो रोगी हुन्छ। कर्दमले भने—'म तिमीलाई दिव्य शरीर अर्पित गर्नेछु।'

देवहूति सरस्वती किनारमा स्नान गर्न गइन्। सरस्वतीबाट अनेक दासीहरू निक्लिए। देवहूतिले स्नान गरिन् र उनको शरीर बद्लियो। कर्दम ऋषिले सङ्कल्पका बलले विमान बनाए र दुवै त्यसमा बसे।

कथामा शान्त रस र करुणरस प्रधान छ। शृङ्गार र हास्य रस गौण छ। कथामा शृङ्गार रसको वर्णन गर्ने आज्ञा महात्माहरूले दिएका छैनन्।

श्रोताहरूलाई संसारका विषयहरूप्रति अरुचि होस् र ईश्वरका प्रति प्रेम होस्, यो लक्ष्य राखेर वक्ताले कथा गर्नुपर्छ।

कथा श्रवणपछि विषयहरूका प्रति अरुचि र ईश्वरका प्रति रुचि नभए सम्झ कथा सुनेको क्यै भएन। कथा सुनेपछि वैराग्य हुन्छ। भागवतको दोस्रो स्कन्धमा ब्रह्माजीले नारदलाई भन्नुभयो कथा कुन प्रकारले गर्नुपर्छ।

यी सय वर्षहरूमा देवहूतिका नौ कन्याहरू भए, तर पुत्र एउटा पनि भएन। जो नौ कन्याको पिता हुन्छ, उकहाँ कपिल आउनुहुन्छ। जसका नौ पुत्रीहरू हुन्छन्, उसलाई ज्ञान पाइन्छ। नौ कन्याको अर्थ नवधा भक्ति हो। नवधा भक्तिविना ज्ञान हुँदैन। सामान्य अर्थ गऱ्यौं भने भन्न सकिन्छ नौ कन्याको विवाह गर्दागर्दै पिताको बुद्धि ठेगान लाग्छ मैले यो के काम गरें ?

नवधा भक्ति नभएसम्म कपिल अर्थात् ज्ञान आउँदैन, श्रवण, कीर्तन, स्मरण, पादसेवन, अर्चन, वन्दन, सख्य, दास्य र आत्मनिवेदन—यी नौ अङ्ग हुन् जो नवधा भक्तिमा पर्छन्। नवधा भक्तिको सिद्धि भएपछि मात्र कपिल भगवान् आउनुहुन्छ। भक्ति ज्ञानरूपमा बद्लिन्छ। भक्तिको उत्तरावस्था ज्ञान हो। अपरोक्ष ज्ञानको पूर्वावस्था भक्ति हो। भक्तिपछि ज्ञान आउँछ। ज्ञानकी आमा भक्ति हुन्। जसको नवधा भक्ति सिद्ध हुँदैन, त्यसलाई ज्ञान आउँदैन। भक्तिद्वारा मात्र ज्ञान पाइन्छ।